प्रस्तरमा छापिएको मूत्रिकलाको प्रतिरूप यो दृश्य राजा शुद्धोधनको महलको हो, जसमा तीनजना भविश्यवक्ताहरुले भगवान बुद्धकी आमा, रानी मायाको सपनाको अर्थको व्याख्या गरिरहेच्छन् मनिपटिट मूंशी जो बसेका छन् अनि उनी व्याख्याको दस्तावेज लेखिरहेछन् । सम्भवतः भारतमा लेखन-कलाको यो सबैभन्दा पुरानी अनि चित्रांकित अभिलेख हो ।

नगार्जुनकुण्ड, दोस्त्रो शताब्दी (ईस्वी)
सौजन्य : राष्ट्रीय संग्रहालय, नई दिल्ली

# रवीन्द्रनाथ का नाटकहरु

अनुवादक
कृष्ण सिंह मोक्तान
घनश्याम नेपाल
भाईचन्द प्रधान




साहित्य अकादेमी

**Rabindranath Ka Natakaharu** : Nepali translation by K. S Moktan, Ghanshyam Nepal and Bhaichand Pradhan of Tagore's three Bengali plays: *Visarjan*, *Mukta Dhara* and *Rakta Karabi*. Sahitya Akademi, New Delhi (1993), Rs. 80.



प्रथम संस्करण : 1993

**साहित्य अकादेमी**

**प्रधान कार्यालय**
रवीन्द्र भवन, 35, फ़ीरोज़शाह मार्ग, नयाँ दिल्ली 110 001
विक्रय विभाग : 'स्वाति', मन्दिर मार्ग, नयाँ दिल्ली 110 001

**क्षेत्रीय कार्यालय**
172, मुम्बई मराठी ग्रन्थ संग्रहालय मार्ग, दादर, बम्बई 400 014
जीवनतारा बिल्डिंग, चौथो तल्ला, 23ए /44 एक्स, डायमंड हार्बर रोड, कलकत्ता 700 053
304-305, अन्ना सलाई, तेनामपेठ, मद्रास 600 018
ए. डी. ए. रंगमन्दिर, 109, जे. सी. मार्ग, बेंगलौर 560 002

**मूल्य** : अस्सी रुपियाँ

ISBN 81-7201-357-4

**टाइपसैटिंग** : राजधानी कम्प्यूट्रोनिक्स प्रा. लि., दिल्ली 110 007

**मुद्रक** : एवन ऑफसैट प्रिंटर्स, नई दिल्ली 110 002

# विषय-सूची

# प्रस्तावना

## १

संख्या अनि रुपका विविधताको दृष्टिबाट रवीन्द्रनाथका नाटककहरुको संख्या कम छैन। संख्या अनि श्रेणी-वैचित्र्यको मापदण्डको आधारमा विचार गर्दा उनलाई काव्यको पछि नाटकलाई नै स्थान दिनुपर्छ। उनका नाटक रचनाको धारावाहिक इतिहास अनुसरण गर्दा किशोर अवस्थादेखि जीवनको अन्तिम दिनसम्म पनि नाटक-रचना तथा नाटक-प्रयोजनामा उनको उत्साह विद्यमान रहेको हामी देख्छौं। रचना भन्दा पहिले प्रयोजना तथा अभिनयले स्थान पाँउछ। रवीन्द्रनाथले नाटक लेख्न शुरू गर्न भन्दा पहिले उनका एकजना अग्रज ज्योतिरिन्द्र नाथ ठाकुरले नाटक लेख्न शुरु गरेका थिए, घरैमा यी सबै नाटकहरुको अभिनय पनि चल्थ्यो। घर-बाहिर पेशादार रंगमंचमा अभिनित उनका नाटकद्वारा उनको ख्याति बढ्यो। उनीभन्दा पनि पहिले रवीन्द्रनाथका फुपाका जेठा छोरा गणेन्द्रनाथ, गुणेन्द्रनाथ जस्ता नाटक-प्रेमीले राम नारायणलाई नाटक लेखाई बड़ो प्रेमसहित घरमा ती नाटकहरुको अभिनय गराउँथे। यस प्रकार हामीहरु बालक रवीन्द्रनाथलाई नाटक-रचना तथा प्रयोजनाको वातावरणमा हुर्केको देख्छौं। साहित्यको विषयमा सचेतन यो बालक पहिले दर्शकको रुपमा, फेरि अभिनेताको रुपमा अनि अन्तमा लेखकको रुपमा नाटक तर्फ आकृष्ट भएको कुरा सहजै अनुमान गर्न सकिन्छ। हुनु पनि यस्तै भयो। केवल मात्र दर्शकको भूमिका जब शेष भयो, तब ज्योतिरिन्द्रका नाटकहरुमा एक-दुइगीत, एक-दुई सवांद जोड़नु उनले शुरु गरे। उनैका नाटक-हरुमा भूमिका ग्रहण गरेर उनी दर्शकहरुका अघि आत्मा प्रकाश गर्न थाले। "जीवन-स्मृति" ग्रथंमा यी सबै विवरणको आभास प्राप्त हुन्छ। तर यही माझ अर्थात यस्तो वातावरणका प्रेरणाद्वारा उनी कहिले नाटक रचनामा उत्सुक भए यो कुरो जान्ने कौतूहल अति स्वाभाविक कुरा हो। जीवन-स्मृतिबाट थाहा पाइन्छ कि शान्तिनिकेतनका घामले पोल्ने मैदानमा बसेर बालक कविले "पृथिवीराज-पराजय" नामक एक रौद्र रसात्मक नाटक लेखेका थिए। यो नाटक पछि उपलब्ध हुनसकेन। रवीन्द्रनाथका जीवनी-लेखक प्रभातकुमार मुखोपाध्यायको अनुमान अनुसार परवर्त्ती युगमा रचित "रुद्रचण्ड" नाटक "पृथिवीराज-पराजय" को रुपान्तर मात्र हो। यो लुप्त उदाहरणलाई छाड़े देखि "वाल्मीकि-प्रतिभा" नामक गीति-नाटकलाई उनको प्रथम नाटक-रचना प्रचेष्टा भने हुन्छ। यस अघि जुन घरेलु वातावरणका उल्लेख गरिएको छ, "वाल्मीकि प्रतिभा" सित त्यसको सम्बन्ध छ। "विद्वज्जन-समागम" नामक एक सभा बीच-बीचमा जोड़ासाँको ठाकुर-कोठीमा हुन्थ्यो। त्यही सभाको मनोरञ्जनको निम्ति यो चिरसरस गीति-नाटक रचिएको थियो। रवीन्द्रनाथ यसका प्रधान कारीगर भए तापनि बिहारीलाल, ज्योतिरिन्द्रनाथ तथा अक्षय चौधुरीका हातको काम यस रचनामा पाँउदछौं। त्यस समयमा लेखिएका अधिकांश नाटककारहरुका अधिकाशं नाटक कहिले सुकेर रस-विहीन भई बिदा लिइसकेका छन

तर बीस सालका युवक रवीन्द्रनाथद्वारा रचित यो नाटक अझ पनि अम्लान छ। जहिले यो अभिनय गरिन्छ, दर्शकहरुको अभाव हुँदैन।

मधुसूदन दत्तले प्रथम बँगला-काव्य रचना गरी आफ्ना बन्धुलाई लेखेका थिए कि बाघले रगतको स्वाद पाएको छ, अब छुटकारा कहाँ? प्रथम नाटक रचना गरेपछि रवीन्द्रनाथको अवस्था पनि प्रायः यस्तै भयो। केही वर्षभित्र उनले "रुद्रचण्ड", "काल-मृगया", "प्रकृतिर प्रतिशोध", "नलिनी एवँ मायार खेला" लेखी सिद्धयाए। रुद्रचण्डका नायक रुद्रचण्ड दस्यु हो। नागरिक सभ्यता अनि राजपद विरूद्ध उसको आन्तरिक विक्षोभ नाटकमा प्रकट भएको छ। नाटकमा दुइ अरु चरित्र पनि छन्-रूद्रचण्डकी बालिका पुत्री अमिया तथा चाँद कवि। यस नाटकलाई हामीहरुले सझंना गर्न न सके केही हानि छैन तर यी सानी बालिका अनि यी कविलाई भूले काम बिग्रेला! यी दुवै परवर्त्ती नाटकहरुमा नाना नामद्वारा अनि अन्तमा सबै नामहरुमा रुपान्तरित भई समाविष्ट हुन गएका छन।

"काल-मृगया" नाटक परवर्त्ती युगमा "वाल्मीकि प्रतिभा" सित युक्त भएको छ। मायार-खेला गीति-नाटय हो। पार्थक्या यही छ कि अघिल्लोमा त घटना-विन्यास तथा चरित्र-सृष्टिमा विशेष जोर दिइएको छ तर "मायार-खेला" मा सो चेष्टा गरिएको छैन सुरको धागोमा हृदयावेगलाई बाँध्नु नै यसको उद्देश्य रहेको छ।

रचनाको दृष्टिबाट "प्रकृतिर प्रतिशोध" अपक्व भए तापनि यसमा रवीन्द्रनाथले प्रथम पल्ट आफ्नो जीवन-तत्त्व प्रकाशित गर्ने चेष्टा गरेका छन। "प्रकृतिर प्रतिशोध" की बालिका रुद्रचण्डकी अभियाको रुपान्तर हो।

यहाँ आएपछि रवीन्द्रनाथका जीवनको नाटक-रचनामा शिक्षा प्राप्त गर्ने पर्व शेष हुन्छ। नाटकीय गति,घटना-विन्यास तथा चरित्र-परिकल्पना,सुरको नाटकीय भाव-प्रकाशका उपाय रुपमा नियोग, यहाँ सम्म कि वन-देवी अनि माया-कुमारीहरुका गमनागमनमा नाचको आभास, सबै थोक यी नाटकहरुमा प्राप्त हुन्छन्। परवर्त्ती युगका विभिन्न प्रकारका नाटकमा यी समस्त गुणहरुका विकास तथा परिणति देख्न पाइन्छ। यसकारण यस समयलाई मैले शिक्षा प्राप्त गर्ने पर्व भनेको हो।

## २

"मायार खेला" रचना गरिएको केही समय पछि प्रकाशित "राजा ओ रानी", "विसर्जन", तथा "चित्राङ्गदा" मा रवीन्द्रनाथको नाटक लेखनीले मान पूर्ण शक्ति प्राप्त गरिसकेको थियो। चित्राङ्गदाको आलोचना यथास्थानको लागि स्थगित राखी बाँकी दुइनाटक सम्बन्धमा म आफ्नो वक्तव्य वर्णन गर्दछु। "राजा ओ रानी" अनि "विसर्जन" पाँच अंकी शेक्सपियरीय ढाँचाको त्रासदी नाटक हुन। "विसर्जन" पूर्वतन उपन्यास "राजर्षि" का केही अँशको नाटक-कृतरुप हो। धरैले "विसर्जन" लाई रवीन्द्रनाथका श्रेष्ठ त्रासदी नाटक संझन्छन। तर मेरो धारणा अर्कै किसमको छ। थेर-थोर तकनिकी त्रुटि रहे तापनि विशुद्ध मानव-रसको प्राचुर्यको कारणले "राजा ओ रानी" मलाई श्रेष्ठतर लाग्छ। रवीन्द्रनाथले परवर्त्ती युगमा यथेष्ट समय वितेपछि तकनिकी त्रुटिहरु संशोधन गर्ने

उद्देश्यले "तपती" नाटक लेखेका थिए। हानीहरुले नयाँ नाटक अवश्य पायौं-तर "राजा ओ रानी" भन्दा श्रेष्ठतर पाए कि पाएनौं यसमा सन्देह छ।

यस पर्वमा कविले तीन प्रसहनहरु रचना गरेका थिए। ती मध्ये "प्रजापतिर निर्बन्ध" ले "चिर कुमार सभा" नामद्वारा परवर्त्ती युगमा जन-प्रियता अर्जन गरयो। जन-साधारणको विचारमा यो उनको श्रेष्ठ प्रहसन हो। मेरो व्यक्तिगत रुचि संकीर्ण तर गंभीर छ, यसको पात्र संख्या अल्प भए तापति सुस्पष्ट एवं सजीव छन्। यसको हसाँइले निरन्तर आँसूसित मिलेर अन्तिम दृश्यमा जुन अपरुप प्रहसन सृष्टि गर्दछ त्यहाँ हसाँइ र आँखाको पानीले हात मिलाएको छ। बहुजनका अभिनन्दन वञ्चित यो प्रहसन रवीन्द्रनाथको एक निर्दोषि सृष्टि हो।

यस पर्व अन्तर्गत रवीन्द्रनाथले एक अर्कै श्रेणीको नाटक रचना गरे-जसलाई काव्य-नाटय भन्न सकिन्छ। यी रचनाहरुमा कविको लेखनी अनि नाटककारको लेखनी एकत्र भएको छ, यद्यपि यी नाटकहरुका वैशिष्ट्य यही हो कि यहाँ कविको दायित्व सोह्र आना स्वीकृत भएर नाटककारको दायित्व हल्का बनाइएको छ। यसकारण धेरैले यसलाई नाटय-काव्य भन्न चाहन्छन्, अर्थात उनीहरुको मतानुसार यी नाटकहरुको वास्तविक स्थान काव्य क्षेत्रमा छ। यो कुरो यथार्थ ज्ञात हुँदैन-यसमा काव्यको गुण धेरै भए तापनि यसको ठाट नाटकको छ अनि नाटकीय परिणतिको अभाव पनि यी नाटकहरुमा छैन। "गान्धारीर आवेदन", "कर्ण-कुन्ती" संवाद 'नरक वास' विदाय अभिशाप प्रभृति रचनाहरुका अलिखित पचांग ट्रेजेडी को आखिरी अंकको रुपमा हेर्ने चेष्टा गरे यसका यथार्थ रुप तथा रसको आवेदन स्पष्ट हुन्छ।

"सती" तथा "मालिनी" मा नाटकको रुप अपेक्षाकृत स्पष्ट छ, यद्यपि यसको पनि प्रधान सम्पदा काव्य नै हो।

"लक्ष्मीर परीक्षा" एउटा सार्थक परीक्षा हो। "क्षणिका" काव्यमा चलती भाषाद्वारा कवि जुन काम गराउन चाहन्छन् त्यही कामलाई अझ सार्थक ढंगद्वारा उनले यस नाटकमा गराएका छन्।

३

यही समय रवीन्द्रनाथका अध्यात्म-जीवनमा एक महान-परिवर्त्तन आरम्भ भएको थियो-अनि यो स्वाभाविक थियो कि यसको छाप उनका सबै प्रकारका रचनाहरुमा परे, यहाँ सम्म कि नाटकहरुमा पनि। मानव-जीवनको ऋतु-क्रमका प्रभाव तथा प्रतिक्रिया यस पल्ट उनका नाटकहरुका उपादान भएर बसे ओ "शारदोत्सव", "राजा", "अचलायतन", "फाल्गुनी" प्रभृति नाटकहरुले जन्म प्राप्त गरे। घरका उत्सवहरुको माँग पूरा गर्न उनी नाटक लेख्थे अनि यस पल्ट यस्तो माँग शान्तिनिकेतन विद्यालयको तर्फबाट आयो। यसकारण हामी देख्छौं कि यही समयका धेरै नाटक जस्तै "शारदोत्सव", "अचलायतन", "फाल्गुनी", पात्री हीन छन्। त्यस समय शान्तिनिकेतनमा छात्रीहरु भर्ना हुँदैनथे अनि देशको वातावरण पनि मिश्र अभिनयको अनुकूल थिएन। यस अतिरिक्त त्यस बेला उनले "प्रायश्चित" तथा "डाकघर" पनि रचना गरे।

प्रायश्चित पूर्व लिखित "बौठाकुरणीर हाट" को नाटय रुप हो। धनञ्जय वैरागीको चरित्र यसको प्रधान सम्पदा हो। अहिंसा-प्रतिरोधको सन्देश लिएर उ उपस्थित भयो। गाँधीजी का आविर्भाव अघि धनञ्जय वैरागीको आभिर्भाव मानो प्रभात पूर्व प्रभात-पक्षीको आगमन थियो।

"डाकघर" रवीन्द्रनाथको सर्वोत्तम नाटक हो। नाटकको रचना धेर-थोर परिहरुको कन्थाको ढाँचामा ढालिएको छ। यसको विस्तृत आलोचना यथा समय गर्नेछु।

"राजा" नाटकलाई सिम्बोलिक नाटक भन्न सकिन्छ। "राजा" तथा "अचलायतन" मा भारतीय साधनाका दुइ प्रधान तत्त्वहरुको योग छ। दास्य, साख्य तथा मधुर-रस को साधनामा मधुर रसको साधना सबैभन्दा कठिन छ-यसका निर्देश हुन् सुरंगमा, ठाकुरदा तथा सुदर्शना को चरित्रमा, विशेष गरी सुदर्शनाको मानसिक द्वन्द्वमा। "अचलायतन" मा ज्ञान मार्ग, कर्म-मार्ग तथा भक्ति-मार्गको चित्र प्रदर्शित गरिएको छ-यो भनिएको छ यसको समन्वय नै जीवनको यथार्थ सिद्धि हो। "फाल्गुनी" नाटकमा कविले देखाएका छन-कि विश्व-प्रकृतिमा जुन लीला चलिरहेको छ त्यही लीला रुपान्तरित भई मानव-प्रकृतिमा पनि प्रसारित भइरहेछ। वसन्त र यौवन नै सत्य हो, शीतकाल र जरा (वृद्धावस्था) दृष्टिको भ्रम मात्र हो। शारदोत्सवमा कविको वक्तव्य हुन्छ कि यो जुन जगत अनन्त सौन्दर्य तथा सुधाद्वारा मानवलाई ऋणि बनाएर बसेको छ-मानव त्यस ऋणको प्रतिशोध दु:खलाई प्राप्त गरेर मात्र गर्न सक्तछ। दु:खको सम्पतिले सौन्दर्यको ऋण-तिर्न सके मात्र आनन्द-लाभ हुन सक्छ।

यसका उपरान्त "मुक्तधारा" तथा "रक्तकरवी" कविका उल्लेख योग्य नाटक हुन। "शारदोत्सव" देखि लिएर "फाल्गुनी" सम्म नाटकको विषय हुन्छ मानवसित ईश्वरको सम्बन्ध औ मानवसित प्रकृतिको सम्बन्ध। "मुक्तधारा" अनि "रक्तकरबी" मा जुन व्यक्तिहरु देखिन्छन् ती सबै सामाजिक व्यक्तिहरु हुन्। यहाँ व्यक्तिसित सामाजिक व्यवस्थाको संघर्ष छ। अभिजित अनि रंजन ती व्यक्तिका प्रतिनिधि हुन जसका क्रमशः रुद्ध-धारा तथा यन्त्र-दानवसित द्वन्द्व छेड़िएको छ। कविको वक्तव्य हुन्छ कि यन्त्रको सहायताद्वारा यन्त्रलाई पराभूत गरे यन्त्रकै जय घोषित हुँदछ। आफ्नो प्राण द्वारा यन्त्रलाई चोट पुरयाउनुपर्छ-यसले शुरुमा प्राण हानि भए तापनि अन्तमा यन्त्रको प्रभाव दुर्बल हुँदछ। अभिजित मर्छ तर "मुक्तधारा" को बाँध पनि भत्कन्छ। रंजन पान मर्छ तर यन्त्र-नगरीको जग पनि हल्लन्छ। यी दुइ नाटकमा कविले एउटा आधुनिक जटिल समस्या माथि विचार गेरका छन्।

## ४

"नटीर-पूजा" नाटक १८२६मा प्रकाशित भयो। कथाको पात्र एक जना बौद्ध जातक छ। नाटकको शिल्प-मूल्य खूबै उच्चकोटिको छ-तर यस नाटकको देन अर्कै पनि छ। मेरो यस्तो विश्वास छ कि "नटीर-पूजा" नृत्यमा परवर्त्ती युगमा लिखित नृत्य-नाटयहरूका धारण बीजाकारमा निहित छ। यस धारणाले अनुकूल क्षेत्र तथा दृष्टान्त को समर्थन कविको जाभा द्वीप भ्रमण कालमा दृष्ट नृत्य-नाटय-कलाबट प्राप्त गरे। नृत्य-नाटयको

धारणा कविको मस्तिष्कमा थियो-केवल सजीव नृत्यका नाटय-कलाको उदाहरण अभाव थियो। जाभा द्वीपले यो उदाहणलाई ल्याएर उपस्थित गरया। रवीन्द्रनाथका जीवनको अन्तिम दिनहरुका सार्थकतम नाटक-रचनाको धारा नृत्य-नाटयको यही जल-प्रवाह-पथमा प्रवाहित भएको छ। "चित्रांगदा", "चण्डालिका", "श्यामा" तथा "तासेर देश" नृत्य-नाटय रवीन्द्र-नाट्य-प्रतिभाको अन्तिम तथ सार्थकतम सृष्टि हो। नाटय-प्रतिभा शब्दमा सायद यो नयाँ शिल्प-कलाका सर्वागँण रुप प्रकाशित हुन सकेन। किन कि यसमा आएर सम्मिलित भएको छ काव्य, स्वर, नाट्य तथा नृत्यका चतुरंग प्रवाह। आशा छ, यो भन्नु अत्युक्ति हुने छैन कि यी नृत्य-नाटकहरुमा रवीन्द्र शिल्प-कलाका तथा रवीन्द्रको बहुमुखी प्रतिभा प्रकाश भएको छ।

५

यथा संभव संक्षेपमा रवीन्द्र-नाटय-प्रवाहको एक परिचय प्रस्तुत गरिएको छ। अब फल-उपलब्धीको सम्बन्धमा पनि प्रांसगिक मन्तव्य संक्षेपमा पूरा गरौं।

रवीन्द्रनाथका नाटकहरु समयसमयमा पेशादार रंगमंचमा खेलिएका छन्। कुनै कुनै नाटकले जस्तै "चिरकुमार सभा" अनि "शेष रक्षा" ले सामयिक रुपमा लोक-प्रियता पनि प्राप्त गरयो। तथापि यो भन्नै पर्छ कि पेशादार रंगमंचमा गति-प्रकृतिसित रवीन्द्र-नाट्य-प्रवाहको कहिल्यै मेल हुन सकेन। किन? सादय दर्शक त्यस स्तरमा पुग्न सकेनन्। फेरि पेशादार रंगमंचका जो नाटक प्रसिद्ध हुन्छ त्यसको सृष्टि पेशादार अभिनेता तथा रंगमंचको समुद्रमन्थनमा हुन्छ अर्थात सो सबै बस्तु एक प्रकारले सम्पूर्ण शिल्पको सृष्टि हुन्छ। रवीन्द्रनाथका नाटकको जन्म निभृतमा भयो नत्र पारिवारिक परिवेशमा-यो उनको प्रचेष्टाको सृष्टि हो। यसकारण यसको वास्तविक सम्पदा काव्य-रस हो।

धेरै समालोचक यसता हुन्छन्-जो नाटकका साहित्यिक मूल्यलाई नितान्त गौण सझंछन्, उनीहरुको मत अनुसार नाटकको एक मात्र उद्देश्य दर्शकहरुलाई आनन्द दिनु हो। यो मत म ग्रहण गर्न सक्तिन। नाटक मुख्यतया साहित्य हो अनि यही रुपमा यसको समालोचना हुनुपर्छ।

यस दृष्टिबाट विचार गर्दा हामी देख्दछौं कि रवीन्द्रनाथका नाटकको मूल्य असीम छ। रवीन्द्रनाथ भन्दा अधि पनि गीति-नाटयहरुको रचना भए तथापि उनको प्रारम्भिक युगमा लिखित "वाल्मीकि प्रतिभा" अनि "मायार खेला" अहिलेसम्म पनि मूल्यवान छ, मनोरंजनको क्षेत्रमा पनि केही मात्रामा रस घटेको छैन।

"राजा ओ रानी" अनि "विसर्जन" बंगला-साहित्यका श्रेष्ठ त्रासदी नाटक हुन। बंगला नाट्य साहित्यमा प्रहसनको संख्या पनि कम छैन। "चिर कुमार सभा" जस्तो मार्जित, सूक्ष्म, सर्व-जन-उपभोग्य प्रहसन अर्को दोस्रो छैन- यसको प्रतिष्ठा जतिको व्यापक छ, उतिकै यसको ग्रहणीयता सहज छ।

उनले रचना गरेका काव्य-नाटक जस्तैः 'चित्रगंदा', 'गान्धारीर आवेदन', 'कर्ण-कुन्ती संवाद', 'नरकवास' प्रभृति रवीन्द्र साहित्यको श्रेष्ठ सम्पति हो। यस क्षेत्रमा उनका कोई प्रतिद्वन्द्वी छैन।

शारदोत्सव फाल्गुनी प्रभृति ऋतु-नाट्य-क्रममा 'डाकघर', 'राजा', 'मुक्तधारा', 'रक्त करबी' प्रभृति सिम्बोलिक नाट्य-क्रममा उनले नयाँ धारा सृष्टि गरे, केवल बंगला साहित्यमा मात्र होइन, सम्भवत भारतीय साहित्यमा पनि।

अनि जीवनको अन्तिम अवस्थामा लिखित नृत्य-नाटक उनको आफ्नो मौलिक सृष्टि हो यस क्षेत्रमा एउटा नयाँ पथ देखाएर गए।

काव्य र कहानी अतिरिक्त नाट्य रसमा रवीन्द्र प्रतिभाको सुन्दर प्रकाश प्राप्त हुंदछ, अनि नाटकका श्रेणी-वैचित्र्य तम्था नयाँ धारा-सृष्टिमा उनको बहुमुखी प्रतिमाको परिचय पाइन्छ।

– प्रथमनाथ विशी

# प्रथम अंक
## पहिलो दृश्य
### मन्दिर

[गुणवतीको प्रवेश ]

गुणवती : माताप्रति किन हो कुन अपराध मबाट हुन गयो ! भिक्षुक जसले पेटको जलन सहन नसकी आफ्नै पेटका सन्तान बेच्द छ, उसलाई पनि शिशु दिन्छौ, पापीनी जसले लोक-लाजद्वारा हत्या गर्दछ आफ्नै कोखको नानीलाई, कोही असहाय जीव उसको गर्भमा माता, तिमी नै पठाउँदछौ, तर हाय हाय, यहाँ सय सय दास-दासीहरु, प्रजा-सेनाहरु संग रानी भएर पनि लालसा लिएर बसिरहेछु कि एक पल्ट यो छातीमा एउटा शिशु सन्तानलाई टसाँउन सकूं। बसिरहेछु कि एक अर्को प्राणाधिक प्राणको अनुभव पाउन सकुं म आफ्नै प्राणमा। बसिरहेछु कि यस छाती, यी दुइ बाहुद्वारा यो काख, यही दृष्टिद्वारा रचना गरूं सुन्दर जीउँदो एउटा गुँड,जहाँ स्पन्दन होस् मेरो प्राण-वणिका सर्वदा।

देख्ने छ मलाई दुइ आँखाले उज्यालोमा, फुटने छ मेरै काखमा प्रथम मुस्कान त्यो शब्दहीन मुखमा अकारण आनन्दले। कुमार-जननी माता, मलाई कुन पापले गर्दा वंचित गरयौ मात्रृ-स्वर्गबाट ?

[रघुपतिको प्रवेश]

हे प्रभो !

पूजन म माताको गर्दछु चिरकालदेखि जानी-बुझी कुनै अपराध पनि गरिन, पुण्य देह मेरा पति शिव समान छन-फेरी पनि कुन दोषले बनाइ महामायाले निःसन्तान श्मशान चारिणी, बताउनुहोस्।

रघुपति : कसले बुझनसक्छ माताको क्रीड़ा उनी इच्छामयी पुत्री पाषाणकी, कि दुःख-सुख उनका इच्छा मात्र। धैर्य गर, पूजा यसपल्टको तिम्रो नाममा हुनेछ। श्यामाको प्रसन्नता देवी, यसपल्ट तिमी पाउनेछौ अवश्य नैं।

गुणवती : पूजाको नाम्त बलि-पशु यस वर्ष म दिनेछु स्वयं। भाकल राख्ने छु माता मलाई यदि सन्तान दियौभने म पनि प्रतिवर्ष नै एक सय भैंसी, पाठा पनि तीन सय श्रद्धा सहित तिमीलाई भेट चढ़ाउनेछु।

रघुपति : पूजाको समय भइसक्यो है देवी, अब त !

[दुवैको प्रस्थान]

[गोविन्द माणिक्य, अपर्णा अनि जयसिंहको प्रवेश]

जय सिंह : आज्ञा महाराज ?

गोविन्द : एउटा सानो पाठा छ, दुःखी यो बालिकाको स्नेहको पुतला सुने कि उसबाट खोसेर ल्याएको हो माताको समीप बलि दिनुको निम्ति। तर जननी के यस दान ग्रहण गर्ने छन भएर प्रसन्न भुजा दाहिने सित आफ्नै ?

जय सिंह : कसरी जान्ने महाराज, राज-चाकर ल्याउँछन पूजा देवीको गर्न कहाँबाट बलि-पशुको हजुर, तिमी रुँदछौ किन ? स्वयं विश्व-माताले ग्रहण गरेकी छन जसलाई, उसको निम्ति पनि के रुनु यस प्रकारले सुहाउँछ र।

अपर्णा : को हो तिम्री विश्व-माता ? मेरा शिशु के चिन्न सक्छिन् तिनले कि त्यो मातृहीन छ, आफ्नै आमालाई पनि त्यसले चिन्न सकेन। म विलम्बले आए घाँस त्यसले खाँदैन, बाटो हेरेर-हेरेर रहन्छ बोलाउँछ-आएर म उसलाई उठाँउदछु आफ्नै काखमा भीख पाएको अन्न हामी दुवै बाँड़ेर खान्छौ। साँचो भनौं, एक मात्र माता उसको हुँ म।

जय सिंह : महाराज भागदिएर प्राणको पनि आफ्नो रक्षा गर्नसक्थें यदि उसको, निश्चय गर्थे। आमाले उसलाई ग्रहण गरिन तर अब त हाय, उसलाई कुनै कारणले पनि फर्काउन सकिन्न।

अपर्णा : आमाले उसलाई ग्रहण गरिन ? झुठो हो, सायद राक्षसी कुनैले उसलाई चबाएकी छ।

जयसिंह : यसतो कुरा छाः छीः मुखबाट नलिकाल।

अपर्णा : आमा, तिमीले छिनेकी छौ गरीबनीको धन ? राजाले यदि चोरी गर्छ भने, सुनेको छु मैले, राजा एक अर्के जगतका हुन, तर जो चोरी तिमीनै गर्छौ भने, बताऊ त्यसको गर्नेछ विचार कसले ? महाराज, बताउनुहोस।

गोविन्द : छोरी, म आवाक छु-वेदना किन यस्तो, यतिका किन रक्तपात कसले बताउनेछ ?

अपर्णा : सिढ़िहरूबाट बगेर रक्त आँउछ-चिह्न जसले देख्नछ यो, के उसैको रगत तीखो छ ? छोरा मेरो, हाय-हाय, मलाई पुकारेर रोयो होला तर तँ, व्याकूल नयनले हेरयो होला चारै तिर कातर हृदयले, मेरो प्राण थियो जहाँ, वहाँबाट हाय, भागेर आएन किन यहाँ समय हुँदा हुँदै ?

जयसिंह : पूजिरहेछु जन्मदेखि तिमीलाईनै फेरि पनि।

[देवीको प्रतिमासित ]

मायालाई बुझ्न सकिनं अहिले सम्म मैले। प्राण करुणाले रोएका मानवको विश्व-जननीका हृदय पग्ल्दैन।

अपर्णा : (जयसिंह सित)निष्ठुर होइनौ तिमी, नयनका किनारबाट मेरा दुःख देखेर आँसू झरेर आइरहेछ। आऊ, तिमी तब यस मन्दिरलाई छाडी गरिदेउ क्षमा मलाई, किन कि मैले मानेको थिएं अपराधी तिमीलाई पनि, यद्यपि थिएनौ तिमी।

जयसिंह : (प्रतिमासित) हे गिरीशनन्दिनी! तिम्रो देवालयमा गुंजियो यो नवीन संगीत कुन, कसतो छ, करुणाले कातर भएको कंठस्वरमा, अपरुप वेदनाले भक्तहरुका हृदय पनि भई उठेको छ व्याकुल झैं। जाँउ कहाँ शोभने। छाड़ यस मन्दिरलाई आश्रय पनि छ कहाँ?

गोविन्द : (अलग्गै) आश्रय वहाँनै छ, जहाँ प्रेमको निवास छ।

जयसिंह : तर प्रेम छ कहाँ, त्यही त छ अदृश्य। भद्रे, तिमी आऊ, हिंड़ मेरै झोपड़ीमा। मैले प्रतिज्ञा गरेको छु कि आफ्नो अतिथिको पूजा म गर्नेछु आजको दिन देवी-रुपमा।

[जयसिंह र अपर्णाको प्रस्थान]

## दोस्रो दृश्य

### राज-सभा

[राजा, रघुपति अनि नक्षत्ररायको प्रवेश]

[सभासदगण उठेर स्वागत गर्छन्]

सबै : जय महाराजको होस्!

रघुपति : राज-भण्डारमा आएको छु पूजाको निम्ति बलि-पशु लिनलाई।

गोविन्द : मन्दिरमा यही वर्षदेखि नै पशु-बलि भएको छ निषिद्ध।

नयनराय : निषेध पशु-बलिको?

मन्त्री : बलिको निषेध!

नक्षत्रराय : साँचो हो, पशु-बलिको?

रघुपति : सपनामा नै म के यो कुरा सुनिरहेछु!

गोविन्द : सपना यो होइन प्रभु, आज सम्म सपनामा थिएँ म, आज जागेको छु कि बालिकाको रुपमा जननीले आएर स्वयंले भनिन् मलाई, जीव-रक्तपात उनी सक्तिनन् सहन अब।

रघुपति : यतिका दिनसम्म तर कसरी सहन सकेकी थिइन्? वर्षौं देखि सहस्त्र, रगत पिएर आएकी थिइन्, जो, आज सहसा नै उसलाई यो अरुचि किन?

गोविन्द : उनले तर थिएनन् कहिल्यै पिएका। रक्तपात गर्दथ्यौ तिमी जब जब

देवी त सदैव आफ्नो मुख घुमाउँदथी।

रघुपति : भनिरहनुभएको छ के महाराज, तपाईं यसलाई एक पल्ट राम्ररी विचार गर्नोस् जाँच्नुहोस्। शास्त्रको विधान त छैन अधीन तपाईंको।

गोविन्द : तर ठूलो छ देवीको आदेश सारा शास्त्र भन्दा।

रघुपति : एक त छ भ्रान्ति, त्यस माथि अहंकार छ। मूर्ख मानव, देवीको आदेश सुन्यौ तिमीले अनि जस्तो मैले छैन सुनेको केही पनि।

नक्षत्रराय : त्यही त हो, त्यही हो मन्त्री, तिमी के भन्दछौ? कस्तो आश्चर्य, पुरोहितले सुन्न सकेनन्।

गोविन्द : देवीको आदेश चिरकालदेखि ध्वनित छ जगतमा। उही हो महाबधिर कि जो सो सुनेर पनि सुन्न सक्तैनन।

रघुपति : राजा, तिमी नास्तिक हौ, ढोंगी ठूलो हौ।

गोविन्द : हुँदैछ समय नष्ट त्यसै पुरोहितजी। अब तपाईं मन्दिरको कामकाज हेर्नुहोस् जीव-जननीको पूजा गर्ने छलद्वारा जीव-हत्या गर्छ जसले मेरो यो राज्यमा दण्ड दिन्छु म उसलाई कठोर निर्वासनको।

रघुपति : निर्णय यही के साँचो, अन्तिम तिम्रो हो?

गोविन्द : निश्चय यही हो।

रघुपति : तब तिम्रो सर्वनाश होस्।

चाँदपाल : (दौड़ँदै आएर) हो हो, रोक रोक।

गोविन्द : आऊ चाँदपाल। बस त।भन पुरोहित, जो भन्नु छ तिम्रो। मनोव्यथा कम भए जाऊ काम-काजतिर।

रघुपति : संझिरहेका छौ के तिमी त्रिपुरेश्वरी प्रजा नै त्रिपुराका, के उ माथि पनि तिमीनै शासन गर्नेछौ? चुँढ़ाई लाने छौ बलि उनका? नभूल राजा, शक्ति तिमीमा उसतो छैन सेवक म माताको अझै विद्यमान छु।

[प्रस्थान]

नयनराय : महाराज क्षमा गर्नोस्सर्पधा अनुगतको कुन अधिकारले प्रभो, यही बलिदानलाई।

चाँदपाल : शान्त हौ, सेनापति!

मन्त्री : महाराज, तपाईंले निश्चय गर्नुभएको छ यही, आज्ञा फर्कने छैन?

गोविन्द : होइन मन्त्रीवर! न विलम्ब क्षण-भरको उचित छ यहाँ नाश गर्नमा पापलाई।

मन्त्री : पापको पनि के हुन्छ यति परमायु छ शत शत वर्षदेखि पुरानो परिपाटी जो पल देवताका चरणमा भएकी छ बूढ़ी उसलाई पनि पाप कहलाउने अवसर छ?

नक्षत्रराय : त्यही त, भला के पाप हुनसक्छ त्यो पनि ?
मन्त्री : पूर्वज हाम्रा जुनरीति सनातनको पालन गर्दै आएकाछन्-भक्तिसहित अनि अनुराग सहित अपमान उसको, उसैको अपमान हो।

[राजा सोच्दछन्]

नयनराय : सोचेर हेरौं महाराज युगयुगदेखि भक्तिले भरिएको सम्मति प्राप्त छ जुन बलिको जनको सहस्रौं न त्यसलाई नष्ट गर्ने के अधिकार तपाईं को छ ?
गोविन्द : (लाभो सास फेरेर) तर्क रहन देऊ।जाऊ मन्त्री, गएर प्रचार गर आज्ञामन्दिरमा आजदेखि नै पशु-बलि बन्द छ।

[प्रस्थान]

मन्त्री : यो के भयो ?
नक्षत्रराय : हे मन्त्री। म पनि यसै भन्दछु भयो के यो। सुनेको छु मैले कि ठगहरुको मन्दिरमा हुँदैन बलि, तर अब त ठग र हिन्दुमा रहेन भेद केही पनि। भन चाँदपाल, भला तिमी भन्दछौ के ?
चाँदपाल : भीरु हूँ म क्षुद्र प्राणी, बुद्धि छैन उसतो न बुझी आज्ञा पालन गर्छु नरेशको।

## तेस्रो दृश्य

### मन्दिर

जयसिंह : माता। यहाँ हामी दुइमात्र
-तिमी र म
लामो यस दिन कोही अरु आएन
यस्तो लाग्दछ, मानो बीच बीचमा मलाई
कसैले बोलाइरहेछ ! माताको समीप रहेर
लाग्दछ एकलो छु म आफैं आफैंलाई।

(नेपथ्यमा गीत)

गीत-१

म हिंड़दछु एकली यस जगमा
दिनेछ पथको सन्धान कसले ?

जयसिंह : माता ! तिम्रो माया यो कसतो अनौठो छ, मानवलाई प्राण दिने देवताको प्राण हो। निश्चल थियौ अहिले, अहिले तिम वाकहीन

थियौ अनि अहिले कण्ठ-स्वर सुनी सन्तानको भई उठयौ सजग जीवन्त जस्तो जननी।

[गीत गाउँदै अपर्णाको प्रवेश]

गीत-२

म हिंड़दछु एकली यस जगमा
दिनेछ पथको सन्धान कसले ?
भय छैन, न मलाई भय छ
हिंड़िरहनेछु निश्चय छ,
जो सुमुख समन सौरभमय छ,
यो भ्रमर एक्लै नै उनी तक
उड़िहिंड़ने अनजान को हो ?

जयसिंह : उ के एकली नै छ ? दक्षिणी पवन जो बहेकै छैन अनि फेरि सौरभ सुमनको आएको छैन कतैबाट, दिशाहरु देश जागे जो शंका जस्तो दश, तब रहनेछ सुख कहाँ, पथ हुनेछ कसतो बताउ त जान्दछौ भन्दछ एकलो कसलाई ?

अपर्णा : जान्दछु। जब गह्रौं हृदय लिएर बस्दछु दिनु चाहन्छु, छैन लिनेवाला कोही पनि।

जयसिंह : देवता एकलो जसतो सृजना पहिले ठीक छ, ठीक हुन्छ यसतै प्रतीत, मानो यो जीवन बहुत अधिक हो जति ठूलो छ यो, उतिनै शून्य पनि अनि उति नै छ अनर्थक पनि, व्यर्थ पनि।

अपर्णा : जयसिंह, जस्तो लाग्छ मलाई तिमी एकलै छौ, देखेको छु यसैले मैले, जो दरिद्र जान छ, तिमी उ भन्दा पनि दरिद्र, खोज्दै उसलाई जो तिम्रा सबैकुछ लिएर निःस्व गर्ने। भड़कि रहेछौ दुःखीका द्वार द्वार तिमी। यतिका दिनदेखि घुमिहिंड़छु भीख माँग्दै, मानो कतिलाई देख्दछु, सोच्छु, छु म कतिका मुख-उनीहरु सम्झन्छन यही, एक मात्र भिक्षाको निम्तिनै, अनि यसलाई टाड़ैबाट नै मुट्ठि-भिक्षा दिंदछन-दया गरी। यत्तिका दया तर पाउन सकिनं कहि पनि, पाएर जसलाई न दीनता याद आटवोस, आफ्नो।

जयसिंह : साँचो जो छ दाता उ दान रुपमा स्वयं आउदछ उत्रेर दरिद्रको नजिक।
जसरी मेघ आँउदछ उत्रेर गगनबाट
हाहाकारी मरुभूमिमा दृष्टिको रुपलिएर।
मानवीको रुप लिएर देवी उत्रन्छे
प्यार गर्छिन् उसलाई, आफ्ना नजिकको।

दाता अनि दरिद्र जस्तो मनुष्य अनि देवता
हुँदछ एकाकार। उ हेर, गुरुदेव पनि आइ रहेछन् मेरा।

अपर्णा : लुकौं अन्तरालमा।
ब्राह्मणदेखि मलाई डर लाग्छ अति नै।
कस्तो छ कठिन तीव्र दृष्टि, भला कस्तो छ
कठिन कि जस्तो देवी-मन्दिरका सिंडीहरु
प्रस्तर-निर्मित हुन।

जयसिंह : कठिन? हो, कठिन छ,
स्रष्टा जस्तो, तर छ यही कठिनता
आश्रय अटल एक यस चराचरका।

[रघुपतिको प्रवेश। जयसिंह पाउ धुनको निम्ति जल आदि अधि बढ़ाउँदछ।]

जयसिंह : गुरुदेव।
रघुपति : जाऊ, जाऊ।
जयसिंह : जल यहाँ ल्याएको छु।
रघुपति : रहन देउ जल।
जयसिंह : बस्त्र?
रघुपति : कसलाई चाहिन्छ त्यो?
जयसिंह : गरिएको छ मबाट कुनै अपराध?
रघुपति : फेरि त्यही कुरा! अपराधी कसले भन्छ? घेरेर आएको छ घोर कलिकाल जगतमा। राहु झैं बाहुबल ब्रह्मतेजलाई चाहँदछ ग्रास गर्न! सम्मुख यज्ञ-वेदीको सिंहासन आज आफैं शिव उठाउँदैछ। हाय, असहाय कलिकालका हे देवता! तिमी पनि सहन गर्दछौ राज-आज्ञा-लाई शिर झुकाई, लठुवा सभासद झैं? चतुर्भुज! हाय, तिमीले पनि जोड़ी राखे छौ चारैबटा हस्त! दैत्यहरुले फेरि के छिनेर लगेको छ स्वर्गलाई? के देवता लुकेका छन् रसातलमा? आज यही दानव अनि मानव मिलेर विश्व-राज्य भोग गर्दस्वन् अति दर्पसित? देवता छैनन् भने पनि ब्राह्मण अझै छंदैछ, ब्राह्मणको रोष-यज्ञमा नै हवि-काष्ट झैं आज जलेर भस्म हुनेछ सिंहासनको दण्ड पनि।

[जयसिंहको नजिक आएर]

नानी! मैले रुखो व्यवहार गारें तिमीसित आज, तर मेरा चित्त बड़ो क्षुब्ध छ।

जयसिंह : के भएको छ प्रभु?
रघुपति : के भएको छ, बताँउ के? त्रिपुर-अधीश्वरीका घोर अपमानको बात भानौं कसरी यस मुखले बताऊ त!

जयसिंह : कसले गरेको छ अपमान ?

रघुपति : स्वयं राजाले।

जयसिंह : राजाले गरेका छन् भला अपमान कसको ?

रघुपति : कसको ? तिम्रो न मेरो, शास्त्रको न देश-कालको अनि सर्व-देश-कालकी जो अधिष्ठात्री महाकाली सबैको गरेका छन् आज राजाले अपमान, तुच्छ सिहांसमा बसेर। आमाको पूजा-बलि रोकिदिएका छन् अति स्पर्धासित।

जयसिंह : गोविन्द माणिक्यले ?

रघुपति : हो, तिम्रो राजाले। उही जो तिम्रो सर्वश्रेष्ट अधीश्वर हो प्राणीहरुका ! कृतघ्न। तिमीलाई पार्ले बालकककालदेखि, कति यत्न, कति गहीरो स्नेहले औ आज मभन्दा पनि प्यारा भए तिमीलाई गोविन्दमाणिक्य नै ?

जयसिंह : पिताका काखमा बसी मुग्ध साना शिशु छ बढ़िरहेको नभमा पूर्णचन्द्र लिनलाई। पिता हौ देव, मेर तिमी नभ शशि महाराज गोविन्द मणिक्य हुन् । तर चुनौती दिंदछु ? यो कसरी म ! सुनिरहेछु के ? गरेका छन् निषेध राजाले आमाको बलि-पूजा ? निर्देश को मात्रे ?

रघुपति : मान्दैन जो, हुनेछ निर्वासित देशबाट।

जयसिंह : पूजा जुन राज्यमा हुने छैन आमाको निर्वासन वहाँ दण्ड होइन। प्राण रहुन्जयाल पूजा माताको न अधुरो रहन सक्नेछ।

## चौथो दृश्य

### अंतःपुर

[गुणवती अनि परिचारिका]

गुणवती : भनिरहिछौ के तिमी ? देवी मन्दिरको द्वारदेखि फर्काइ पठएको छ बलि-पूजा आज रानीको ? मस्तक छ कत्ति शरीरमा उसको ? को हो त्यो दूरदर्शी, मलाई बताऊ।

परिचारिका : साहस आउँदैन मलाई सो बताउन।

गुणवती : तिमीमा बाताउने साहस छैन ? यो पनि भन्यौ कुन साहसले, बताऊ भला ? मभन्दा पनि ठूलो तिमीलाई डर अर्को कसको छ ?

परिचारिका : क्षमा गर्नोस् महारानी !

गुणवती : रानी हिजोसम्म म थिए किनकि हिजो सन्ध्याकालमा वन्दीजनले स्तव-गीत गाए, दिएका थिए विप्रगणले आर्शीवाद, लिएर गएका थिए भृत्यले हात जोड़ी मबाट आदेश, एक रातमा नै तर किन परिवर्त्तन भयो यो नियम ? न कि देवीले पूजा पाइन् खण्डित पनि

भएको छ महिमा रानी को ? तर के त्रिपूरा एउटा सपना-राज्य थियो ? ब्राह्मण-पुरोहितलाई शीघ्र बोलाऊ त।

[गोविन्द माणिक्यको प्रवेश]

गुणवती : सुन्यौ महाराज। आमाको मन्दिरका द्वारबाट फर्काइएको छ पूजा-पशु बलिको।

गोविन्द : जान्दछु रानी।

गुणवती : जान्दछौ तिमी? फेरि पनि रोकेनौ तिमीले? तिम्रो जानकारीमा राजमहिषीको यसतो अपमान भयो?

गोविन्द : प्रिये! उसलाई क्षमा गर। मूर्त्ति हौ दयाको तिमी।

गुणवती : तर महाराज! यो केवल दया होइन यो हो कायरता। हौ दुर्बल दयाले तिमी दण्ड दिन सक्तैनौ त म दण्ड दिन्छु आफैं। बताऊ मलाई त्यो कुन अपराधी हो?

गोविन्द : अपराधी म नै हुँ देवी! तर यति नै हो अपराध, मैले तिमीलाई व्यथा दिएको हुँ।

गुणवती : महाराज, तिमी यो कस्तो कुरा गर्दैछौ?

गोविन्द : देवताको नाममा रक्तपात जीवहरुका आजदेखि हाम्रो यस राज्यमा निषिद्ध छ।

गुणवती : कसले निषिद्ध गऱ्यो?

गोविन्द : जननीले आफैं।

गुणवती : कसले सुन्यो निषेध?

गोविन्द : मैले।

गुणवती : भला तिमीले? सुनी यो कुरा हाँसो थाम्दा पनि थामिंदैन। महाराज! राजेश्वरी आइन-राज-द्वारमा आफ्नो सुनाउन आवेदन!

गोविन्द : हाँसो होइन। जननीले आएर स्वयं नै सन्तानको मनमा प्रवेश गरी प्रकट गरी वेदना हृदयको। यो त आवेदन होइन राजमहिषी!

गुणवती : कुरो यो रहन देऊ, बाहिर मन्दिरको राज्य हो तिम्रो। नदेऊ आज्ञा वहाँ, जहाँ आज्ञा चल्दैन तिम्रो महाराज!

गोविन्द : रानी यो होइन मेरो आज्ञा जननी को हो।

गुणवती : कसरी जान्यौ तिमीले?

गोविन्द : मलीन दीपको उज्यालोमा अन्धकार रहन्छ नै गृह-कोणमा, गर्नु सक्छ दीप सबै, आफ्नो छायालाई तर उसले मेटाउन सक्तैन। मानवको बुद्धि पनि छ दीपका समान नै, जति प्रकाश गर्दछ दान, उति नै

संशयको छाया उसले पछि छाड़दछ। स्वर्गबाट उत्रन्छ ज्ञान जब, पलमा। एक साथ संशय दूर हुंदछ। संशय छैन केही अब मेरो मनमा।

गुणवती : सुनेकी छु, पाप-पुण्य रहन्छ आफ्नो साथमा नै। बस तिमी लिएर सुखसित आफ्नो उस संशयलाई-कि मेरो बाटो, छोड़िदेऊ, आफ्नो पूजाको बलि लिएर अब जाँउ म आफ्नी आमाको समीप।

गोविन्द : देवी जननीको म आज्ञा कसै गरे पनि टार्न सक्दिन कहिल्यै।

गुणवती : म पनि टार्न सक्तिन कुरा आफ्नो। आमालाई दिइसकेको छु वचन, उसरी नै पूजा गर्ने छु उसको म शास्त्रविधिसित। जाऊ, तिमी जाऊ

गोविन्द : जस्तो आज्ञा महारानीको।

[प्रस्थान]

[रघुपतिको प्रवेश]

गुणवती : मेरो पूजा फर्काइएको छ पुरोहितज्यू, मन्दिरको द्वारबाट।

रघुपति : जो फर्केर आएको पूजा छ महारानी त्यो तिम्रो होइन। उच्च वृत्तिले पूजा गर्दछ जो दरिद्र भीख माँगेर नीच त्यो होइन, राजेन्द्राणी, तब पूजा। तर सर्वनाश त यही हो सबैभन्दा ठूलो, माताको पूजा फर्काइयो। अनि सर्वनाश हो यो पनि ठूलो कि राजदर्प क्रमै सितले तीखो भएर चाहँदछ अतिक्रमण गर्न धाराको राजत्व-सीमा, देवताका द्वार रोकेर बसेका छन् तिनी, आँखा राता पारेर माताका भक्तहरुलाई कठोर भएर हेर्छन्।

गुणवती : हुनेछ के पुरोहितज्यू।

रघुपति : जान्दछिन् महामायाले मात्र। यति नै जान्दछिन् सिंहासनको छाया जो माताका द्वारमा रहकोछ, फुटने छ पानीको फींज झैं एक झटकामा नै दम्भ-मचं उनको। राजा-पिता-पितामहहरुले युंगौदेखि मिली उच्च उठाएका थिए राजमहिमा, अभ्र-भेदी गर्‍यो जसले, त्यो एक पलमा हुनेछ धुलिसात, बज्रदीर्ण झंझाहत पनि अनि दग्धशेष, टुक्रा टुक्रा हुनेछ, हेर।

गुणवती : रक्षा गर, रक्षा गर प्रभु!

रघुपति : हा हा ! म गरौं रक्षा के तिम्रो भला। स्वर्ग अनि मर्त्यमा जो प्रवल राजा आफै शासन चलाँउछन तिमी रानी उनैकी। जो देव-ब्राह्मणलाई पनि..धिक्कार शतबार धिक्कार। धिक्कार लक्षबार छ। धिक्कार कलि ब्राह्मणलाई। कहाँ ब्रह्मश्राप छ। व्यर्थ ब्रह्मतेज बस आफ्नै फिलालाई आहत-वृश्चिाक झैं आफैलाई डस्दछ। मिन्थ्या ब्रह्म-आड़-

म्बर।

[जनै चुड़ाँउने चेष्टा गर्छन्]

गुणवती : अँह, अँह, के गर्नु हुँदैछ। देव गरुन रक्षा, दया गर्नुहोस् निर्दोसप्रति।

रघुपति : ब्राह्मणको अधिकार तिमी फेरि फकाईदेऊ।

गुणवती : फकाईदिन्छु प्रभु! तिमी गएर पूजा गर मन्दिरमा। कुनै विघ्न हुने छैन।

रघुपति : जो आदेश राजेश्वरी! देवता कृतार्थ छन् तिम्रो आदेश-बलले, कि आफ्नै तेज ब्राह्मणले पाए फेरि। धन्य तिमीहरु हौ, कल्कि अवतार हुने छैन जबसम्म।

[प्रस्थान]

[गोवन्द माणिक्य को पुनः प्रवेश]

गोविन्द : प्रेयसीको अप्रसन्न मुख विश्व-भरमा समस्त ज्योति, सबै सुख लुप्त गर्छ उन्मन-उत्सुक-चित्त फर्की आउँदछ।

गुणवती : जाऊ, जाऊ, घर नआऊ। अभिशापलाई यहाँ नल्याऊ।

गोविन्द : प्रियतमे! प्रेमले गर्दछ नाश अभिशापलाई। दया पनि गर्दछ दूर अकल्याणलाई। परन्तु यदि सतिको हृदयबाट प्रेम हरायो भने पतिगृहमा पर्नेछ अभिशाप। देवी, तब जाऊँ म।

गुणवती : जाऊ, फेरि फर्केर मुख नदेखाऊ।

गोविन्द : स्मरण गर्नेछौ जहिले, तहिले फेरि आउनेछु।

गुणवती : (पाउमा परेर) (प्रस्थान हुन प्रस्तुत)
क्षमा गर, क्षमा गर नाथ! यतिमैपनि के भयौ निष्ठूर नारीको अभिमानलाई गरी अवहेलना छाड़ी जानेछौ साँच्चै? जान्दैनौ प्रियतम, तिमी यो के, व्यर्थ प्रेम जस्तो देखिन्छ छद्मवेश मा रोष बनी। छाड़ी देऊ, आफ्नै अभिमानले आफैलाई मैले गरें अपमान-क्षमा गर।

गोविन्द : प्रिये! चुँड़िन्छ जो विश्वास तिम्रो उसै बेला जीवनको बन्धन पनि चुँड़िन्छ। जान्दछु प्रिये। मेघ हो क्षण-भरको अनि सूर्य नित्य निरन्तरका साथी हुँदछ।

गुणवती : मेघ क्षण-भरको हुन्छ। यो मेघ पनि हटने छ, कि वज्र उद्यत विधाताका फर्कने छ, उदाउने छ सूर्य साथी चिर दिनका, जागृत गर्नेछ चिर दिनका प्रथा पनि जगमा। अभय सबैले अब पाउनेछन्-दुइ पलको सपना नराम्रो भुल्ने छ। आज्ञा गर यस्तो प्रचार योग्य जसले ब्राह्मणलाई प्राप्त होस् अधिकार आफ्नै, देवीलाई पूजा, राज-दण्ड

फर्की आवोस् आफ्नो अप्रमत्त सत्य-अधिकारको सीमामा।

गोविन्द : धर्म-हानी ब्राह्मणका अधिकार नै होइन। पूजा थियो न हुनेछ माताको रक्त-धारा द्वारा असहाय जीवहरुको; कि विप्र अनि राजाका छ समान अधिकार आदेश पालनमा देवताका।

गुणवती : भिक्षा माँग्दछु, भिक्षा तिमीसित। विनय-निवेदन छ हार्दिक, चरणमा-चिरागत प्रथा त छ मुक्त-समीरण झैं चिर-प्रवाहित; सम्पदा न त्यो राजाका त्यसको पनि भिक्षा माँग्दछु हात जोडी महिषी तिम्रो सबै प्रजा-जनको निम्ति। प्रियतम। प्रेम को निम्ति यो कुरा मान, प्रेमका आकर्षणको वशमा छ विधाता पनि माफ गर्नेछ दोष तिम्रो कर्त्तव्यको।

गोविन्द : महारानी ! उचित यही तिम्रोनिम्ति भन ? नीच स्वार्थ द्वारा, कठोर क्षमताको दर्पले हिंस्र, पुरानो प्रथा चिर-रक्त-पानभन्दा ठूलो जो छ त्यो भन्दा पनि अर्को अन्धा अज्ञानले-शतशत शत्रुसित एकलो युद्ध गरी थकित भई जब फर्कन्छु घर, पिउनलाई अमृतको धारा नारी-चित्तबाट, वहाँ पनि के छैन दयाको सुधा ? घरमा त बहन्छ प्रेमको पवित्र धारा, तर त्यससित पनि के रक्त-धारा आएर मिल्यो ? यो कुन राक्षसले खोलिदियो कहाँबाट रक्त स्रोत यति-भक्ति-प्रेममा पनि रक्त मिश्रित हुँदछ, क्रूर हिंसा दयामयी रमणीको प्राणमा शोणितको धब्बा लगाउँदछ। फेरि पनि के म नरोकुँ यसलाई ?

गुणवती : (मुख छोपेर) हो, जाऊ, जैजाऊ तिमी।

गोविन्द : हाय महारानी। हुँदछ कठिन कर्त्तव्य जब तिमीहरु मुख फिराउँछौ आफ्नो।

[प्रस्थान]

गुणवती : (रूँदै) यतिका दिनदेखि तैंले हाय अभागिनी। आफ्नो हृदयमा कस्तो भ्रान्ति पालि राखेकी थिइस्। सन्देह थिएन, आज हुनेछ व्यर्थ यतिका अनुरोध, अनुनय अनि अभिमान यति। छिः छिः कुन मुखले पुत्र हीना रमणी पतिसित गर्नेछ अभिमान धूलोमा मिल्यो अभिमान यस्तो ! जल्यो भाग्य ! मिल्यो माटोमा महिषीको गर्व। अब छैन क्रीड़ा प्रेमको, क्रन्दन सुहागको। हो, ज्ञान आयो मेरो स्थान आफ्नो, या त नत शिर धूलि-कणमा या त आफ्नै तेजद्वारा प्रदीप्त झैं फणा फैलाएर उठेको भीषण नागिनी।

## पञ्चम दृश्य

### मन्दिर

(केही मानिसहरुको प्रवेश)

नेपाल : खोई, उहाँ छन् तिम्रा तीन सय पाठा अनि एक सय एक भैंसी? छेपाराको एउटा पुच्छरको टुक्रा पनि देखंदैन। बाजा-गाजा के भयो? सबै मुख फर्काइरहेछन्। म त खर्च-बर्च गरेर पूजा हेर्न आएँ-यहाँ गजबको शास्ती पाइयो।

गणेश : हेर, मन्दिरको अधि उभेर यस्तो कुरा नगर।आमालाई पाठा त प्राप्त भएन तर जब उनलाई आवश्यक पर्छ, तिमीहरुमध्ये एक एक जनालाई पक्रेर चबाउने छिन्।

हारु : भन त, पोहोर साल यी बाबुहरु कहाँ थिए? अनि त्यस साल जब रानी माताले ब्रत लिएर पूजा चढ़ाएकी थिइन्, तब के तिमीहरुको खुट्टामा काँड़ा पसेको थियो? आएर किन हेरेनौ एक पल्ट? ओहो: खूनले सारा मन्दिर नै रगिँएको थियो। अनि अब आएको छ साला असगुन झैं जब आमाको खुराक सम्म बन्द भएकोछ। तिमीहरुलाई एक एक गर्दे पक्रेर आमाको भेंट चढ़ाउँ, तब मात्र मनको जलन मेटिने छ।

कन्हैया : अरे भाइ, तिमी त अकारण रिसाँउदैछौ। अब के केही भन्ने मुख रहेको छ र हाम्रो? छ भने किन उभी उभी उसको कुरा सुन्छौ?

हारु : भाइ, जे भन तर मलाई सानो करोमा रिस उठछ, यो साँचो हो। त्यस दिन त्यो मनिसले साला मात्र भनेको थियो, त्यो भन्दा ज्यादा एक शब्द बोलेको भए, या मेरो शरीरमा हात लगाएको भए, तब बाबुको कसम, साँचो भन्दैछु।

नेपाल : तब हिंड़ौनं, कसको हाड़मा कत्तिको ताकत रहेछ।

हारु : हिंड़ न! जान्दैनौ, यहाँको दफादार मेरा भाइ (मामाका छोरा) हो।

नेपाल : तब ल्याउन त आफ्नो मामा सितै उसलाई पनि, तेरो दफादारको धूलो पीठो ननिकालूँ त कुरागर्नु।

हारु : सुन्यौ तिमीहरुले?

गणेश-कन्हैया : अरे छोड़। हिंड़, अब घर फर्कौं। आज कुनै काममा मन छैन। अब आफ्नो बहादुरी छाड़।

हारु : यो पनि के बहादुरी हो? मेरो मामालाई लिएर बहादुरी। मेरा दफादारका खास बाबुलाई लिएर।

गणेश-कन्हैया : अरे छाड़, तँ तेरा बाबुसित आफैं मर।

[सबैको प्रस्थान]

[रघुपति, नयनराय अनि जयसिंहको प्रवेश]

रघुपति : माताप्रति भक्ति छैन के तिम्रा अलिकति पनि?

नयनराय : साहस कसको छ यसतो कुरा भन्न सक्ने मलाई? जन्म मैले पाएको हु प्रसिद्ध भक्त-वशंमा।

रघुपति : धन्य, धन्य। तब तिमी सेवक हौ माताका आफ्नै मान्छे हौ।

नयनराय : जो मात्रृ-भक्त उनका दास हूँ म।

रघुपति : धन्य। भक्ति यसतै बनिरहोस्। भक्ति यसले शक्ति देओस् तिम्रो दुइ भुजाहरुमा अक्षय, कि भक्ति यसले तीखो धार दिओस् तरवारलाई तिम्रो वज्र झैं तेज दिउन्। भक्ति यो उरमा तिम्रो बसोस् सर्वदा, पदमा, मर्यादा सहित, सबैभन्दा ठूलो बनेर।

नयनराय : व्यर्थ जाने छैन आशीष द्विजवरका।

रघुपति : सुन तब सेनापति, माताको निम्ति गर सैन्य शक्ति एकत्र, विद्रोहीलाई नाश गर्न।

नयनराय : जो आदेश प्रभु! माताका शत्रु को हो?

रघुपति : गोविन्द माणिक्य!

नयनराय : हाम्रै महाराज होइन?

रघुपति : सेना लिएर आफ्नो, चढ़ाई गर उसमाथि।

नयनराय : छि. छि. कसतो पापपूर्ण यो सल्लाह हो। प्रभु! तपाईं के परीक्षा यो मेरो लिनुहुँदैछ?

रघुपति : साँचो हो परीक्षा यो! भृत्य तिमी कसको? यस पल्ट यसको परीक्षा हुनेवाला छ। छाड़ चिन्ता, छाड़ द्विधा, समय छैन रहेको प्रलयको श्रृंग झैं ध्वनित आज्ञा देवीको बन्धन सबै आज छिन्न-भिन्न भइसक्यो।

नयनराय : कोई चिन्ता, कोई द्विधा छैन मेरो मनमा, देवीले दिएकी छन्, मलाई भार तिस पदको त्यस माथि म हु अटल, अचल सर्वदा।

रघुपति : धन्य सेनापति!

नयनराय : माताका सेवकहरुमा म यति नराधम छु! आज्ञा ममा हुँदछ यस्तो! म बन्नेछु घातक राजाका विश्वासको। उरको विश्वास बलमा विश्व-माता पनि स्वयं खड़ा छिन्! कस्तो आफ्नै मुखबाट देवी भन्नेछन् कि चूर चूर गर मेरो नै अटल आसनलाई? कि आज पालो राजाको यदि फेरि भोलि देवी हिंड़िहाल्नेछिन्-मानवता टुक्रेर हुनेछ खण्ड खण्ड फेरि जीर्ण-भित्ति अट्टालिका झैं पलभरमा।

जयसिंह : धन्य सेनापति, धन्य।

रघुपति : धन्य हो अवश्य पनि। तर यहाँ भ्रान्ति कसरी भइरहेछ तिमीलाई। राजा जो विश्वास घाती, माताका निकट छन् बन्धन विश्वासका कहाँ छ सित उसको?

नयनराय : व्यर्थ तर्क गर्नाले के लाभ होला भला? चाह्न म पर्नु बुद्धिको विपाकमा। जान्न सके मैले त अहिले सम्म पथ एउटा नै-अनि त्यो पथ हो विश्वास नै सवर्दा। अधम अबोध यो भृत्य उस्तै सिधा झैं पथमा हिंड्छ, हिंड्ने छ चिरकाल सम्म।

(प्रस्थान)

जयसिंह : चिन्ता के को देव? यसरी नै हामी सबै बल गरी विश्वासको गर्ने छौं काम आफ्लो। डर कसको छ र? कसलाई सैन्य बल चाहिन्छ? अस्त्रको के काम आफ्नो? प्राप्त भएको छ जसलाई भार, शक्ति उनमा छ, त्यो काम गर्ने। साँचो यदि हुन्छौं हामी जननीका माताको पूजा गरिहने छौं। प्रभु हिंड्नोस् डंका बजाई पुरवसिकहरुलाई पुकारौं हामी, मुक्त गरौं मन्दिरको द्वार-अरे, आऊ, तिमी, आऊ, सबै आऊ, आइहाल, भयहीन हो पूजा हुनछे अभयाको, सन्तानहरु। माताका। आऊ पुरवासी! विलम्ब नगर अब त।

[जय सिंह र रघुपतिको प्रवेश]

[पुरवासीको प्रवेश]

अक्रूर : अरे, आऊ, आइहाल।

सबै : जय माता जगदम्बे।

हारु : आऊ है, माताको समक्ष हात उठाएर नाचौं गाउँ।

गीत-३

रणमा नाच्दछिन् माता काली
हामी सबै उनका संग
अध्याँरो बनाई दिशा-दिशामा
दिगंबरी छिन् मत्त नशामा
रातो जिब्रोमा आगो जलिरहेछ मर्न गयो पतंग।
नभमा कालो केश उड़िरहेछ तृषित सोम-रवि कहाँ छन्
झर्छ देहबाट रक्त देखी कपिंत त्रिभुवन भ्रू-भंग॥

सबै : जय आमा दिंदगबंरी!

गणेश : अब केही डर छैन।

कन्हैया : अरे, उता दक्षिण तिर जम्मा भएका मानिसहरु कता गए गए?

गणेश : ती तन्धेरीहरु आमाको महिमा सहन नसकी भागे।

हारू : केवल आमाको महिमा होइन, मैले पनि उनीहरुलाई यसतो धम्की दिंए कि अब यहाँ फर्केर पनि हेर्ने होइन। बुझयौ अक्रूर भाइ, मैले केवल मामाका छोरा दफादारको नाम लिएको थिएँ, तिनीहरु सबैका चेहरा पहेंलो भइगयो।

अक्रूर : त्यस दिन हाम्रा निताइले पनि तिनीहरुलाई खूबै कड़ा कड़ा चार कुरा सुनाइ दियो। जसको मुख छुचुन्द्रो जस्तो थियो नि, त्यो साला कड़किएर जवाब दिन आएको थियो, हाम्रा निताईले भन्यो "अरे तँ त दक्षिणमा बस्ने होस् उत्तरको हालत के जान्दछस? उत्तर दिनु त आइस्-तर उत्तरको कुरा के थाहा छ?" सुनी हाँस्तै हाँस्तै तिनीहरु लड़िबड़ि गरे।

गणेश : यहाँ यी भला मानिस छन् तर बातचितमा निताईसित पार पाउन गाहारो छ।

हारु : निताई मेरा फुपाज्यू पर्छ।

कन्हैया : यसको कुरा सुन त। फेरी निताई तेरो फूपा कहिले देखि हुनगयो?

हारु : तिमीहरु त प्रत्येक कुरामा मेरो जिब्रो समात्छौ। राम्रो कुरो हो, फुपा होइन भने पनि ठिकै छ।यसबाट तिमीहरुलाई के सुविधा भयो? मेरो होइन त के तिम्रा फुपा भयो?

[रघुपति र जयसिंहको प्रवेश]

रघुपति : मैले सुनें सेना आउँदैछ। जयसिंह, तिमी अस्त्र लिएर यहाँ खड़ा बस। तिमीहरु पनि आऊ, आएर यहाँ खड़ा रहू। मन्दिरको फाटकमा पहरा दिनुपर्छ। म तिमीहरुको निम्ति हतियार लिएर आउने छु।

गणेश : हतियारले के हुन्छ र पुरोहितज्यू?

रघुपति : आमाको पूजा बन्द गराउनलाई राजाका सेना आइरहेछन्।

हारु : सेना आइरहेछ? तब त हामीहरु पनि हिंड़ौं, पुरोहितज्यू। भागौं।

कन्हैया : हामीहरु मुट्ठी भरका त छौं, सेना आए पछि के गर्न सकौंला?

हारू : गर्न त सबै गर्न सक्ने छौं तर सेना आएपछि यो जगह कहाँ यस्तै रहला। लड़ाइ त पछिको कुरो हो–यहाँ उभी उभी के हुन्छ?

अक्रूर : तेरो कुरा छाड़दे। देख्दैनस् पण्डितजी रीसले काँपिरहेकाछन्? अच्छा त पुरोहितज्यू, हुकुम गर्नुभए हामीहरु गएर आफ्ना लावा-लश्कर बोलाएर ल्याउनेछौं।

हारु : यही ठीक छ। म कुरै कुरामा मामाको छोरालाई बोलाएर ल्याउनेछु। तर अलिकता पनि विलम्ब गर्नु ठीक हुँदैन।

[सबै जानलाई प्रस्तुत हुन्छन्]

रघुपति : (क्रोधले) पर्ख तिमीहरु सबै।

जयसिंह : (हात जोड़ेर) जान दिनुहोस प्रभु ! यिनीहरुलाई, यी भीरु प्राणभयलाई बुद्धिहीन छन यिनीहरु पहिलेदेखि नै मरेका छन्। सैनिक हुँ आमाको म, कि मेरो एउटा देहमा बल छ सहस्र सैनिकहरुको, प्रयोजन छ अब अस्त्रको मात्र, भीरुहरूलाई जान दिनोस्।

रघुपति : समय भए पो ! अब अस्त्र चाहिन्छ। दुर्बल भक्तिद्वारा न अब काम चल्ने छ। (प्रकट) बलि ल्याऊ जयसिंह, पूजा गरौं, माताको।

[बाहिर बाजाको आवाज सुनिन्छ]

जयसिंह : सेना होइन प्रभु, पूजा आइरहेछ रानीको।
(रानीका अनुचर तथा पुरवासीहरुको प्रवेश)

सबै : अरे भाइ, केही डर छैन। सेना होइन, यो त महारानीको पूजा आइरहेछ।

हारु : सेनालाई हामीहरु यहाँ भएको खबर प्राप्त भए छ। अब चाँड़ै तिनीहरुलाई यहाँ आउने हिम्मत हुनेछैन।

कन्हैया : पुरोहितज्यू ! रानी माताले पूजा पठाएकी छन्।

रघुपति : जयसिंह, शीघ्र पूजाको आयोजन गर।

[जय सिंहको प्रस्थान]

[पुरवासी नाच्छन् गाँउछन्। गोविन्द माणिक्यको प्रवेश]

गोविन्द : यहाँबाट सबै जाऊ। लैजाऊ बलि पशुको रघुपति, तिमीले के आदेश सुनेनौ मेरो ?

रघुपति : सुनेको छैन।

गोविन्द : तब तिमी यो राज्यको होइनौ ?

रघुपति : म होइन। तर जहाँ छु, तहाँ आउँदा खस्नेछ राजदण्ड राजाको हातबाट, मुकुट झर्दछ भूइंको धूलोमा। को छ हँ। ल्याऊ आमाको पूजा।

[बाजा बज्दछ]

गोविन्द : चूप बस।

[अनुचरहरुलाई]

सेनापति छ कहाँ, बोलाऊ उसलाई शीघ्र नै ! हाय पुरोहित सेना लिएर मैले अन्तमा घेरनु परेको छ धर्मलाई, कस्तो लाजको कुरो सेना बोलाउनमा हातको अशक्तता यसबाट स्मरण हुन्छ बार बार मलाई।

रघुपति : अविश्वासी, धारणा तिम्रो सांच्चै के हो, कलिकालमा न ब्रह्मतेज रह्यो, यसले दुःसाहस यति भयो ? परन्तु भुलेका छौ त्यो दिन अझ

गएको छैन। अग्नि दीप्त जो अन्तरमा जल्दछ, तिम्रो सिंहासनलाई निश्चय जलाउनेछ, नत्र म मनको आगोमा जलाएर भस्म बनाउनेछु सबै शास्त्रलाई सारा ब्रह्मगर्व, कोटि तेत्तीस मिथ्या पनि। आज छैन महाराज अनि न कुनै दिन पनि एक पल्ट यो दिन याद गर्नू।

[नयनराय अनि चाँदपालको प्रवेश]

गोविन्द : (नयनराय सित) सेना सहित सेनापति, यहाँ पर्ख हुन नदेउ जीव-बलि !

नयनराय : प्रभु ! क्षमा-दान गर्नुहोस् अक्षम सेवकलाई यस देव-पीठमा राज-सेवक भएर पनि असमर्थ छु म अहाँ सम्म पुग्दछ प्रताप महाराजाको छाया झैं म त्यहाँसम्म जानेछु।

चाँदपाल : पर्ख सेनापति ! दीप-शिखा एक स्थान सम्म हुन्छ, दीप-ज्योति जादछ तर धेरै दूर सम्म। जान्छ राजाको इन्छा जहाँसम्म, हामीपनि जान्छौं वहाँ।

गोविन्द : तर सेनापति, पर्ख मेरो आज्ञा तिम्रो विचाराधीन छैन। धर्म-अधर्म, हानि-लाभ जतिछन् मेरा हुन मात्र एउटा कार्य तिम्रो हातमा रहेको छ।

नयनराय : हृदयमा छैन यो कुरो तर मान्दछु। महाराज, नोकर हूँ निश्चय हूँ मनुष्य पनि। बुद्धि पनि छ, धर्म छ, तपाईं, हुनुहुन्छ, अनि देवता पनि।

गोविन्द : तब तिमी अस्त्र-शस्त्र सबै अब जम्मा गर। चाँदपाल, तिमी भयौ सेनापति अबदेखि दुवै पदका तिमी अब भयौ अधिकारी। सावधान भएर सेनासहित रक्षा गर्नु मन्दिरको।

चाँदपाल : जस्तो आदेश महाराजको।

गोविन्द : अस्त्र आफ्नो देऊ नयन चाँदपाललाई।

नयनराय : महाराज, चाँदपाललाई किन अस्त्र दिनु मैले अस्त्र-शस्त्र दिएका थिए पुरखाहरुले तपाईंका मेरा पुरखाहरुलाई। यदि फर्काईन चाहनु हुन्छ भने तपाईं नै लिनुहोस्। स्वर्गका निवासी मेरा पुरखाहरु। साक्षी रहोस-यस कुराको कि जुन विश्वासलाई यतिका दिनसम्म रक्षा गरें बड़ो यत्नसित साग्निकको पुण्य अग्निझैं तपाईंले आज त्यस विश्वा-सलाई आज फर्काउँदछु रहित कलंक।

चाँदपाल : के कुरो छ !

नयनराय : धिक्कार छ। चुप होऊ। महाराज, विदा लिंदछु अब म। (प्रणाम गरी जान्छन।)

गोविन्द : काम छैन क्षुद्र स्नेहको राज-काजमा। देव-कार्य-भार तुच्छ मानवको

हातमा। कति कठिन!

रघुपति : ब्रह्मश्राप यसरी नै हुँदछ सफल दूर दूर जाँदछ। क्रमैसित विश्वासी चरण, उधेको स्थान आँखा झिमिक्क गर्दा नै भत्केर टुक्रा टुक्रा हुन्छ।

[जय सिंहको प्रवेश]

जयसिंह : भयो सम्पन्न आयोजन सबै पूजाको प्रस्तुत छ बलि।

गोविन्द : बलि कस्तो? कसको निम्ति?

जयसिंह : महाराज, तपाईं यहाँ? एउटा निवेदन छ-प्रार्थना एकान्त यो आज्ञा तपाईं फर्काउनुहोस् भएर मनुष्य देवीलाई नघेर्नु होस्।

रघुपति : धिक्कार जयसिंह! कसको चरणमा पर्छौ? उठ उठ! गुरू जसको हुँ म उसको निम्ति स्थान एक मात्र यी चरणहरु जगमा। मूर्ख, हेर फर्केर, क्षमाको भीख माँग, घरका चरण गुरुका। कराल कालिको! भयो तिम्रो के अधोपतन यतिको, गर्नु परेको छ पूजा राजाका आदेशद्वारा? पड़ी रहोस-पूजा, तेर्सी रहोस बलि पनि, हेर्नेछु राज-दर्प कतिको टिकने छ। हिंड़ जयसिंह मसित यहाँबाट हिंड़।

[रघुपति र जयसिंहको प्रस्थान]

गोविन्द : विनय कहाँ छ यस जगमा हे जननी। रहन्छन् जो विचारको निम्ति तिम्रो पदतलमा, उसले पनि सिक्न सकेन अहिले सम्म, कति छ क्षुद्र त्यो। हरण गरी महिमा तिम्रो ऐश्वर्यलाई वहन गर्दछ त्यो आफ्नो शरीरमा। हा, अहंकार कति!

# द्वितीय अंक
## पहिलो दृश्य
### मन्दिर
(रघुपति, जयसिंह अनि नक्षत्रराय)

| | | |
|---|---|---|
| नक्षत्रराय | : | गुरूदेव ! के कारण हजुरले बोलाउनुभयो ? |
| रघुपति | : | देवीले दिनुभयो सपना मलाई गतः राती भनिन कि तिमी हुने छौ राजा यस देशका। |
| नक्षत्रराय | : | राजा हुनेछु म ? यो के तपाई भन्नुहुन्छ ? राजा म हुनेछु ? कुरा नयाँ सुनें मैले। |
| रघुपति | : | राजा तिमी हुनेछौ। |
| नक्षत्रराय | : | हुँदैन मलाई प्रतीत। |
| रघुपति | : | सपना हुनेछ सत्य यो देवीको, पाउने छौ तिमी राज तिलक, सन्देह छैन यसमा। |
| नक्षत्रराय | : | छैन सन्देह। फेरि पनि यदि न पाउन सकूं ? |
| रघुपति | : | मेरो वचनको पनि विश्वास छैन तिमीलाई। |
| नक्षत्रराय | : | अविश्वास त छैन मलाई अलिकता पनि तर देव-वश यदि फेरि पनि न हुन सकूँ ? |
| रघुपति | : | अन्यथा बहिल्यै पनि यो कुरो हुन सक्तैन। |
| नक्षत्रराय | : | अन्यथा हुने छैन ? हेर प्रभु तर अन्त्यमा कुरा यो ठीक होस्।राजा भएर दूर हटाउनेछु यस मन्त्रीलाई, आँखा परि रहने छ उसको म माथि सर्वदा, जस्तो कि पितामह मेरा पिताका।डराउँदछु उसित बहुत पुरोहित बाजे बुझ्नुभयो, मन्त्री तपाई लाई नै बनाउने छु म। |
| रघुपति | : | मन्त्री पदलाई लात मार्दछु तर म। |
| नक्षत्रराय | : | तब हुनेछ मन्त्री जयसिंह। पुरोहित बाजे, तर यदि जान्नु हुन्छ सबै कुरा तब भन्नुहोस् कहिलेसम्म हुन सक्ने छु राजा ? |
| रघुपति | : | देवी चाहन्छिन् राजरक्त। |
| नक्षत्रराय | : | देवी राजरक्त चाहन्छिन् कि कसो ? |
| रघुपति | : | पहिले देऊ राजरक्त ल्याएर, बन राजा तब। |
| नक्षत्रराय | : | तर त्यो राजरक्त पाउन सक्छु कहाँ ? |
| रघुपति | : | गोविन्द माणिक्यको नै रक्त देवी चाहन्छिन्। |
| नक्षत्रराय | : | रक्त उनको नै चाहिन्छिन्। साच्चै देवी ? |
| रघुपति | : | चंचल न होऊ जयसिंह, स्थिर रहू। बुझ्यौ कि बुझेनौ ? अब मबाट |

सुन लुकेर मार उसलाई, तप्त राजरक्त त्यो ल्याएर अर्पित गर देवीको चरणमा। जयसिंह, स्थिर रहन तर सकेनौ भने जाउ हाल तिमी कुनै अरू स्थानमा। बुझ्यौ नक्षत्रराय, देवीको आदेश छ, राजरक्त चाहिन्छ देवीलाई शेष रातमा श्रावणको। राजभ्राता दुइ हौ तिमी, जेठा जो पाउने छ छुटकारा-रक्त दिनुपर्छ तिमीले। प्यासी महाकाली छन् त अब समय छैन सोचने-विचार गर्ने।

नक्षत्रराय : हाय, पुरोहितजी। राजभक्त रहोस-राजदेहमा नै, काम के छ राज्यको मलाई-जस्तो छु म, उस्तै राम्रो छु।

रघुपति : कुनै सुरतले पनि पाउने छैन छुटकारा जब चाहे जस्तै होस्, राजरक्त ल्याउनै पर्नेछ।

नक्षत्रराय : गर्नुपर्छ मैले के देव। बताउनुहोस्।

रघुपति : प्रस्तुत होऊ, म भन्दछु जब गर्नु जो अविलम्ब त्यसलाई गर। कार्य सिद्धि नभएसम्म मुख तिमीले बन्द राख्नू आफ्नो। अब तिमी जाऊ।

नक्षत्रराय : हे माता, सर्व दुख-नाशिनी।

[प्रस्थान]

जयसिंह : यो के सुनें मैले माता हे दयामयी। कुरा कस्तो? साँच्चै आदेश तिम्रो हो-भाइले गर्ने छ दाज्यूको हत्या, विश्वजननी? गुरूदेव माताको आज्ञा बताएर तपाईंले यस्तो आज्ञाको प्रचार कुन उपायले ?

रघुपति : अरु छ उपाय के?

जयसिंह : उपाय कुन कुराको चाहिन्छ प्रभु। जननी, खड्ग छैन नजिक के? धारमा तिम्रो चण्डी बज्रानल छैन र? इच्छा तिम्रो आज परिरहेछ खोजनु हाय उपाय, चोर झैं खन्नु पर्छ सुरूगं रसातलमा जातीको कस्तो यो पाप।

रघुपति : पाप-पुण्य भला तिमी के जान्दछौ?

जयसिंह : सिकेको हुँ मैले तपाईंबाट नै।

रघुपति : आऊ वत्स तब तिमीलाई अर्को शिक्षा दिऊँ। पाप-पुण्य केही पनि छैन। को भाइ हो, को आफ्नो, को अर्का। भनेको छ कसले हत्या गर्नु हो पाप? विश्व यो सारा हो एक महाहत्या-शाला। जान्दैनौ के, आँखा चिम्म गर्दा नै, लाख-कोटि प्राणी नित्य नै सदाको निम्ति आँखा बन्द गर्दछ। कसको मायाको हो क्रीड़ा यो? धूलो यस जगको हत्याले छाएको छ-प्रति पदक्षेप द्वारा शत-शत कीट कुल्चेर मर्दछ-जीव त्यो होइन र? महाकाल विश्व-पत्रमा लेख्छन् निरन्तर अक्षरमा रक्तका जीवहरुका क्षणिक इतिहास। हत्या वनमा हुंदछ,

लोकालयमा अनि चराको गुँड़मा, कीट-प्वालमा हत्या हुँदछ नीलो नभमा। हत्या जीविकाको निम्ति, खेलको बहानामा पनि हत्या बिना कारणले, हुन्छ अनिच्छा द्वारा पनि चल्दछ सारा विश्व व्याकूल भएर हत्या द्वारा सास रोकी भागिरहेछ प्राणको निम्ति पलभर पनि ती रोकिदैनन् बाघको खेदाइबाट मृग भागे झैं। तृषा-तीक्ष्ण लोल-जिह्वा फैलाएर खड़ा महाकाली कालरुपिणीका रक्तधार छ विश्वको चारै दिशाबाट त्यो, फुटन पुग्दछ खप्परमा उनको अनन्त, जसरी बहदछ रसधार उखुलाई निचोर्दा।

जयसिंह : पर्ख पर्ख पर्ख। हे मायाविनी, पिशाचिनी, मातृहीन यस धराधाममा तँ आइस् माताको छद्मभेषमा रक्तपानको लोभले? क्षुदित पक्षी-शिशु अरक्षित गुँडमा आशा गरी आमाको बाटो हेरिरहन्छ, लुब्ध काग नजिक जब आँउछ व्यग्र कण्ठले अन्धा त्यो बचेरा बार-बार जोगिने चेष्टा गर्छ अनि दिंदछ प्राण हिंस्र चुच्चो ओंठको घाउद्वारा साँचो बता, तँ के त्यही काग समान होस्? प्रेम-स्नेह-दया अनि सबै मिथ्या हो, सत्य केवल अनादि अनन्त हिंसा तेरै हो? तब किन आर्शीवाद रुपमा मेघ जालबाट डड़ेकी धरणीको वक्षमा वर्सदँ छ दृष्टिधारा? अनि माथिबाट पग्लेर आउँछे दयामयी स्रोतस्विनी मरूभूमिमा पनि किन? कोटि-कोटि कंटक-शिखर माथि पनि किन फुल्दछ फूल अति सुन्दर? छल्छौ मलाई प्रभु। हेर्न चाहन्छौ, माताको चरणमा बलि दिऊँ हृदयलाई यदि त्यो हृदय फोरेर रक्तधारा झैं मातृ-भक्ति मेरो छ या छैन। हेर , त्यहाँ हेर, हाँस्दछिन् मेरी जननी स्नेह-परिहासद्वारा। भला तँ राक्षसी नै होस् पाषाणी छ, मेरी माता रक्त पियासिनी। लिन्छस् मेरो रक्त आमा? सन्तान जन्म मेरो यो यस जन्मको निम्ति मेटाउछस्? कि शरीरमा हानौं छुरि? तिमीलाई लाग्छ मज्जा कसो रक्त मेरो छिटिएको नशाबाट? अरे जननी, साँचो हो, तँ राक्षसी पाषाणी होस्। पुकार्नुभयो गुरुदेद तपाईंले मलाई? मैले यो छलना बुझिसकेको छु। भक्तको हृदय दुखाएर चाहन्छौ रक्त। वेदना जो दिएकी थियौ तिमीले, यो, उसै माथि परेको माताको स्नेह-कर हो। दुख भन्दा सुख शतगुणा यसमा। तर राजरक्त। मातालाई भक्तिको पिपासा छ, छीः छीः, उनलाई रक्तको पिपासिनी बनाउँदछौं?

रघुपति : तब बलिदान यो बन्द नै होस्।

जयसिंह : बन्द होस्। होइन गुरूदेव, तपाईं, जान्नु हुन्छ भला-खराब शास्त्रको विधान छैन सरल भक्तिको। आँखाले आफ्नो ज्योतिद्वारा देख्न सक्तैन-आँउदछ ज्योति नभबाट प्रभो। क्षमा गर, मूर्खताको स्पर्धा क्षमा गर यस दासको। पाएर ठूलो चोट बोलिरहेछु म क्षमा गर त्यसलाई,

बताऊ तर हे प्रभो ! महादेवी साँच्चै के राजरक्त चाहन्छिन् ?

रघुपति : हाय वत्स, अविश्वास मप्रति अन्तमा ?

जयसिंह : अविश्वास ? होइन, अविश्वास कहिल्यै पनि होइन। छोड़ी तिमीलाई, विश्वास तग्नेछ कहाँ मेरो फेरि ? वासुकीका मस्तक विहीन वसुधा समान शून्य भन्दा पनि शून्यमा विलीन हुनेछ त्यो। महामाया चाहन्छिन् भने राजरक्त यदि तब, राजरक्त त्यो म स्वयं लिएर आउनेछु। भ्रातृ-हत्या दिने छैन यसको निम्ति।

रघुपति : देवताका आज्ञा पाप हुन नै सक्ने छैन।

जयसिंह : तब त्यो पुण्यको लाभ म स्वयं पाउनेछु।

रघुपति : नानी, तब कुरो, म साँचो साँचो बताँउ। प्यारो गर्दछु तँलाई प्राण भन्दा पनि अधिक म, पालन गरेको छु तेरो मैले शिशुकालदेखि आमा भन्दा पनि अधिक स्नेहद्वारा, तँलाई हराए भने कुनै प्रकारको दुःख म सहन सक्ने छैन।

जयसिंह : पाप हुनदिने छैन स्नेह-हित आफ्नो यस स्नेहप्रति अभिशाप ल्याउने छैन।

रघुपति : अच्छा, अहिले होस् नानी कुरा फेरि होला निर्णय गर्नेछु म यसकुरा भोलि।

[दुवै को प्रस्थान]

## दोस्रो दृश्य

### मन्दिर

(अपर्णा गीत गाउँदै आँउछ)

गीत-४

हे मेरा पुरवासी !

कहिले देखि खड़ा द्वार तेरो म आज उपासी।

अपर्णा : जयसिंह ! कहाँ जयसिंह ! छैन कोही पनि मन्दिरमा। को छ त्यहाँ खड़ा अचल मूर्त्ति झैं-केही बोल्नु छैन, चलनु छैन जगलाई हरण गर्ने सार-धन हौ ? भएर कातर कंगाल जसको निम्ति पथ पथमा म भड़किरहेछु उ आएर आफैं तिम्रो पद-तलमा गर्दछ आत्म-समर्पण तर उसको तिमीलाई के प्रयोजन ? धन सबै कज्जुसको गाड़ेर राख्दछिन् सबै मन्दिरको गर्भगा, राखेर गोपन समस्त व्यवहारदेखि निर्धन जगतको। पाषाणी यी तिमीलाई कुन सुख दिनेछन् जयसिंह ?

भन्छिन् के कसले चिन्ता गर्दछे तिम्रो निम्ति-रात-दिन कुन सान्त्वनाको सुधा प्राणको पात्रमा लुकाएर साँचेर राखथी ? हे उपवासी भन बसेको छस्-तँ कसको त्यस द्वारमा, जो बन्द छ चिरकालदेखि नै ?

गीत-५

हे मेरा पुरवासी।
पहिलेदेखि द्वारमा तिम्रो उभिरहेकी म उपासी।
देखिरहिछु सुखको मेला,
घर घर यही खेलको बेला,
मेरो मन प्रतिपल वंशी-स्वर सुन्न अभिलाषी।

[रघुपतिको प्रवेश]

रघुपति : को छ यहाँ मन्दिरमा ?

अपर्णा : एक म भिखारिनी ! जयसिंह कहाँ छ ?

रघुपति : यहाँबाट दूर भइहाल तँ मायाविनी ! चाहन्छस्-देवीको नजिकबाट छिनेर लिनु जयसिंहलाई हे प्रेतनी ?

अपर्णा : मलाई भला के डर देवीको ? म डराँउदछु उदेखि कि ग्रास उसले सबै चीज नगरुन्।

[गाँउदै गाँउदै प्रस्थान]

गीत-६

न चाहन्छु लैजाऊँ धेरै सम्पति
रहनु छैन अधिक दिन, पल छिन,
त्यहीं फर्की जानेछु, जहाँबाट आएकी छु यो दासी।
तिमी सबै सुखसित यहाँ रहनेछौ
नयां खुशीसित रहनेछौ
केही पनि मलिन हुने छैन गृहमा हुनेछ स्मिति-आभा झैं।

**तेस्रो दृश्य**

**मन्दिरका अघिको बाटो**

[जयसिंहको प्रवेश]

जयसिंह : चिन्ता जाल दूर होस्, द्विविधा नरहोस् कुनै। चिन्ताको नरक मन्दा उत्तम हो काम गर्नु चाहे त्यो जतिनै क्रूर होस् कठिन होस्। हुन्छ अन्त कार्यको, परन्तु सीमा चिन्ताको हुन्छ अनन्त सदा, सहस्र रूपधरती वाष्प मैं एक एक पलमा। जति जति चारै तिर खोजी हिंड़दछ त्यो

पथ उति उति लुप्त हुँदै जाँदैछ चारैतिर। एउटा भला हुँदछ अनेक अवश्य नै। तपाईं साँचो गुरुदेव, आदेश पनि तपाईंको साँचो हो, कि इशाराका तर्फ नै तपाईं का गएको साँचो पथ हो। होइन पाप हत्या पनि, भ्रातृ-हत्या, राज हत्या, पनि कुनै पाप होइन। सत्य हो यही नै गुरूदेव, यो सत्य हो। सत्य यो पनि पाप पुण्य केही पनि होइन। चिन्ता दूर होस्, न आत्मजलनले छटपटाई, रहनदेऊ पड़िरहन विवेकलाई, विचारलाई। गइरहेका छौ वहाँ भाइ हो, के निशिपूरमा मेला लागेको छ, के त्यहाँ नाँच हुनेवाला छ कूकी रमणीको ? जाँऊ, म पनि वहाँ जान्छु। सुख कति छ यस विश्वमा, कि नारीहरु नाँच्दछन्-चिन्ताहीन भई आनन्दसहित। अँगको मधुर-भंगिमा छल्कन्छ चारै तिर जस्तै तट-प्लाविनी तरंगिनी। चिन्ताहीन सुखसित सबै आंउदछन-दौड़दै चारैतिरबाट-कि तान निस्कन्छ गीतको हास-परिहास् बहदंछ, मूर्त हुंदछ शोभा धरतीको उच्चता, म पनि जाँदछु।

गीत-७

कसले मलाई लिन्छ, कसले लिन्छ ?
दान गर्न आएको छु स्वयंलाई
रित्तो, मर्न आएको छु, स्वयंलाई,
काम-धन्धा ली मन पगाली
को छ जसले मलाई साथमा लिन्छ ?
कुन रुपको बजारमा तिमी,.
हिंड़छौ विश्वको नजरमा तिमी,
म छाड़िएको छु, कष्टले भरेको छु,
देखी सबैको खुशी, मन खिल्ने छ।
तोड़ वाधा सबै हे बटुवा,
लुट मलाई तिमी आज जतिसक्दों,
गर्हो मनको बड़ी, द्वारमा नै पड़ी
सबै रहे, एक पलमा दिनेछ
ज्वार सबै थोक, त्यहाँ शेष जे पनि रहनेछ,
-यो अवधिमा सहजै जो मिल्दछ।
के को निम्ति बन्धु, आवगमन छ ?
के जानेको आफ्ना मानिस छन् ?
को हो जसले मलाई यसरी पुकार्छ-तलाँई
जान्दछ, साथ मेरो जाने ?
एक पल्ट पनि, त्यो हाँसी छेवमा खड़ा रहोस्

भग्न सकून या उसलाई चिन्न संकू ॥

[केही वेरपछि अपर्णाको प्रवेश]

उ को अपर्णा ! खड़ा भएर पनि दूर उ किन सुनिरहछ अवाक, कि गाउने जससिंह हो। सबै कुरा मिन्थ्या, सबै कुरा प्रवंचना, हाँस्दछु यसै कारण म, अनि गीत गाँउदछु। हेर, उ हेर, यहींबाट मानिस हिंड्ने पथमा चिन्ताहीन भएर, अनि यो भन्दा सानो कुरोलाई पनि बड़ो कौतुक भएर हेर्दछ। हाँसी खुशी अतिनै छ, कौतुहल उत्ति नै, यसैले तरुणीहरु गर्दछन्, साज-सज्जा यति। परन्तु यदि सत्य कहिं छ भने यी सबै हुनेथिए? यहाँ यति सहजैसित आनन्द बहन्थ्यो? कि बेदनाले सबै विदीर्ण धराका अति व्याकूल क्रन्दन पनि विश्वव्यापी भई, फैलिएर जाने थियो चूप चाप चारै तर्फ, अनि चिरकालको निम्ति नै। बाँसुरी यदि गर्दन्थ्य रोदन बेदनाद्वारा तब फुट्ने थियो, नीरव संगीत हुनेथ्यो उसको। झुटो हो, यसै कारण त यतिका हाँसी-खुशी-क्रीड़ा अनि कौतूक छन-काखमा श्मशानका, वेदनाको छेउमा वहिं सुतिरहेछ गीत पनि। हिंसा-वधिनीको दाँत र नंगको छायामा समस्त काम हुँदछ सदा दिनमा। सत्य हो जो वहिँ त हुन्छ यस्तो किन? हाय अपर्णा ! सत्य न तिमी हौ, न म नै हूँ, होऊ यही जानी खुशी। कि विस्मयले भई अवाक, मुग्ध आँखा खोलेर किन हेर्दछौ यसरी? आऊ सखी, जाँउ हामी दुवै मिलेर, यस विश्वको माथि अनि चिरकाल तक जाँउ, सदा जइरहौं जसरी शून्य गगनमा दुइ टुक्रा कालो बादल उड़दछ।

[रघुपतिको प्रवेश]

रघुपति : जयसिंह।

जयसिंह : तिमीलाई चिन्नसकिंन मैले। म हिंड़छु अदृश्यको भरोसामा पथ आफ्नो, जसरी अरु मानिसहरु सहस्रौं यहाँ हिंड़दछन्। को तिमी, भन्दछौ मलाई अड़िनुलाई? आऊ तिमी पनि, म पनि अब लागौं बाटो आफ्नो।

रघुपति : जयसिंह।

जयसिंह : सामने यहीं त पथ सहज छ, भिक्षा-पात्र हातमा अनि साथमा भिखारिनी यही आफ्नी सखीलाई लिएर जानेछु। भन्छ कसले कि राजपथ यस विश्वको छ दुर्गम, छ जटिल, होस्-जस्तै पनि ढल्न लाग्दा दिन पुग्ने छु म निश्चय सीमा निकट म अन्तिम जीवनको। हराउनेछु वहाँ आचार-विचार तर्क जाल सबै। सुम्पिदिने छु थकित-पराजित नर जन्मलाई धरतीको काखमा-समष्टि मेरो यो त दुइ-चार दिनको, गन्तीको भूल-चूक अलिकता, सुख-दुःख, आशा क्षीण आफ्नो हृदयको, शक्तिहीनताद्वारा आफ्नै गरें जसको भ्रष्ट अनि भग्न, त्यस जीवनका भारीलाई उतारी अनन्त कालको हातमा, पाउनेछु अनन्त विश्राम मं। यही त संसार हो, काम के छ शास्त्रको विधानसित, के

गुरुसित? प्रभु! पिता! गुरु! यी के भनिरहेथें म! स्वप्न देखिरहेथें सायद। मन्दिर यही हो त्यो महा बट-वृक्ष खड़ा छ सत्य झैं, अटल, कठिन अति निष्ठुर यथार्थ झैं। आज्ञा देव? गर्नु छ कार्य के मैले? भुलेको छैन मैले गुरुदेव। यहाँ हेर्नोर्स—

[ छुरी देखाएर ]

सम्झनुहास् देव। तपाईंका आदेशको अन्तरमा भइरहेछ बाहिर पनि खलबल। आज्ञा के अरु कुनै छ? छ भने प्रभु बताउनुहोस्।

रघुपति : मन्दिरदेखि दूर, यस बलिकालाई राख। मायाविनि! जान्दछ तिम्रो मोहजाल जयसिंह, मन्दिरदेखि यसलाई दूर गर।

जयसिंह : दूर गरौं उसलाई? गरीब उ म जस्तै, संगीहीन म जस्तै, हो मन्दिरकी आश्रिता, कंटक-रहित पुष्प झैं दोषहीन उ, सुन्दर, सरल, शुभ्र, कोमल, निष्पाप छ अनि वेदनाले अति पीड़ित छ-उसलाई मन्दिरदेखि दूर गरुं? गर्नेछु प्रभु, म। जा पर अपर्णा! दया-माया, स्नेह-प्रेम सबै झुटो हो। अपर्णा तँ मरिहाल। यदि विश्वदेखि बाहिर केही पनि छैन भने, ममतामयी मृत्यु त फेरि छँदैछ। जाइ हाल-अपर्णा तँ।

अपर्णा : जयसिंह, तिमी पनि हिंड़, हामी दुवै नै छाड़ी मन्दिर चाड़ै हिंड़ हिंड़ौं।

जयसिंह : दुवै जाँऊ? सपना त यो होइन तर। देखेको थिएं एक पल्ट सपनामा, यो विश्व नै सपना तुल्य हो। यसैबाट म सुखले हाँसे, अनि गाएँ गीत मैले। तर यो सत्य हो, कुरा अब नभन सुखको, नदेखाऊ लोभ पनि स्वतन्त्रताको-सत्य-कारागारमा अब त म हूँ केवल एक बन्दी।

रघुपति : जयसिंह! समय छैन् मीठो कुरा गर्ने अब दूर गर यस बालिकाई बिना विलम्ब नै!

जयसिंह : हिंड़िहाल अपर्णा!

अपर्णा : भला जाँऊ के कारण म?

जयसिंह : यही हो तिम्रो नारी-अभिमान?

अपर्णा : होइन, छैन अब अभिमान थोरै पनि। तिम्रो वेदना जयसिंह, मेरो सबै व्यथा, सबै गर्व भन्दा छ ठूलो। छैन ममा अभिमान कति पनि!

जयसिंह : तब जाँदैछु म नै। मुख हेर्ने छैन तेरो, जबसम्म तँ रहन्छस् यहाँ। हिंड़िहाल।

अपर्णा : निष्ठूर ब्राह्मण, धिक्कार तेरो ब्राह्मणत्वलाई। दिइरहिछु म क्षुद्रनारी अभिशाप तँ पाउनेछैनस् यस वन्धनमा बाँध्न जयसिंहलाई कहिल्यै पनि।

[प्रस्थान]

रघुपति : नानी, शिर उठाऊ त बोल एक पल्ट। प्राण प्रिय, मेरो प्राणाधिक,

स्नेह के छैन मेरो प्राणमा समुद्र झैं सीमाहीन? चाहन्छौ अरु धेरै के? म त चिर जन्मको हितैषी। एक पलको माया-डोर चुँड्यो भने क्लेश तिमीलाई यत्रो?

जयसिंह : प्रभु, रहन दिनोस्, कुरा स्नेहको नगर्नुहोस् स्मरण मलाई छ केवल कर्तव्यको मात्र। स्नेह तरु-लता-पत्र-पुष्प बराबर नै, केवल छ उँभो धरतीको, आँउछ जान्छ, सुक्छ, मेटिन्छ नयाँ-नयाँ सपना झैं। प्रस्तरको स्तूप रहन्छ तल रातदिन रुखो अनि सुकेको, चरणको अनन्त भार झैं।

[प्रस्थान]

रघुपति : जयसिंह, कसै गरेर पनि मन जान्न सकिनं मैले तिम्रो, गरेर उपाय छल-बलले पनि।

## चौथो दृश्य

### मन्दिरको आँगन

[जन समूह]

गणेश : जे भन भाइ, यस पाला मेला उस्तो रमाइलो भएन।

अक्रूर : मेला यस पाला रमाइलो हुन्थ्यो कसरी! यहाँ अब हिन्दूको राज त रहेनयो त नवाबको राज जस्तै भयो। देवीको बलि पनि रोकिदिए पछि मेलामा मान्छे आउने किन?

कन्हैया : हाम्रा राजाको यस्तो मति त थिएन, भाइ! यस्तो लाग्छ, उसलाई केही हावा-बतास-लागेको हुनुपर्छ।

अक्रूर : लागेकै हो भने उसलाई कुनै मुसल्मानको प्रेत लागेको हुनुपर्छ, नत्र उसले किन बलि बन्द गर्ने?

गणेश : जे होस्, अब यस राज्यको कल्याण छैन।

कन्हैया : पुरोहित बाजेले त खुद-भनिदिएका छन्, तीन महीना भित्र नै सारा देश चकनाचूर हुनेछ।

हारू : तीन महीना कसले भन्यो, जसतो लक्षण देख्दैछु, यस घटनाको निम्ति त तीन दिन पनि ढिलो हुनेछ। अब यहीं हेर न, हाम्रो माधो अढ़ाइ वर्ष बिरामी सहेर पनि बाँचिरहयो, अनि जब बलि बन्द भयो, उ पनि मरयो।

अक्रूर : होइन है, उ मरेको त तीन महीना भइसक्यो।

हारू : अच्छा, तीन महीनन हो, मरेको त यही साल होइन?

चिन्तामणि : अरे, त्यति मात्र होइन, कसले जान्दथ्यो कि मेरा बड़ाबाबुका छोरा मर्छ भनेर? केवल तीन दिन जरो आयो-अनि जसै उसले कविराजका

गोली खायो, उसको आँख पल्ट्यो।

गणेश : त्यो दिन मथुरहाटीको गंजमा आगो लाग्दा एउटा भेंड़ा पनि बाँच्न सकेन।

चिन्तामणि : अरे, यति धेरै कुरा के जरुरत? अब यही हेरन, यस साल धान जति सस्तो भएको छ, उति पहिले कहिल्यै भएन। कसले जान्ने, यस साल किसानहरुको तकदीरमा के लेखेको छ।

हारू : अरे, हेर हेर, राजा आइरहेछ। बिहान बिहान यस्तो राजाको मुख हेर्नपर्‍यो। थाहा छैन, आजको दिन कस्तो होला। हिंड़, हामीहरु यहाँ बाट भागौं।

[सबैको प्रस्थान]

[चाँदपाल अनि गोविन्द मणिक्यको प्रवेश]

चाँदपाल : सावधान रहनुहोस्-महाराज, चारैतिर मैले आँखा-कान लगाई राखेको छु कि राज्यको भलो-कुभलो केही पनि छिपाउन सकिंदैन मबाट। सुनेको छु मैले आफ्नै कान द्वारा तपाईंको हत्याको निम्ति गुप्ती बातचित गरिरहेका मानिसहरु।

गोविन्द : हँ, कसले मलाई मार्न चाहन्छ?

चाँदपाल : भन्न संकोच लाग्छ। डर लाग्छ, निष्ठुर खबर यो साँचो तर छुरीले हानेभन्दा पनि अधिक चोट नलागोस् तपाईंको हृदयमा।

गोविन्द : निःसंकोच भन चाँदपाल जो छ भन्नु आघात सहनको निम्ति राजाको कठोर हृदय हुँदछ सतत प्रस्तुत। कसले सल्लाह गर्दैथियो मेरो हत्याको?

चाँदपाल : युवराज नक्षत्र।

गोविन्द : नक्षत्रराय?

चाँदपाल : महाराज। मैले नै सुनें सबै आफ्नै कानद्वारा। मन्दिरमा रघुपति अनि युवराजले स्थिर गरेकाछन् सबै गुप्ती रुपले।

गोविन्द : हाय विधाता। स्थिर दुइपलमा भइगयो बन्धन जो जन्मभरको थियो सो चुँड़ाउन।

चाँदपाल : रक्त तपाईंको उनीहरु गएर देवीलाई अर्पणे छन्।

गोविन्द : देवीलाई अर्पण गर्नेछ? छैन दोष तब त यसमा नक्षत्रको। बुझन सकें सबै मैले। देवताको नाममा मनुष्य हराँउदछ कति पल्ट आफ्नो मनुष्यता पनि। जाऊ, तिमी गर काम आफ्नो। डर छैन, म रहनेछु सावधान, जागरुक अबदेखि।

[चाँदपालको प्रस्थान]

रक्त होइन, पुष्प नै तिम्रो निम्ति ल्याएको छु, महादेवी। भक्ति नै छ केवल, न हिंसा छ, अनि न छ विभीषिका नै-कि यस जगमा दुर्बल बड़ो असहाय छ, हाय जननी, बाहुबल बड़ो निष्ठुर छ, बड़ो क्रूर छ, स्वार्थ अनि लोभ छ निदारुण साह्रै अज्ञान नितान्त अन्धा, अनि गर्व गर्दछ क्षुद्र जो छ, रगड़िंदै उनका चरणमा। प्रेम-स्नेह रहन्छ बड़ा क्षीण वृत्तमा झर्दछ स्वार्थको कसौटीमा निमेष भर। तमले पनि कतै उठाएको छ खड्ग जननी, औ निकाली जिब्रो-अन्धकार चारै तर्फ छ। यसैकारण भाइ अब रहेन भाइ, सती पनि भएको छ देखे पतिको सहजै भिन्न भए शत्रु, वासगृह पनि मनुष्यको कलकिंत भएको छ। दया-पुण्यको बनवास हिंसाले गरेको छ। माता, अब त छाड़ यो छद्मवेश। भएको छैन के प्रल्यंकारी रुपनै रहने छ तिम्रो ? चारै दिशाबाट उठ्दछ जो खड्ग लक्ष्य गरी मेरो शिरप्रति चारै बाहुबाट उठने छ के त्यो तिम्रो नै ? त्यही हुनेछ। तब त त्यसो नै। मलाई लाग्छ, अब सायद यो हिंसाको आगो मेरो रक्तपात द्वारा नै निभ्ने छ। धरतीले सहन सक्ने छैन यतिको हिंसा। राज हत्या। वध ठूलाको सानो द्वारा। उरमा बड़ने छ वेदना समस्त प्रजाको सबै भाइहरुका प्राण रूनेछ पलमा। मेटिने छ हिंसाको मातृदेश मेरो रक्तद्वारा राक्षसीको रुप उसले प्रकाश पाउनेछ। हो यहि विधान यदि दयाको तिम्रो तब यसतो नै होस्-माता। इच्छा पूरा होस् तिम्रो।

[जयसिंहको प्रवेश]

जयसिंह : साँचो भन चण्डी, तिमीलाई राजरक्त चाहिन्छ ? भन अहिल्यै, भन तिम्रै मुखले भन मानवको भाषामा, भन आमा, तिमी चाँड़ै-के साँच्चै तिमीलाई राजरक्त चाहिएको छ ?

नेपथ्यबाट : त्यही चाहिएको छ मलाई।

जयसिंह : तब महाराज गर्नुहोस् इष्ट-देवताको स्मरण। निकट आइपुगेको छ अन्तकाल तपाईंको।

गोविन्द : भयो के, जयसिंह छ ?

जयसिंह ; आफ्नै कानले सुन्नुभएन तपाईंले ? सोधें मैले देवीसित कि राज-रक्त चाहिन्छ कि देवीले स्वयं भनी-त्यही चाहिन्छ मलाई।

गोविन्द : जयसिंह, देवीले भनेकी छैन केही पनि, रघुपतिको त्यही परिचित स्वर थियो-लुकेर उसले भन्यो त्यसो।

जयसिंह : भन्यो रघुपतिले ? छिपेर आड़बाट ? होइन, म एउटा शंकादेखि दोस्रोमा फंस्न चाहन्न सदा। जब जब किनारमा आइपुग्छ, त्यही बेला फेरि उसैले मलाई ठेलेर मझधारमा पुरयाउँदछ। त्यो कुनै अन्जान राक्षस हुनुपर्छ। अब होइन, अब धेरै होइन, उ गुरू हुन, अथवा हुन देवी-कुरा एउटै हो।

[छुरी निकालेर फ्याँक्छ]

फूल लेऊ आमा, लिइहाल, फूल लेऊ, पाउपर्छु, फूल द्वारा नै केवल तिम्रो मन सन्तोष होस्। अब होइन रक्त। रक्तपात होइन आमा अब! रक्त समान नै छ यो जवा फूल दुइ। मातृवक्ष चिरेर धरतीको काखमा यो फुलेको छ सन्ततिको रक्तपात द्वारा व्यथित मेदिनीका व्यथा द्वारा, प्रीति झैं। तिमीले जननी, लिनै पर्छ अवश्य नै।
तेज द्वारा तिम्रा भयभीत हुने छैन म। रक्त दिनेछैन, गर आँखा राता, खड्ग पनि हातमा उठाऊ, लौ बोलाऊ श्मशान संगीहरु पनि, डराउने छैन अब माता, म कसै सित पनि।

[गोविन्द मणिक्यको प्रस्थान]

[रघुपतिको प्रवेश]

रघुपति : मैले सबै कुरा सुनें, नष्ट भयो सबै चीज। हे अकृतज्ञ। तैंले के गरिस्?

जयसिंह : दण्ड देऊ मलाई प्रभु।

रघुपति : सबै त नष्ट तिमीले गारिहाल्यौ। फर्काइदियौ हत्या ब्रह्म श्रापलाई आधा बाटो देखि नै! बात गुरुको राखेनौ। व्यर्थ भयो देवीको आदेश। बुद्धि आफ्नो सम्झयौ सबै भन्दा ठूलो। अनि यस प्रकारले तिमीले चुकायौ स्नेह-ऋण जन्म-भरको।

जयसिंह : दण्ड देऊ पिता!

रघुपति : तिमीलाई भला दण्ड दिंऊ कुन?

जयसिंह : प्राण-दण्ड नै देऊ।

रघुपति : होइन, दण्ड त्यो भन्दा ठूलो चाहिन्छ तिमीलाई। देवीका चरण स्पर्श गर।

जयसिंह : यी स्पर्श गरें।

रघुपति : अब भन-राजरक्त म ल्याएर दिन्छु देवीका चरणमा श्रावणको अन्तिम रातमा।

जयसिंह : ल्याएर राजरक्त दिनेछु म श्रावणको अन्तिम रातमा देवीका चरणमा।

रघुपति : अब तिमी जाऊ, माता जननीले तिमीलाई बल प्रदान गरूच्न्।

# तृतीय अंक
## पहिलो दृश्य
### मन्दिर

(जन समूह। रघुपति र जय सिंह)

रघुपति : तिमीहरु यहाँ के गर्न आएका छौ ?

सबै : हामीहरु देवीको दर्शन गर्न आएका छौं।

रघुपति : अच्छा, देवीको दर्शन गर्न आएका हौ ? अहिले सम्म तिमीहरुका दुइ आँखा रहेका छन्‌त्यो पिता-पुरखाका पुण्य-प्रतापको कारणले नै रहेका हुन्। अब देवी यहाँ कहाँ छ र ? उ त राज्य छाडी हिंड़िसकिन्। तिमीहरुले देवीलाई राख्न कहाँ सक्यौ र ? उ त हिंड़िन्।

सबै : अहो, के अचम्भ ! त्यो के कुरा गर्नु हुँदैछ महाराज ! हामीहरुबाट के कसूर भयो ?

निस्तारिणी : मेरो भान्जा बिरामी थियो, यसकारण केही दिनदेखि म पूजा गर्न आउन सकेको थिइन।

गोवर्द्धन : मैले धेरै दिनदेखि आफ्ना दुइ बाख्रा देवीलाई चाढ़ाउनको निम्ति राखेको थिएं-यही माझ राजाले बलि नै बन्द गरिदिएपछि म के गरुँ ?

हारु : त्यो गंधमादन क्या, उसले आफ्नो भाकल देवीलाई चढ़ाएन, त्यसैले देवीले पनि उसलाई त्यसतै सजाय दिइन्। त्यसको फियो बढ़ेर कहाँ पुगेको छ, आज छ महीना भयो त्यो ओछ्यान परेको। यो पनि ठिकै भयो। हाम्रो महाजन त हो त्यो, तर के त्यसले देवीलाई धोखा दिन सक्छ र ?

अक्रूर : तिमीहरु चुप होऊ, बेकाममा खैला-बैला नगर। अच्छा पुजारी बाजे, देवी किन गइन् ? हामीहरुको के कसूर भयो ?

रघुपति : देवीलाई त तिमीहरु एक थोपो रगत दिन सक्तैनौ, के यही तिमीहरुको भक्ति हो ?

देहीमानिस : राजाका हुकुम भएपछि हाम्रो के लाग्थ्यो ?

रघुपति : राजा को हो ? के तिनीहरु सझन्छौ कि देवीका सिहांसन राजाको सिहांसन भन्दा निम्न छ ? यसतो सम्झयौ भने यस देवी-हीन देशमा आफ्ना राजालाई नै लिएर तिमीहरु बसम पनि हेर्दछु राजाले कसरी तिमीहरुलाई रक्षा गर्दछन्।

[डरले सबै आपस्तमा बात गर्छन्]

अक्रूर : चुप लाग। छोरा-छोरीले यदि कसूर गरे आमाले तिनलाई सजाय दिन्छन् तर एकै चोटि छाड़ेर जानु के यो आमाले गर्नु पर्ने काम जस्तो भयो र? भन्नुहोस के गर्नाले आमा फर्केर आउनेछिन्।
(सबै चूप भएर एक अर्काको मुख हेराहेर गर्छन्)

रघुपति : त तिमीहरु देवीको दर्शन गर्छौ? यता आऊ। तिमीहरु धेरै टाढ़ाबाट आशालिएर देवीको दर्शन गर्न आएका हौ, त एक पल्ट आँखा खोलेर हेरिहाल।

(मन्दिरको द्वार खोल्दछ । प्रतिमाको पछिल्लो भाग दर्शन हुन्छ)

सबै : अरे, यो क्या हो? देवीका मुख कता छ?

अक्रूर : अरे, आमाले त मुख फिराउनुभएछ।

सबै : देवी माता! सामने आऊ माता! सामने आऊ। एक पल्ट सीधा भएर उभ माता! कहाँ छौ माता! कहाँ छौ देवी! हामीहरु तिमीलाई फर्काएर ल्याउछौं आमा! हामीहरु तिमीलाई छाड़ने छैनौं। हामीहरुलाई राजाको जरुरत छैन, राजा कहिं पनि जावस्। मरोस्।

[जयसिंह रघुपतिको छेउ जान्छ]

जयसिंह : प्रभु! म के एक वचन पनि न बोलुँ?

रघुपति : अँह।

जयसिंह : सन्देहको के केही कारण छैन?

रघुपति : छैन।

जयसिंह : के सबै कुरा विश्वास गरौं?

रघुपति : हो।

[अपर्णाको प्रवेश]

अपर्णा : आऊ जयसिंह, यस मन्दिरलाई छाड़ेर हिंड़ शीघ्र।

जयसिंह : भएको छ दृश्य विदीर्ण।

[रघुपति, अपर्णा अनि जयसिंहको प्रस्थान]

[राजाको प्रवेश]

प्रजागण : रक्षा गर्नुहोस् महाराज रक्षा गर्नुहोस् हामी सबैलाई, देवीलाई फिराउनुहोस्।

गोविन्द : वत्सगण, सुन मेरा पनि इच्छा प्राणभित्रबाट यही छ जननीलाई म फर्काई ल्याँऊ, जसरी भए पनि।

प्रजागण : महाराजको जय हो, विजय सदा तपाईंको!

गोविन्द : याद दिलाँउछु एकपल्ट तिमीहरुलाई, आमाका गर्भबाट के तिमीहरु

सबै जन्मेझेनौ ? अनुभव तिमीहरु स्वयंले गरेका छौ भाइहरु, आमाका स्नेह-सुधाको, सुकोमल हृदयबाट हेरौं त, भन न एकपल्ट– "माता छैनन् ।" स्नेह आमाको सबैभन्दा पवित्र छ, पुरानो छ, सृष्टिको प्रथम पलमा थियो मातृ-स्नेह नै जागेर बसेका एकलो निदाउरो आँखाले काखमा राखी आफ्नो, तरूण संसारलाई । उसरी नै आज पनि छ बसेको मातृ-स्नेह त्यो बनेर धीरजको प्रतिमा । सहेका पनि छन् कति शोक-ताप, व्यथा-बेदना, कति अनादर, उपद्रव पनि कति । देखेका छन् आँखा साक्षी भाई-भाईका रक्तपात, निष्ठुरता, अविश्वास कति-फेरि पनि निः शब्द वेदना वहन गरी, बसेर उ दुर्बलहरुको निम्ति फैलाएर काखलाई, सबै कुराबाट जो निरुपाय, उसको निम्ति आन्तरिक स्नेह अनि प्रेमलाई लिएर। आज हामीहरु सबैले गरेका छौं अपराध के यस्तो ठूलो, जसद्वारा त्यो मातृ-स्नेह असीम अपार अचानक नै हरायो मातृहीन बनाएर, भन त मुख खोलेर यस्तो ठूलो हामीहरुले गरेका छौं अपराध के ?

देही मानिस : आमाको पूजा-बलि निषेध गर्नुभयो तपाईंले । बन्द भएको छ पूजा ।

गोविन्द : मैले बन्द गरें बलि, के जननी मेरो यही अभिमानले विमुख भई ? महामारी आउँदछ, हुन्छ अनाहार, अनावृष्टि, आगो लाग्दछ, रक्तपात हुँदछ-जननी तिमीहरुकी यस्तै छिन् ? पल-पल क्षीण हुने शिशुलाई रक्षा गर्दछिन् माता वक्षका दूध दिई आफ्ना-त्यो पनि के रक्त पिउनको लागि हो उसको ? ठाँउ जब दियौ मनमा निजको तिमीले आमाको यस्तो अपमान, त के आजन्म-का मातृ-स्नेह, स्मृतिलाई व्यथा केही भएन ? याद आएन आमाको मुखको पनि तिमीलाई ? जननी गर्जन्छे-रक्त मलाई चाहियो, मूक लाटा दीन-हीन जीव प्राण यमले काँप्तछ थर-थर-रक्तको पागलपनले दयाहीन नर-नारी चारै तिर नाँच्दछन् यही के हाम्री जननीको परिवार हो ? वत्सगण, चित्र के यही हो आमाका स्नेह को ?

प्रजा : मूर्ख हौं हामी, कुरा यति पनि नजान्ने ।

गोविन्द : जान्दैनौ ? शिशु जो छ चार दिनको सम्झन सक्तैन अरु केही पनि जो कुरो छ, त्यसले पनि जननीलाई मान्दछ आफ्नो । जान्दछ त्यसले पनि कि भयभीत हुदाँ अभय मिल्ने छ उसलाई माताको समीप नै, जान्दछ त्यो पनि जब भोक लाग्दछ, माताका वक्षमा भरिएको दूध उसको निम्ति, चोट लाग्द छ जब, माताको मुख हेरेर नै रुँदेछ त्यो । कस्तो भूलमा भड्कदैं मातालाई तिमीहरु सबैले भुल्यौ ? सम्झदैनौ माता त दयामयी छन् । सम्झन सकेनौ माता त दयामयी छन् । सम्झन सकेनौ पूजा जीव-रक्तद्वारा हुँदैन जीव-माताको, त्यो हुन्छ प्रीतिद्वारा ।

बुझ्न सकेनौ कि डर जहाँ हुँदछ, माता त्यहाँ टिक्सक्तिनन् हिंसा जहाँ हुंदछ, तहाँ माता ठहर्दिनन् रक्त जहाँ चुहंदछ, जननी वहाँ झार्दछिन् अश्रुजल आफ्ना। देखाँउ कुन प्रकारले मैले मातको हृदयमा कस्तो व्यथा देखेको छु, अनि कस्तो कातर करुणा, कस्तो भत्सर्ना अभिमानले भरिएको छल छल भएका नयनमा। यदि म कुनै उपायले देखाउन सकूं तिमीहरुलाई तिमीहरु पल-भरमा नै चिन्ने थियौ आफ्नी जननीलाई। कि मन्दिरको द्वारमा दीन भेषमा 'दया' आउँछ अश्रुजल द्वारा माताका सिंहासनको कलंक उसले पुछ्न-अनि रिसाएर माता उसै अपराध-ले छाड़ी गइन्-यही तिमीहरुले विचार गर्‍यौ?

[अपर्णाको प्रवेश]

प्रजा : महाराज! आँखा उघारेर हेर्नुहोस् जननीले सन्तानबाट मुख फर्काएकी छिन्।

अपर्णा : (मन्दिरको ढोकामा चढ़ेर) माताले मुख फर्काउनुभयो? आमा आउनुहोस् त छेउ हाम्रो, हामीहरु एक पल्ट हेरौं।

[मूर्त्तिलाई घुमाएर]

यहाँ हेर! जननी हाम्री फर्केर आइन्।

सबै : फर्की आइन् माता! साँच्चि कै फर्की आइन्! जय होस् जननी! जय होस् तिम्रो, जय होस्।

[सबै मिलेर गाँउछन]

गीत-८

हामीलाई छाड़ी रहन सकिन माता, तिमी रहन सकिनौ। विरह काखका शिशुको पनि तिमीले सहन सकिनौ। छन् अपराध अनेकौं हाम्रा, अश्रुपूर्ण नयन तिम्रो, पल-भर मात्र भयो, अन्तमा तिमी केही भन्न सक्तिनौ हामीबाट चरण छिनेर, मुख फर्काई रहन सकिनौ।

[सबैको प्रस्थान]

[जयसिंह र रघुपतिको प्रवेश]

जयसिंह : साँचो भनौं प्रभु, तपाईंकै यो काम हो?

रघुपति : साँचो किन भन्दिन? साँचो बोल्न के डराउँछु म? हो, काम यो मैले गरेको हो। मैले नै प्रतिमाका मुख घुमाएर उल्टा पारें। भन्न के चाहन्छौ? भन, तिमी आफ्ना गुरुका पनि गुरु भइगयौ। मेरो भत्सर्ना गर्छौ? कि कुनै उपदेश दिन्छौ मलाई?

जयसिंह : होइन, मेरो केही पनि भन्ने छैन।

रघुपति : केही पनि छैन? प्रश्न गर्नु केही छैन मसित? कि मनको सन्देह दूर गर्न गुरु-उपदेश तिमीलाई चाहिंदैन? मनमा विच्छेद के तिम्रो यति नै भयो? दूर तिमी यति भइगयौ? कि सुन, मूर्ख, देवी विमुख भएकिछन् साँच्चै नै, तर के यसको निम्ति प्रतिमाको मुख पनि घुम्नु हुँदैन? जो रक्तपात गर्दछ, मन्दिरमा म छु, त्यसलाई देवी पान गर्दछिन्, प्रतिमाले त सो कहिल्यै पिउँदिनन्। आँसू देवीको प्रकट हुँदैन कहिल्लै प्रतिमाको मुखमा। तर मूर्ख जो छ, उसलाई कुन प्रकारले बुझाउन सकूं? चाहँदछ उ नयनबाट हेर्न उसलाई जो देख्न सकिंदैन। सत्यलाई यसरी नै बुझ्नु पर्छ मिथ्याद्वारा। मूर्ख, सत्य होइन, सत्यको कुरो होइन सत्य, न हो विचार मात्र सत्य नै। सत्य कहाँ छ? न कसैले जान्दछ, उसलाई पाउन पनि सथ्ने छैन कहिं। सत्य त्यो यसबाट करोड़ौं मिथ्या रुपमा चारैतर्फ छरिन्छ। सत्य हो यसैले नाम मात्र महामायाको वस्तुतः अर्थ यसको हो महामिथ्या नै। राजेश्वर सत्य रंहदछ अन्तःपुरमा प्रतिनिधि-रूप मिथ्याले नै गर्ने गर्थ्यों काम-काज सबै तिर, उसको निम्ति शिरमा हात राखी बसेर सोचि रहने काम धरै ह प्रतीक्षा मेरो गरेर।

जयसिंह : जसले तरंग तटमा त्याउँदछ, फर्केर उसैले फेरि तानी लांदछ अतल मझधारमा। सत्य होइन, सत्य होइन, केही पनि सत्य होइन, सबै मिथ्या बस्, मिथ्या नै एक मात्र हो। प्रतिमामा देवी छैन भने छ त कहाँ? छैन उ कहिं पनि। कहिं पनि, हाय, देवी छैन। जो छ मिथ्या नै छ। मिथ्या तिमी धन्य हौ।

## दोस्रो दृश्य

### राज भवनको कोठा

[गोविन्द माणिक्य अनि चाँदपाल]

चाँदपाल : प्रजागण गर्दछन् यहाँ कुमन्त्रणा अनि वहाँ सेना मुगलहरुको बढ्दछै युद्धको निम्ति आसाम तिर-नजिक आइसके, दुइ-चार दिनमा आइपुग्ने छ यहाँ। प्रजागणले पठाउनेछन् सन्देश उता तपाईलाई हटाउनको निम्ति राज-सिहांसनबाट।

गोविन्द : मलाई हटाउनेछ? छ यति असन्तोष मसित?

चाँदपाल : विनय यो सेवकको सुन्नुहोस्, महाराज, प्रजालाई यदि यति राम्रो लाग्दछ पशु-रक्त, तपाई उनीहरुलाई दिनुहोस् त्यही। राक्षसी प्रवृत्ति यिनीहरु पशुबाट नै पाउन सकून् यदि चाहनु हुन्छ भने महाराज, उसलाई पाउन दिनोस्। भयले भरिए दृश्य रहदंछ सर्वदा, कहिले

के होला, यही चिन्ताले सताउँदछ।

गोविन्द : जान्दछु चाँदपाल, डर चारै तिर छ अनि राज-काजमा पनि। सरिता गहिरो छ, तर पनि तरीलाई तटमा लैजानै पर्छ। दूत के प्रजाका मुगलहरुकहाँ पुर्गसके?

चाँदपाल : अब त गइसके होलान्।

गोविन्द : चाँदपाल, तिमी जाऊ। बस मुगल शिविरको समीप नै। वहाँ हुँदछ जति कुरा, तिमी दिइबस त्यसका मलाई संवाद।

चाँदपाल : महाराज, तपाईं पनि यहाँ रहनुहोस् सावधान, शत्रु भिन्न-बाहिर छ।

[प्रस्थान]

[गुणवतीको प्रवेश]

गोविन्द : प्रिये, बड़ो सुक्खा, बड़ो शून्य संसार छ, भित्र अनि बाहिर छन् शत्रु सबै तिर नै। तिमी आऊ, छेवमा खड़ा होउ हाँसी-मुखले प्यार सहित केही बेर मलाई हेरिबस। अन्धकार, षडयन्त्र, विपद, द्वेषमाथि सुधामय तिम्रो आगमन होस् जस्तो घोर अन्धकार रातमा उदाएका चन्द्रमा। प्रिये, चुप किन छौ, अपराध विचार गर्ने के यही समय हो? तिर्खाएका नेत्र मरुमा हेर्दा आधमरो रहने छ, तिमी गयौ भने सुधा लिएर आफ्नो हातमा?

[गुणवतीको प्रस्थान]

हँड़िहाल्यौ हाय! यो दुर्बह जीवन हो।

[नक्षत्ररायको प्रवेश]

नक्षत्रराय : (आफैंसित) जहाँ जान्छु भन्दछन् सबै "राजा हुनेछौ तिमी? राजा हुनेछौ तिमी?" कुरा कस्तो अपठ्यारो! बस्दछु एकलै सुन्न पाउँदछु म त्यहाँ पनि-"राजा हुनेछौ तिमी, राजा हुनै छौ अवश्य पनि।" लाग्दछ कानमा बसेरा गरेको छ शुगाहरुले, जान्दछ जसले कुरा एउटै सदा रटनु-"राजा तिमी हुनेछौ? हुनेछौ राजा।" हिंड़ मान्दछु हुनेछु राजानै तर तिमीहरुमा के कोई राजरक्त ल्याएर मलाई दिन सक्ने छौ?

गोविन्द : रायज्यू!

[नक्षत्रराय छक्क पर्दछ]

नक्षत्र, भन, के मार्न नै मलाई चाहन्छौ? भन साँचो साँचो, तिमी मार्छौ के मलाई? कुरा यही रात-दिन मनमा तिम्रो के रहन्छ खेली? यसैलाई लिएर मनमा हाँसी हाँसी कुरा गर्दछौ तिमी मसित, पाउमा

प्रणाम गरी, लिन्छौ आशीष पनि, दिउँसोका। भोजनको समय एक अन्नद्वारा भाग लिन्छौ खानमा, राखी कुरो यही मनमा ? के हान्ने छौ छुरी मेरो छातीमा ? हे भाइ, जब तिमीलाई लागेको थियो कठोर यो मर्त्यका पदाधात पहिला तब अंगालेको थिएं मैले आफ्नो यस हृदयको समीप तिमीलाई । शून्य बनाई धराधाम जुन दिन जननी गईन् दूर सदाको निम्ति हात स्नेह द्वारा शिरमा राखी शेषबाट, तब पनि मैले नै हृदयमा लगाएको थिएं तिमीलाई। त्यसैले तिमी आज हान्ने छौ त्यही हृदयमा कठोर छुरी ? रगतको धारा हामी दुबैको बहन्छ शरीरमा एउटै-सदादेखि जो पिता-पितामहहरुबाट बहेर आइरहेछ, भाइहरुको एक एक नशामा-तिमी त्यही नशालाई काट, त्यही रगतलाई बहाउने छौ भूमि-तलमा ? बन्द गर्दछु ढोका म, लौ यो मेरो तलवार, हान झट्टै मेरो खुला छातीमा, पूर्ण मनोरथ होस्।

नक्षत्रराय : क्षमा गर दाई, मलाई क्षमा दान देऊ।

गोविन्द : आऊ नानी, आऊ, फर्की आउ यस छातीमा। माग्दछौ क्षमा ? तर मैले त दिइसकेको थिएं क्षमा तेती बेलै, जब मलाई संवाद मिलेको थियो यो। तिमीलाई क्षमा नगर्नमा म असमर्थ छु।

नक्षत्रराय : रघुपति दिंदछ कुसल्लाह बचाउनुहोस् महाराज तपाईले मलाई उसको कब्जाबाट।

गोविन्द : भाई, तिमीलाई डर अब छैन कसैको पनि।

## तेस्रो दृश्य

### अन्तः पुरको कक्ष

गुणवती : केही त भएको छ नै, आशा गरेको थिएं मनमा यदि केही दिन कठोर भएर म रहुँ प्रेमको तिर्खाले उ स्वयं आउनेछ बन्दी हुनको निम्ति। अहंकार यति थियो मनमा मेरो। मुख फर्काएर रहन्थें, बोल्दैनथें केही, आँसू आँखाबाट नखसाई शुष्क आँखा केवल, केवल अवहेलना-व्यतीत भए दिन कति यही तरहले। सुनेको छु, नारीका आँखाका समीप पुरुषका केवल छ शोभा-आभामय, छैन उनमा ताप, जसरी हीरामा निहित दीप्ति रहदंछ। धिक्कार छ यस्तो शोभा! कि वज्र झैं जो हुन्छ मेरा आँखा त प्रासादमा झर्ने थियो, तुरन्तै निद्रा भंग हुनेथियो महाराजको, चुर-चुर हुनेथियो राज-अंहकार, रानीको पूरा हुनेथियो महिमा। उत्पन्न भयो यो किन विश्वास कि मनमा रानी म हूँ ? म तपाईको चरणकी अधीश्वरी हूँ मन्त्र प्रतिदिन किन यो दियौ कानमा ? बताएनौ यो किन म हूँ क्रीतदासी, किंकरी हूँ केवल राजाकी, रानी म होइन, तब आज मलाई सहसा सहन पर्ने

थिएन यो चोट, यो वेदना।

[ध्रुवको प्रवेश]

जांदछौ तिमी कहाँ?

ध्रुव : मलाई राजाले बोलाएका छन्।

[ध्रुवको प्रस्थान]

गुणवती : यो त्यही बालक हो राजाका हृदयको रक्त। अरे नानी, तैंले नै चोरेको छस् त्यो आसन, जो मेरो कोखका नानीको थियो। आएन नानी मेरो, तैंले यो सितै उसका पिताका स्नेहमा बाँड़ेको छस्-भाग। राजाका हृदय-सुधा-पात्रबाट पनि तैंले नै प्रथम अञ्जलि लिएको छस्-जब कतै आउनेछ राज पुत्र, तेरो नै प्रसाद उसले पाउनेछ। माता महामाया, यो कस्तो अविचार हो। खेल हो तिम्रो यति नै, हो सृष्टि यति, खेलै-खेलमा मलाइ एउटा शिशु देऊ न देऊ, दिहाल जननी, कि काख मेरो भरिएर आवोस-राम्रो तिमीलाई जे लाग्छ, दिनेछु उही माता म।

[नक्षत्रायको प्रवेश]

नक्षत्रराय : होइन, होइन, मलाई न पुकार।

गुणवती : के भयो?

नक्षत्रराय : राजा म हुने छैन।

गुणवती : राम्रो, तिमी न होऊ, तर यसको निम्ति यतिका कुदी-कुदाव केको?

नक्षत्रराय : राजा चिरंजीवी होऊन्, रहनेछु म युवराज नै, अनि जब मर्दछु म, यही रुपमा।

गुणवती : ठीक छ, मर तिमी। मर तर चाँड़ै नै। पूरा होस-मनोरथ तिम्रो। मैले त तिमीलाई पाउ समाएर राखेकी छैन।

नक्षत्रराय : अच्छा भन, भन्नु तिम्रो के छ?

गुणवती : तिम्रो जो मुकुट चोरी हुँदैछ त्यो चोर, उसलाई पथबाट हटाऊ। बुझ्यौ कि बुझेनौ?

नक्षत्रराय : बुझें, तर यही बुझ्न सकिंन, चोर चाहिं को हो?

गुणवती : तिम्रो त्यो ध्रुव नै, पालिएको छ जो महाराजको काखमा, अनि दिनदिनै बड़िरहेछ मुकुटको तर्फ।

नक्षत्रराय : अरे, साँच्चै, कुरा यसतो हो? अब मैले बुझें सबै। मैले देखेको छु, शिरमा ध्रुवको मुकुट, तर मैले त खेल संझेको थिए त्यसलाई।

गुणवती : खेल यो मुकुटको काल-क्रीड़ा झैं छ भयानक, यसलाई चूर चूर पार, नत्र स्वयं तिमी नै कुनै दिन यसको खिलौना बन्नेछौ।

नक्षत्रराय : ठीक भन्दछौ, यो खेल छैन राम्रो।

गुणवती : आधा रातको समय तिमी उसलाई आज नै मेरो नाममा गर निवेदन चरणमा देवीको, तर गुप्त रुपले-कि त्यसको रक्तद्वारा निभ्ने छ नेत्र-अग्नि महामायाको, स्थायी हुनेछ सिहांसन यस राजवंशमा-पुरखाले गर्नेछन् सबै मंगल-कामना। कुरा बुझ्यौ ?

नक्षत्रराय : मैले सबै कुरा बुझें।

गुणवती : तब जाऊ, गर उसै जो बताएको छु मैले स्मरण रहोस् कि बलि मेरो नामबाट होस्।

नक्षत्रराय : त्यसै गर्ने छु। यो कस्तो सर्वनाश हो। खेलाड़ी राजाको मुकुटसित। जननीको तृप्ति रक्षा, राज्यको आशीष पूर्वजनका। बस्-बस्, बुझें मैले कुरा सबै नै।

## चौथो दृश्य

### मन्दिरका सिंढ़ीहरु

जयसिंह : देवी, तिमी हौ। अवश्य नै हौ। बनी रहू सीमाहीन यस रजनीको अन्तभागमा केवल कणिका पनि बनेर रहूं त भन क्षीणतन स्वरमा पनि मलाई कि "वत्स हूँ।" होइन, होइन, होइन, देवी छैन कतैपनि यहाँ। होइनौं, तर दया गरेर रहू। अरे मायामयी मिथ्या, जयसिंह प्रति कृपा गर। शिशुकालदेखि चलेको भक्ति, जन्मकालेदेखि बनेको प्रीति पनि दिनसक्तैन जीवन तँलाई। तँ पनि ठूलो मिथ्या हाय! जयसिंह, जीवन दिएको छ यो कसलाई-सत्यहीन, दयाहीन, मात्रृहीन मरुमा, महाशून्यमा नै तैंले पयाँकिस्-उसलाई।

[अपर्णा को प्रवेश]

तँ फेरि आइस् ? बार बार तँलाँई मन्दिरको बाहिर निकालें मैले, फेरि पनि घुम्दछे, फिर्दछे सदा नै आसपासमा सुखको दुराशा समान दीन मनमा। यही सायद सत्य अनि मिथ्याको प्रभेद हो। मन्दिरमा राख्दछ मिथ्यालाई बड़ो यत्नसित, रहेर पनि त्यो रहंदैन वहाँ। सत्यलाई निकाल्दछ बड़ो अनादरसहित मन्दिरदेखि बाहिर, तर फर्की फर्की त्यो फेरि आँउदछ। अपर्णा, नजाऊ तिमी अब निकाल्ने छैन तिमीलाई यहाँबाट। आऊ त, बसौं हामी दुइ यहाँ। भएको छ बहुतै रात। उदाएको छ शशांक शुक्ल पक्षको वृक्ष-अन्तरालमा। चराचर सुषुप्त छ निद्रा-विहीन हामी दुवै नै बस् यहाँ छौं। अपर्णा, विषादमयी, तँलाई पनि मायाका देवताले के छलेर गएको छ? भला मलाई आवश्यकता नै के छ र देवताको? किन उसलाई हामी बोलाउनु

यस सानो सुन्दर आफ्नो सुखको संसारमा ? बुझदछ के उसले हाम्रो व्यथा ? न पत्थर झैं हेरि रहन्छ केवल उ। आफ्ना भाइहरूका प्रेम छिनेर, त्यही प्रेम दिंदछौं हामीहरु उसलाई-तर उ कुनै काममालाग्छु के उसको ? सुन्दर, सुखदायिनी धटिरत्रीबाट मुख घुमाएर हामी उसलाई हेरिरहंदछौं तर उसले हेर्दछ कहाँ ? निकट उसको मान्दछु क्षुद्र पनि छ, तुच्छ पनि छ, तर फेरि पनि उ हो हाम्रो माता धरति किरा झैं छ उसको समीप, फेरि पनि हो भाइ आफ्नो। अंध-रथ-चक्र-तलमा अति अवहेलनासित जाँदछ कुल्चेर जसलाई, ती कुल्चिएका अनि उपेक्षित जन, सबै हाम्रा आफ्नै हुन। आउ भाइ, देव-हीन भएर बिना भय हामीहरु सबै रहौं। अनि आपस्तमा बाँधिएर।रक्त चाहिन्छ तिमीलाई ? यसैकारण तिमी स्वर्गका छोड़ी ऐश्वर्य आयौ यस धरातलमा ? मानव छैन वहाँ, जीव छैन कोई पनि रक्त पनि होइन, न व्यथा पाउने कोई छ-यसैले के स्वर्गदेखि अरूचि भयो तिमीलाई अनि तिमी आएकी छौ यहाँ शयर गर्न मानव क्षुद्र-परिवारले रचेको छ जहाँ निर्भय विश्वास-सुखसित बसेरा आफ्नो। बालिका, अपर्णा, यहाँ कुनै देवी छैन।

अपर्णा : तब जाऊ अन्यत्र यस मन्दिरलाई छाड़ी।

जयसिंह : जानेछु, अवश्य जाउनेछु म यसलाई छाड़ी, हाय रे अपर्णा, जानु नै परेको छ मैले। फेरि पनि आजन्म जुन राज्यमा छु म, जान सक्नेछु राज-कर उसको चुकाएर नै। रहन देऊ यी सबै कुरा। हेर ताकेर, पुलकित गोमतीको शीर्ष जल-रेखा हो ज्योत्सनाका किरणले कल्लोल-रव उसको एउटा नै हो जस्तो सय सय वार भन्दछ। नभभा छ अर्द्ध-चन्द्र-पँहेलो भएको छ उसको मुख-छवि क्षीण भएको छ अति श्रान्ति द्वारा धेरै दिनदेखि मानो रात्रि-जागरणले निद्रा-भरि आँखामा झमक-झमक पर्दा बन्द हुँदछ। कति सुन्दर छ संसार। हा, अपर्णा, तर यस्तो रातमा छैन देवी। न रहोस्-भला ! अपर्णा के तँ जान्दछस् कुनै कुरो सुखको अमृतमय ? बस् उसैलाई भन तँ। सुनेर जसलाई मग्न होस् पल भरमा म पातालमा, कि शोक-सुर्त्ता भुल्न सकूं सबै। कति मधुर छ मरण, यो स्वाद पनि, पहिल्यै अनुभव गरौं। तँ अपर्णा मधु-कंठले आफ्नै मधु-नयनले मलाई हेर्दै, सारा जगत जब सुखको निद्रामा हुन्छ सुतेको, यो जनहीन, स्तब्ध-रजनीको छायामा, भन हे अपर्णा यस्तो कुरा, सुनेर जसलाई लागोस-कि चारै तर्फ केही छैन, केवल छ प्यार वहि रहेको सबै तिर नै, पूर्णिमाको सुतेको रातमा सबै दिशामा रजनीगंधाको मृदु सौरभले भरिएको हुन्छ।

अपर्णा : हाय जयसिंह, केही पनि भन्न सक्तिंन, यद्यपि छ मनमा कुरा कत्ति।

जयसिंह : आऊ, तब अझ नजिक आऊ तिमी, मनबाट नै मनको कुरा होस्। तर यो के गर्दछु म! हे अपर्णा, हिंड़िहाल तँ मन्दिरबाट। यसतै आदेश छ मेरा गुरुको।

अपर्णा : निष्ठूर नबन जयसिंह, तिमी यति बार बार मन्दिरबाट मलाई न निकाल। कति सहेको छु मैले, अन्तर्यामी जान्दछन्।

जयसिंह : तब म जान्छु। यहाँ बस्ने छैन एक पल पनि।

[केही दूर गएर फेरि फर्कन्छ]

अपर्णा, म निष्ठूर हूँ। यही कुरा मनमा रहने छ, म निष्ठूर कठिन हूँ? हाँसेर के कुरा मैले गरेको छैन कहिले? के कहिल्यै बोलाएको छैन नजिक तिमीलाई मेरो। के कहिल्यै खसालेको छैन आँसू मैले, देखी अश्रुजल नयनको तिम्रो? आँउदैन याद कुराहरुका यी सब। कुरा यो जागिरहन्छ मनमा रहनेछ "-जय निष्ठूर, पाषाण छ। जस्तो छ पाषाण यो चित्र पत्थरको, भन्दथ्यौं देवी हामी अहिले सम्म जसलाई।" हाय देवी साँच्चै हुन्थिस् यदि देवी तँ तब तँलाई थाहा हुने थियो हाम्रो अर्न्तदाह।

अपर्णा : बुद्धिहीन, दुःखी यो क्षुद्र नारी हृदय हो यसलाई क्षमा गर अनि जाऊ जयसिंह तिमी, आऊ, हामी दुइ यस मन्दिरलाई छाड़ी हिंड़ौ कतै।

जयसिंह : अपर्णा, रक्षा गर मलाई तिमी। मलाई यहीं छाड़ी जाऊ कतै गरी दया। जीवनमा एउटा अझै काम शेष मेरो छ, उही मेरो जीवनको स्वामी हो, न उसको स्थान छिन्नु तिमीले, यही निवेदन छ।

[शीध्रतापूर्वक प्रस्थान]

अपर्णा : सयं सय सहें आघात मैले, आज किन सहन असमर्थ हु? प्राण चुँड़िरहेछ किन?

## पाँचौ दृश्य

### मन्दिर

[नक्षत्रराय, रघुपति अनि सुतेको ध्रुव]

रघुपति : रोई रोई निदाएको छ। यसको समान नै पितृ-मातृहीन जयसिंह मेरो काखमा शैशवमा आएको थियो। रोएको थियो यसरी नै चारै तिर देखेर सबै नयाँ नयाँ। हताश्वास, शोक-श्रांत यसै प्रकारले साँझ भए पछि त्यो सुतेको थियो देवीको चरणको समीप। यसैकारण यसलाई देखेर त्यो शिशु-मुख याद आउँदछ अनि याद आउँछ त्यो शिशुको रोदन।

नक्षत्रराय : अब धेरै विलम्ब नगर्नुहोस पुजारीजी, डर छ, न जाने, कहिले राजाले सबै पत्तो पाउनेछन्।

रघुपति : कसरी थाहा पाउने? दिशाहरु सबै तर्फ निद्राले रातलाई घेरेको

छ।

नक्षत्रराय : एक बार तर थाहा भयो जस्तो कि छाया देंखे कसैको।

रघुपति : छाया त्यो आफ्नै डरको थियो।

नक्षत्रराय : रोएको स्वर सुने जस्तो लाग्छ मलाई।

रघुपति : आफ्नै हृदयका। छाड़ यो चिन्ता, आऊ हामी दुवै मिलेर सोमरस पिंऊ, दूर निरानन्द होस्।

[दुवै मदपान गर्छन्]

मनोभाव जब सम्म रहन्छ मनमा तब सम्म त्यो देखिन्छ अति ठूलो झैं, कार्यरुपमा तर बहुतै सानो हुँदछ, जसरी उड़ेर जान्छ वाफ धेरै तब बाँच्दछ एक थीपो नै पानी। कुरो केही पनि होइन, पल-भर को छ काम। जलिरहेको प्रदीपलाई एक फूःमा नै निभाउने समय लाग्दछ। अलिकता यो प्राण-रेखा पलमा लीन हुनेछ निद्रामा नै अनि गहीरो निद्रामा जसरी चम्कंदछ सावनको रातमा विजुली। परिरहने छ तर राज-दभंमा वज्र सदा उसको। भला युवराज, किन मलीन भएर चुपचाप एक कुनामा बसेका छौ? कुरा छैन मुखमा, न रेखा हँसीको नै छ ओठँमा, यसरी ओइलाएर बसिरहेछौ। आऊ, हामीहरु आनन्दरस पिऊँ।

नक्षत्रराय : भयो विलम्ब अति नै। म त भन्दछु, आज यो काम रहन दिऊँ। गर्नेछौं भोलि पूजा।

रघुपति : भयो विलम्ब अवश्य नै रात शेष हुनेवाला छ।

नक्षत्रराय : पद-ध्वनि सुन्नुहोस्।

रघुपति : कहाँ? म त केही पनि सुन्न सक्तिन त!

नक्षत्रराय : हेर्नुहोस् उज्यालो त्यो, त्यो शब्द सुन्नुहोस्।

रघुपति : पाइसक्यो होला सम्वाद राजाले सायद, तब त अब एक पल्लाको विलम्ब पनि उचित छैन। (रघुपति जय महाकाली भनी तलवार उठाँउछ। उसै बेला वेगसित गोविन्द माणिक्य अनि प्रहरीगण प्रवेश गर्छन्। राजाको आदेश अनुसार प्रहरीगण रघुपति अनि नक्षत्रलाई पक्रन्छन्।)

गोविन्द : कारामा यिनीहरुलाई लैजाऊ, हुनेछ न्याय यिनीहरुका।

# चतुर्थ अंक

## पहिलो दृश्य

डगोविन्द माणिक्य, रघुपति, नक्षत्रराय, सभासदगण अनि प्रहरी आदि.

गोविन्द : (रघुपतिसित) अरु केही भन्नु छ?

रघुपति : छैन, केही पनि छैन।

गोविन्द : अपराध स्वीकार?

रघुपति : अपराध? हो, गरें अपराध मैले अवश्य। देवीका पूजा गर्न सकिन साङ्गे। मोह-मूढ़ भई गरें मैले विलम्ब-दण्ड त्यसको दिरहिछ देवी, तिमी त निमित्त मात्र हौ।

गोविन्द : सुनून सबैले, यो नियम मेरो हो—पवित्र पूजाको छलद्वारा जो मोह-मूढ़ नर देवतालाई जीव बलि दिंदछ, या उद्योग पनि यसतर्फ गर्छ, अवहेला गरी राजाका आज्ञा, मिल्नेछ उसलाई दण्ड निर्वासन रघुपति आठ वर्ष तिमीले निर्वासित भई रहनु पर्नेछ-दूर यस राज्य सीमादेखि, सैनिक हाम्रा चार तिमीलाई छाड़ी आउनेछ।

रघुपति : घुँड़ा न टेकेको छु मैले कसैको सामने छोड़ेर देवीलाई। म ब्राह्मण हूँ, तिमी हौ शूद्र, फेरि पनि म आज दुवै हात जोड़ी टेकी घुँड़ा गर्दछु यो प्रार्थना तिमीसित कि मलाई समय दुइ मात्र दिनका श्रावणका शेष दुइ दिनका देऊ, फेरि त म प्रथम प्रभातमा शरदको स्वयं नै छाड़ी तिम्रो अभिशप्त अनि दग्ध यो राज्य, जै जानेछु हेर्ने छैन यता फेरि।

गोविन्द : राम्रो कुरो हो, दुइ दिनको अवसर दिंदछु।

रघुपति : महाराज! राज-अधिराज! महिमाका तिमी सागर हौ, हौ कृपाको अवतार। धूलोभन्दा पनि हूँ म अधम, दीन अनि हूँ अयोग्य पनि।

रघुपति : नक्षत्र, स्वीकार गर अब अपराध तिमी।

नक्षत्रराय : महाराज! अपराधी हूँ म। न साहस छ यति कि भीख माग्न सकुँ म क्षमाको पनि।

[पाउमा पर्दछ]

गोविन्द : भन, कसको कुमन्त्रणमा परेर तिनीले दिएका थियौ हात यस खराब काममा? कोमल स्वभावको हौ तिमी, बुद्धि यति कठिन छैन तिम्रो।

नक्षत्रराय : अरु कसलाई दिऊँ म दोष? यो पापी मुखबाट म अब आफ्नो नाम कसैको लिने छैन। एक मात्र म नै हूँ अपराधी। म कुमन्त्रणमा आफ्नो आफैं परेको छु। यो बुद्धिहीन भाईको अपराध तपाईंले क्षमा

गर्नुभयो अनेकौं। उसरी नै यस पल्ट पनि मलाई क्षमा गर्नुहोस्।

गोविन्द : पाउ छाड़ेर नक्षत्र उठ, कुरा सुन, क्षमा गर्नु के मेरो वशमा मात्र छ? न्यायकर्त्ता आफ्नै शासनमा बद्ध छ, बन्दीभन्दा पनि अधिक बन्धनमा छ उ त। एक व्यक्ति दण्ड-भागी जुन अपराध ले हुंदछ, दोस्रोले त्यसैबाट छुटकारा पाउँदछ, क्षमता छैन यस्तो स्वयं विधातामा मेरो कुरा के हो कुन खेतको म मूला हूँ?

सबै : क्षमा गर्नुहोस् महाराज। भाई यो तपाईंको।

गोविन्द : शान्त होऊ तिमीहरु। छैन कोई भाई या हितैषी-मित्र मेरा, जब सम्म अवस्थित छु यस न्याय-आसनमा म। अपराध त भइक्य प्रमाणित। त्रिपुर-राज सीमाबाट अघि बढ़े राजगृह स्थान तीर्थ छ, गएर त्यहाँ नै नक्षत्ररायले वस्तुत पर्नेछ आठ वर्षको अवधि सम्म निर्वासन। (प्रहरीगण नक्षत्र रायलाई लिएर जान चाहन्छन्। राजा सिंहासनदेखि तल झर्दछन्) दिएर जाऊ आलिंगन यस विदाको बेला, भाई यो दण्ड त एकलो न तिम्रो हो, यो मेरो पनि हो। काँड़ाका तीखा सुइरो झैं घोच्ने छ आजदेखि नै राजगृहले मेरा हृदयमा। मेरो आर्शीवाद सदा साथ तिम्रो छ जति दिन सम्म रहनेछौ टाढ़ा मदेखि देवता रहनेछन् सदा रक्षक बनी।

[नक्षत्रका प्रस्थान]

[सभासद प्रति]

अब तपाईंहरु सबै राज-सभा छाड़ी जानुहोस् केही बेर सम्म म चाहन्छु एकान्त।

[शीघ्र पूर्वक नयनरायको प्रवेश]

नयनराय : महाराज! भयानक विपद आइलागेको छ।

गोविन्द : के राजा मनुष्य होइन? हाय विधाता, उसको हृदय छ अतिशय दीन अनि दरिद्रको जस्तो तिमीले टटोलेनौ? दुःख उसलाई दिन्छौ सबै समान, बस के दिंदैनौ अवसर आँसू नै खसाल्ने? के छ विपद, बताऊ मलाई शीघ्र नै।

नयनराय : मुगलहरुका सेनाका साथ चाँदपाल त्रिपूरा नाश गर्नको निम्ति आइरहेछ।

गोविन्द : यो होइन नयनराय, तिमीलाई उचित हैन। चाँदपाल शत्रु हो भने, यसले त उसैको विपद छ।

नयनराय : छ तपाईंले दिएको दण्ड यस अनुगतलाई धेरै, तर अविश्वास आज यो सबैभन्दा ठूलो दण्ड लाग्दछ मलाई। के भयो त दूर हूँ तपाईंको चरण-कमलदेखि, के यसैको निम्ति हुनेछ मेरो पतन यति ठूलो।

गोविन्द : एक पल्ट फेरी भन सबै कुरा मलाई ठीक सित ता कि म सोच्न

सकूँ, बुझ्न सकूँ।

नयनराय : मुगलहरुलाई साथ दिएर चाँदपाल चाहन्छ तपाईंलाई हटाउन त्रिपुराको सिंहासनबाट।

गोविन्द : प्राप्त भयो समाचार यो तिमीलाई कसरी ?

नयनराय : जुन दिन प्रभुले गर्नुभयो निरस्त्र मलाई अस्त्रहीनताका लाज छोप्न-को निम्ति म हिंडे देशान्तर। गएर सुनें वहाँ, मुगलहरु सित छेड्न प्रस्तुत छ आरामको युद्ध अति शीघ्र। हिंड़े म तुरन्तै नै सैनिकको पद मांग्न वहाँको राजालाई। देखें मार्गमा नै वाहिनी मुगलको ठूलो आइरहेको त्रिपुरातर्फ अनि साथमा चाँदपाल ज्ञात भयो सोध-पुछ गरी उसको उद्देश्य के हो-अनि तब म कुदेर आइरहेछु तपाईंको पदमा!

गोविन्द : भयो के सहसा यस संसारमा, दुइ चार दिन मात्र त भएको छ के विधि हो! धरतीको कुन स्थानमा छिद्र-पथ छ निस्कियो जहाँबाट समस्त नाग-वंश नै आइरहेछ बाहिर सहजै रसातलमा पृथिवीका चारैतर्फ फणा फैलाएर। आइपुग्यो प्रलयको काल साँच्चै के तर यहाँ समय छैन ढलपलको, सेनापति, सेना तयार गर तिमी शीघ्र नै।

## दोस्रो दृश्य

### मन्दिरको आगंन

(जयसिंह अनि रघुपति)

रघुपति : गर्व नष्ट भयो, तेज सेलायो, ब्राह्मणत्व पनि हरायो। नानी, अब गुरू होइन तिम्रो म। हिजो मैले गौरवसित गुरुको दिएं तिमीलाई संशय-रहित आदेश, तर आज छ अधिकार मेरो केवल भीख माग्ने मात्र अनुनय सहित। कि दीप्ति मेरो नयनको निभेको छ, जसले बलेको छु म तुच्छ ठान्दथें ज्योति अतुल ऐश्वर्यको, तुच्छ सम्झन्थें सदा राजाका प्रतापलाई। नक्षत्र जो ओइलिएको, छ, छ ठूलो उ भन्दा माटोको प्रदीप। खोज्दछ उसलाई घुमीघुमी माटोमा हेर्दै परिहास गर्दै, तर खोजेर पनि पाउन सक्ने छैन कहिल्यै। दीपक प्रतिदिन निभ्द छ, जल्द छ पनि तर तारा एक पल्ट निभेपछि, हुंदछ अन्धकार—सदाको निम्ति। म त्यही चिर दीप्तिहीन हूँ, छ आयु अल्प नै, देवताका अति क्षुद्रदान, त्यहाँ बाट नै राज-द्वारमा घुँड़ा टेकी भीख मागेर मैले केवल दुइ दिन मात्रको अवधि पाएं। जयसिंह, दुइ दिन आफ्नो कलंक मेटी मर्न पाऊँ। दुइ दिन यो कालो मुख आफ्नो रंगाएर राज-रक्तद्वारा व्यतीत होस्। चुप किन छौ नानी, होइन तिमीलाई आदेश गुरूको यो, फेरि पनि हूँ पालेको तिमीलाई बालककालदेखि

मैले, मूल्य के छैन अलिकति पनि मेरा अनुरोधको? पितृहीनका पिता भएर होइन के पिता भन्दा पनि अधिक म तेरो निम्ति? दुःख छ यसको मलाई यस प्रकार तलाँई याद दिलाउन परयो। सहन सकिन्छ कृपा-भीख, तर जो अभागा भीख प्यारको माँग्दछ, भिक्षुक भन्दा पनि अधम त्यो हो भिक्षुक। छस्-नानी अहिले सम्म चुपचाप? तब एक पल्ट घुड़ाँ यो टेक्न परोस्। आएको थियो काखमा तब यति सानो थियो सानो घुँड़ा भर, त्यसैले आज सामने यो घुँड़ा टेकियोस्। म पुत्र, भिक्षा मांग्दछु।

जयसिंह : पिता, यस उदास हृदयमा बज्र न हान्नुहोस्। देवी राजरक्त चाहन्छे त उनलाई त्यही दिन्छु म। जो चाहन्छ, सो सबै। त्यसतै हुनेछ पिता, चुकाएर सबै ऋण म जानेछु।

रघुपति : राम्रो कुरो हो, तब गर त्यसै। देवी चाहन्छे, यसै कारण दे उसलाई। म होइन कोइ पनि। हाय, अकृतज्ञ, देवीले के गरिन तेरो निम्ति? पालिन शिशुकालदेखि? रोग लाग्न साथ तेरो सेवा? अनि के भोक लाग्दा कहिले दिइन-अन्न पनि? ज्ञानको तिर्खा थिइन मेटाएकी? अन्तमा यही अकृतज्ञताको व्यथा हृदय फैलाएर के लिइन् देवीले? हे कलिकाल! हुन देऊ।

## तेस्रो दृश्य

### राज भवनको कोठा

[गोविन्द माणिक्य बसेका छन्। नयनरायको प्रवेश]

नयनराय : महाराज, भएको थियो सैनिक बिद्रोही जो फर्काएर ल्याएको छु उसलाई, कि रण-सज्जा पनि प्रस्तुत छ। दिनुहोस् आदेश बढौं अब म। दिनुहोस् आशीष।

गोविन्द : हिंड़ सेनापति, हिंड़दछु म पनि संग तिमीहरु सबै नै युद्ध-भूमिमा।

नयनराय : प्राण जब सम्म यस दासको शरीरमा महाराज, तब सम्म तपाई अलग रहनुहोस् सम्मुख विपत्तिको।

गोविन्द : सैनापति हे! सबैको विपत्तिको जति अंश, त्यसबाट म लिन चाहन्छु अंश आफ्नो, अनि सबैभन्दा धेरै छ मेरो राज-अंश। आऊ सैनिकहरु मलाई लेऊ तिमीहरुको माझ। सिहांसनको दूरस्थित चुचुरामा निर्वासित गरेर वंचित समरको गौरवदेखि नगर आफ्नो नृपतिलाई, जो भिन्न छैन तिमीदेखि।

दूत : पथदेखि मुक्त, गरेको छ मुगलको सेनाले जाँदै गरेको निर्वासनमा नक्षत्राय लाई। राज-पदमा अभिषेक भयो उसको साथमा लिएर सेना आइरहेछ राजधानी तर्फ।

गोविन्द : दूर भयो टंटा, अब भय के कुराको ? दूर भयो युद्धको विभिषिका पनि साथ साथै।

[प्रहरीको प्रवेश]

प्रहरी : आएको छ एउटा पत्र विपक्षको शिविरबाट।

गोविन्द : हातको लेखाइ नक्षत्रको छ। सायद होला शान्तिको सन्देश ! यही स्नेहको पुकार हो। यो त न भाषा हो नक्षत्रको। चाहंदछ निर्वासन मेरो, या त रक्त-स्रोतमा उसले वगाउनेछ यस त्रिपुरा सूनको देशलाई गर्नेछ भष्म, त्रिपुराकी नारीहरु वन्दिनी हुनेछन्, मुगलको अन्तःपुरमा-हेरौं, हेरौं, हो, यही त लिपि हो नक्षत्रको महाराज गोविन्द माणिक्य महाराज, हो, हेर सेनापति, यहाँ हेर राजदण्डद्वारा निर्वासित जो भएको थियो, दिएको छ अब उसले राजालाई नै निर्वासन-दण्ड ! लीला-विधिको कस्तो छ विचित्र।

नयनराय : निर्वासन! यो कत्रो दुस्साहस! युद्ध त छैन भएको शेष अहिले।

गोविन्द : यो त होइन सेना मुगलहरूको। यो त त्रिपुराका राजपुत्रले गरेको छ राजालाई मान। यसको निम्ति किन युद्ध हुने।

नयनराय : राज्यको मंगल।

गोविन्द : हुन्छ के मंगल राज्यको ? खड़ा भएर मुखा-मुख भाई, भाईको हृदय लक्ष्य गरेर मृत्यु मुखी छुरी हान्नेछ, यसले हुनेछ के मंगल राज्यको ? राज्यमा के केवल छ सिहांसन मात्र-यहाँ छ गृहस्थीहरुका घर, छैन भाई या भाईचाराको बन्धन पनि छैन यहाँ ? हेरौं, एकपल्ट फेरि हेरौं, के यो हो उसैको लिपि ? यो कुरो उसको होइन। म हूँ दस्यु, म हूँ देव-द्वेषी, न्यायहीन हूँ, म हूँ यस राज्यको अमंगल। होइन, होइन, कुरा यो उसको होइन, जसको नै होस् अक्षर किन्तु उसैको हो। उसैले त आफ्नो हातले यी कुरा लेखी पठाएकाछन्। विष उसले चाहे जुनै सर्पको किन न होस्, उसले नै आफ्नो अक्षरको टुप्पामा लपेटेर, मेरो छातीमा हानेको छ-विधि, दंड यो त उसले होइन, छौ दिएको तिमीले पनि मलाई। निर्वासन मेरो। यही होस्-, कि म त उसको भएर नै, शीर झुकाएर, चूप भएर सहने छु निर्वासन दण्ड उसले दिएको।

# पञ्चम अंक

## पहिलो दृश्य

[स्थान-मन्दिर। बाहिर आँधी चलिरहेछ]

[पूजाका सामग्री लिएर रघुपतिको प्रवेश]

रघुपति : यति दिन पछि सायद जागेकी छे देवी। त्यो भयानक हाँक! श्राप दिंदै दौड़ंदै गइरहेछ तिमिर स्वरुपिणी नगर माथि। सायद यो संगिनी तिम्रो छ प्रलयको, जो भीषण भोकको ज्वालाले विश्व-महावृक्षलाई हल्लाइरहेको प्राणपण। म आज दीर्ध उपवास यो तोड़ि दिनेछु तिम्रो। हाली सन्देहमा भक्तहरुलाई अहिले सम्म तिमी कहाँ थियौ देवी? खड़ग आफ्नो यदि आफैं तिमी उठाउंछौ भने म के त्यो उठाउन सक्नेछु? कवि आनन्द छ आज मलाई तिम्रो यो चण्डी रुप देखेर। मानेका थियौ जसलाई, मस्तक जो नत थियो, तेज पाएर नवीन त्यो उच्च उठेको थियो। सुन्न सक्दछ पद-शब्द उ, आइरहेछ पूजा तिम्रो। महादेवी! तिम्रो जय जय होस्!

[अपर्णाको प्रवेश]

दूर होऊ, तँ जा यहाँबाट मायाविनी। सर्व-नाशिनी। तँ खोज्दछेस् जयसिंहलाई? अरे महापातकिनी।

[अपर्णाको प्रस्थान]

विध्न कुसमयको यो कस्तो? जयसिंह यदि आउने हो या होइन? होइन, होइन, वचन मिथ्या हुने छैन उसको। जय महाकाली, सिद्धिदात्री, हे भयंकरी। यदि उसलाई वाधा भए, बन्दी बने अन्तमा, प्रहरीको हातमा प्राण-हानि नै होस् उसको! जय मा अभया, जय भक्तहरुका सहायिका, जाग्रत देवी माताकी जय सर्वजया की! भक्त-वत्सलाको अपकीर्त्ति न फैलियोस् कहीं यस धरामा। हाँस्न नपावस् शत्रुहरु शकांहीन कौतुकल। मातृ-अहंकार होस् चूर चूर यदि सन्तानलाई कसैले पनि माता भनेर तिमीलाई पुकार्ने छैन। त्यही पद-ध्वनी! जयसिंह नै हो त्यो! जय नर मुण्डमालिनी, पाखंड दलनी महाशक्ति!

[शीघ्रतापूर्वक जयसिंहको प्रवेश]

जयसिंह! राजरक्त छ कहाँ?

जयसिंह : राजरक्त मसितै छ, मलाई छाड़नुहोस्, म गर्नेछु स्वयं नै निवेदन।

दयामयी, विश्वपालिका माता, तलाई राजरक्त चाहियो ? त्यो बिना तेरो तिर्खा मेटिने छैन कुनै प्रकारले ? म पनि क्षत्रिय हुँ, पुरखा मेरा पनि थिए राजा, चल्दछ मातामहका राज-वंश अहिले पनि-छ राजरक्त मसित। दिनेछु यो रक्त। होस्-परन्तु यही रक्त नै अन्तिम माता। अनन्त तिर्खा तेरो यसैले मेटोस् सदाको निम्ति हे शोणित पिपासिती।

[हृदयमा छुरी हान्दछ]

रघुपति : जयसिंह, जयसिंह! निर्दयी, निठूर हे, गरिस् यो सर्वनाश तैंले कसरी हँ। अकृतज्ञ गुरु-द्रोही, कुलिश कठोर तँ। स्वेच्छाचारी, पितृ-मर्मघाती, जयसिंह हे! जीवन जोगाएर राखेका धन हो! जयसिंह! वत्स, गुरुवत्सल तँ फर्की आइज, फर्की आइज, तँलाई छाड़ी अरू केही चाहन्न। अंहकार, अभिमान, द्विज, देवता, सबै जावस्। बस-एक मात्र तँ फर्की आइज।

[अपर्णाको प्रवेश]

अपर्णा : यसरी नै के पागल मलाई बनाउने ? जयसिंह ? कहाँ जयसिंह ?

रघुपति : आइज सुधामयी! उसको पुकार सुधा-कण्ठ, व्यग्र स्वरले, प्राणदिएर पुकार छोरी जयसिंहलाई। तँ नै लैजा नजिक, चाहदिनं म उसलाई अब।

[अपर्णा मुर्च्छा पर्दछे]

(प्रतिमाको चरणमा शीर राखी रघुपति)

फर्काइदेऊ, फर्काइ देउ जयसिंहलाई।

## दोस्रो दृश्य

### राज-भवन

[गोविन्द माणिक्य अनि नयनराय]

गोविन्द : अहिले देखिनै आनन्द-ध्वनि! पहिरेको छ अहिले नै निर्लज्ज प्रासादले दीपका यी मालाहरु! खड़ा रहेका राजधानी बाहिर-द्वारमा विजय-तोरण-जस्तो कि आनन्दले गर्वित पुलकित नगरीका दुइ कोमल बाहुहरु। अहिले पनि प्रासाददेखि छैन निस्केको बाहिर-छाड़ेको छैन सिहांसन मैले। यतिका दिन राजा थिएं म-गरिन कसैको उपकार के? दूर गरिन के अन्याय कोई, अनि के दिएको छैन दण्ड मैले कुनै अत्याचारलाई ? निर्वासित राजा! छ धिक्कार तँलाई। आफ्नो न्याय गर तँ आफैं, आफ्नै शोकद्वारा आँसू झर्दछ स्वयं! राज्य मृत्युलोकको हरायो, तर फेरि पनि हूँ स्वामी आफ्नो। हृदय-सिंहासनमा

आज महोत्सव होस् !

[गुणवती को प्रवेश]

गुणवती : प्रियतम, प्राणेश्वर, अब के विलम्ब छ? सुनि त हाल्यौं नि अब देवीका निषेध ? आउनुहोस् प्रभु ! आज रात शेष-पूजा गरी राम-जानकी झैं जाउँ निर्वासनमा।

गोविन्द : प्रिये, आज मेरो शुभ-दिन हो, गयो राज्य, तर फेरि तिमीलाई मैले पाएको छु। आऊ, जाऊँ मन्दिरमा हाम्री दुवै देवीको-प्रीति लिएर, पुष्प लिएर, अश्रु लिएर मिलनको, विदाको विषाद लिएर विशुद्ध जाऊँ दुवै नै, आज रक्त र हिंसाको कुनै काम छैन।

गुणवती : भिक्षा एक मांग्दछु नाथ !

गोविन्द : भन देवी तिमी !

गुणवती : अब पाषाण नहुनु होस्, राज गर्व छाड़नुहोस् मान्नुपरोस्-पराजय न चाहौं, तर पनि हेर्नुहोस् मेरो व्यथा, पग्लोस हृदय तपाईंको। निष्ठुर त तपाई कहिल्यै थिएन प्रभु! तपाईंको हृदयलाई कसले बनायो पाषाण? अनि कसले मेरो भाग्य-पिरधिबाट दूर बनायो तपाईंलाई ? राजा बिनाकी रानी मलाई बनाइदियो।

गोविन्द : प्रिये ! एक पल्ट पनि गर त विश्वास तिमी मलाई। नबुझेर पनि मेरो तर्फ हेरेर बुझ। मलाई जो प्यार गर्दछौ त्यसैले सम्झ कि अब रक्तपातको छैन काम। मुख न घुमाउ-देवी, नछोड़ने मलाई, आशा दिएर अब निराश नगर मलाई। तिमी जानु नै हो भने, जाऊ तिमी क्षमा मलाई गरी।

[गुणवतीको प्रस्थान]

हिंड़ी, कवि कठोर अनि निष्ठूर छ यो संसार! अरे को छ ? न कोही छ ? अच्छा, म हिंड़े। हे राज-सिहांसन, देऊ विदा! हे पवित्र प्रासाद ! हे काल पुरखाहरुका, म निर्वासित पुत्र, गरी प्रणाम तिमीलाई लिरहेछु विदा आज सबैदिनको निम्ति।

## तेस्रो दृश्य

## [अन्तः पुरको कक्ष]

गुणवती : बज्न देउ बाजा, पूजा हुनेछ आज राती, आज नै प्रतिज्ञा पूरा हुनेछ मेरो। उत्तम, ल्याऊ जवा फूल! अरे तँ त उभिरहेकिछस्। आज्ञा सुन्दैनस्? के म कोई पनि होइन क्या? राज्य गयो, यसैले रानी यति पनि म रहन सकिन कि दासदासीले आज्ञा पालन गर्ने? कंकण लैजा यो, यो हीरा जड़ित हार लैजा-आभूषण जति पनि छ, सबै त लैजा। शीघ्र गएर आयोजन गर देवी पूजा-को। देवी, यस दासीलाई

चरणमा शरण देऊ।

## चौथो दृश्य

[मन्दिर]

रघुपति : हेर, खड़ा हेर, कसरी उभिएको स्तूप छ जड़ प्रस्तरको यो, अचल, अवोध। अरे मूक, पंगु, अन्धा अनि बाहिरा। तेरै सम्मुख व्यथित सारा विश्व रोई मर्दछ! महान हृदय स्वयं पछारिएर चूर पार्दथ्यो पाषाण-चरणमा तेरो। हा हा हा हा हा हा ! यो क्रूर परिहास हो बसेका छौ कुन दानवको, मध्यमा जगतको? जीवगण "आमा" भनी जति पुकार्थे यो उत्ति नै अट्टहास गर्थी, निर्मम, निष्ठूर उपहासी गरी। फर्काईदे तँ मेरो जयसिंहलाई। हो फर्काईदे, फर्काइ दे उसलाई, अरे हे राक्षसी, पिसाचिनी।

[प्रतिमालाई हल्लाएर]

स्त्र तँ पाइरहिछस्? छ कान तेरो? जान्दस् ति तैंले के गरिस? छस् पिएको रक्त कसको? कुन पुण्य-जीवनको ? स्नेह-दया-प्रीतिसित पूर्ण होस्-कुन महान हृदय? रहेस् चिरकाल सम्म यसै गरी तँ-मन्दिरको यस सिंहासनमा, गुप्त उपहास झैं सरल भक्ति-प्रति। नित्य पुजनेछु तँलाई, चरणमा गर्नेछु प्रणाम माता भनेर तँलाई पुकार्नेछु। प्रकट गर्ने छैन म तेरो परिचय कुनै जनको समक्ष पनि। केवल फर्काइदे मलाई मेरो जयसिंहलाई। हाय, तर कसको समक्ष रोइरहेछु म। दूर गर, दूर गर, दूर गर यसलाई, यस पाषाणीलाई यस हृदयहीनालाई। एक पल्ट छाती हलुंग होस्-जगतको।

[रघुपतिले गोमतीको पानीमा देवीको प्रतिमा फ्याँक्दछ।]

[राँको अनि बाजा-गाजाको साथ गुणवतीको प्रवेश]

गुणवती : जय महादेवी! माता कहाँ छन् महिमामयी?

रघुपति : अब देवी छैन कहिं पनि।

गुणवती : गुरुदेव, उहाँलाई फर्काई ल्याउनुहोस्, बोलाउनुहोस् म गर्ने छु उहाँको आज हृदय-शान्ति। पूजा लिएर म आएकी छु। त्यागगरी राज्य अनि पति पनि आफ्ना अटल प्रतिज्ञा पूरा गरेकी छु मैले। दया गरी फर्काई दिनुहोस् देवीलाई, दया गरी केवल आजको एक रातको निम्ति। देवी कहाँ छन्?

रघुपति : छैन, कहिं पनि छैन अब उ। माथि पनि छैन, तल पनि छैन अनि न त उ थिई कहिल्यै कहिं पनि।

गुणवती : प्रभु, के थिईन् देवी यहाँ?

रघुपति : देवी भन्दछौ उसलाई तिमी? यदि थिई यस जगमा देवी कहिं

पनि, तब के सहन सक्थ्यौ के त्यस दानवीलाई देवी भन्न? महत्त्व के तब छाती फोरेर रक्त पोखिन्थ्यो भन्दछौ अचल जड़ ती पत्थरका चरणमा? उसलाई भन्दछौ, देवी तिमी? पुण्य-रक्त पिएर महाराक्षसी उ पेट चिरेर मारी आफैं नै।

गुणवती : गुरुदेव, यस प्रकारले वध न गर्नुहोस् मेरो। फेरि एक पल्ट साँचो साँचो भन्नुहोस् के छैन कहिं देवी?

रघुपति : अहँ।

गुणवती : हाय, देवी छैन?

रघुपति : अहँ।

गुणवती : देवी नै छैन भने अरु को छ त भला?

रघुपति : कोई पनि छैन, केही पनि त छैन कहिं।

गुणवती : लैजा, फेरि लैजा यो पूजा, तँ पनि फर्कीजा। शीघ्र बता, महाराज गए कुन मार्गद्वारा?

[अपर्णाको प्रवेश]

अपर्णा : पिता!

रघुपति : मेरी छोरी! अरे छोरी, मेरी पुत्रिका! पिता सम्बोधन यो त होइन तिरस्कारको। छोरी, जो पुकार्दछ यस पुत्रघातकलाई पिता भनेर, उ यस अमृतले पूर्ण नामलाई छाड़ी गयो तेरो कण्ठमा, दया गरी। अहा, फेरि एक पल्ट तँ पुकार।

अपर्णा : पिता, हिंड़ मन्दिर छाड़ी जाउँ कतै हामी।

[पुष्प-अर्घ्य लिएर गोविन्द माणिक्यको प्रवेश]

गोविन्द : देवी कहाँ छ?

रघुपति : छैन अब उ।

गोविन्द : रक्त-धारा कस्तो छ?

रघुपति : अन्तिम यही हो पुण्य-रक्त यस मन्दिरमा पापले भरिएको। जयसिंहले आफ्नै रक्तले रक्त-शिखा हिंसाको निभाएको छ।

गोविन्द : त्यो धन्य हो। पुष्पाञ्जलि यस पूजाको तिमीलाई सौंपन्द छु।

गुणवती : महाराज!

गोविन्द : प्रियतमे!

गुणवती : देवी आज छैन। तपाईं नै हुनुभयो मेरा एक मात्र देवता।

गोविन्द : पाप हटेरगयो। देवी आई फर्केर फेरि मेरै देवीमा।

अपर्णा : पिता, तपाईं फर्केर आउनु होस्।

रघुपति : टुक्रेको छ पत्थर यसपल्ट मेरी माताले दर्शन दिनुभएकी छ बनेर सजीव प्रतिमा। जननी मातृमयी।

अपर्णा : पिता, आउनुहोस्।

## परिशिष्ट

यस नाटकको मूल बंगला गीत

गीत-१

आमी एकला चलेछी ए भवे,
आमाय पथेर सन्धान के कबे ?

गीत-२

आमि एकला चलेछी ए भवे,
आमाय पथेर सन्धान के कबे ?
भय नेइ, भय नेइ, जाओ आपन मनेइ येमन एकला मधुप धेये जाय केवल फुलेर सौरभे।

गीत-३

उलङ्गिनी नाचे रणरङ्गे।
आमरा नृत्य करि सङ्गे।
दश दिक आँधार कारे मातिलो दिकवसना,
ज्वले वह्निशिखा राङा-रसना,
देखे मरि बारे धाइछे पतङ्गे।
कालो केश उडिल आकाशे,
रवि, सोम लुकालो तरासे।
राङा रक्तधारा मारे कालो अङ्गे,
त्रिभुवन काँपे भुरुभङ्गे।

गीत-४

ओगो पुरवासी आमि द्वारे दाँड़ाये आछि उपवासी।

गीत-५

ओगो पुरवासी,
आमि द्वारे दाँड़ाये, आछि उपवासी।
हेरितेछी सुखमेला, घरे घरे कतखेला,
शुनितेछी सारा बेला सुमधुर बाँसि।

गीत-६

चाहिना अनेक धन रबोना अधिक क्षण,
*येथा हते आसियाछी सेथा जाबो भासि/तामेरा आनन्दे रबे नव नव उत्सवे* किछु
म्लान नाहिं हबे गृहभरा हासी।

गीत-७

आमारे के निवि भाइ, सँपिते चाइ
आपनारे।
आमार एइ मन गलिये काज भुलिये
सङ्गे तोदेर निया जा रे।
तोरा कोन रुपेर हाटे
चलेछिस् भवेर हाटे
पिछिये आछि आमि आपन भारे।
तोदेर ऐ हासिखुशी दिवानिशि
देखे मन केमन करे।
आमार एइ वाधा टुटे
निये जा लुटे-पुटे
पड़े थाक मनेर बोझा घरेर द्वारे।
येमन ऐ एक निमेषे वन्या एसे
भासिए ने जाय पारावारे।
एत-जे आना गोना
के आया जाना शोना
के आछे नाम धरे मोरे डाकते पारे?
यदि से बारेक एसे दाँड़ाय हेसे
चिनते पारि देखे तारे॥

गीत-८

थाकते आर तो पारलि ने मा, पारलि कइ?
कोलेर सन्तानेरे छाड़लि कइ?
दोषी आछि अनेक दोषे, छिलि बसे क्षणिक रोषे,
मुख तो फिराली शेषे, अभयचरण काड़लिकय?

* * *

[उत्तरकूटको पार्वतीचा प्रदेश। उत्तरभैरव जाने बाटो। पर आकाशमा एउटा अभ्रभेदी लौह-यन्त्रको टुप्पो देखिंदैछ र त्यसको अर्कोपट्टि भैरव-मन्दिरको त्रिशूल। बाटोको किनारको आँपको बगैंचामा राजा रणजितको छाउनी छ। आज औंशीको दिन हो। भैरव-मन्दिरमा आरती हुनेछ। राजा त्यहाँ पैदल जानेछन्। अहिले बाटोछेउको छाउनीमा विश्राम गरिरहेका छन्। उनका सभासद् यन्त्रराज विभूतिले धेरै वर्षसम्मको खिप्तीले लौह-यन्त्रको बाँध उभ्याएर मुक्तधाराको झरनालाई बाँधेका छन्। यस असाधारण कौशललाई पुरस्कृत गर्नको निम्ति उत्तरकूटका सारा मानिस भैरव-मन्दिरको प्रांगणमा उत्साह मनाउन जाँदैछन्। भैरव-मन्त्रमा दीक्षित सन्यासीहरुको दल भजन-कीर्तन गर्दै घुमिरहेको छ। तीमध्ये कसैको हातमा धुपौरो छ जसमा धूप जलिरहेको छ, कसैको हातमा शंख छ, कसैको हातमा घण्टी छ। गीतको बिचबिचमा ताल मिलाउँदै घण्टी बजिरहेको छ।]

गीत-१

जय भैरव! जय शङ्कर!
जय जय जय प्रलयङ्कर
शङ्कर शङ्कर!
जय संशयभेदन
जय बन्धनछेदन
जय संकट-संहर
शङ्कर शङ्कर!

[सन्यासी-दलको गाउँदै गाउँदै प्रस्थान]

[पूजाको नैवेद्य लिएको एकजना परदेशी बटुवाको प्रवेश। उ उत्तरकूटका नागरिकलाई सोध्छ।]

बटुवा : आकाशमा यो के बनाएर उभ्याएको? देख्नै डरलाग्दो।

नागरिक : अरे, तिमीलाई थाह छैन? सायद तिमी परदेशी हौ क्यार! यो यन्त्र हो।

बटुवा : यन्त्र? कस्तो यन्त्र?

नागरिक : हाम्रा यन्त्रराज विभूति विगत पच्चीस वर्षदेखि लगातार यसलाई तयार गर्नमा लागेका थिए। भर्खरै ता यो पूरा भयो। यसैकारण आज उत्सव मनाइँदैछ।

बटुवा : यो यन्त्र चाहिं केको लागि हो?

नागरिक : मुक्तधारा झरनालाई बाँध्नको निम्ति। हेर! यो ता कुनै राक्षसको खप्पर जस्तो देखिन्छ।

बटुवा : बाफ रे! कस्तो देरिवन्छ भने, मानौं यो कुनै राक्षसको खप्पर हो। मासु भन्नु मात्रै, खालि बङ्गारा झुण्डिरहेको छ। तिमीहरुको उत्तरकूटको सिरानमा कस्तो ह्वाङ्ग मुख बाएर उभिरहेको छ। रात-दिन यसलाई हेर्दा हेर्दा तिमीहरुको सातो जानेछ।

नागरिक : नडराऊ, नडराऊ! हाम्रो प्राणमा धेरै दम छ।

बटुवा : होला, हुन सक्छ, तर यो यसरी घाम जूनको अगाड़ि उदाङ्गो पारेर राख्ने चीज हुँदै होइन। हो, यसो छोपछाप पारेर राखेको भए त ठिकै थियो। हेर न कस्तो देरिवन्छ, मानौं रातदिन अकाशैलाई उक्साइरहेछ।

नागरिक : आज भैरवको आरती हेर्न जाँदैनौ?

बटुवा : त्यसैको लागि त निस्केको। म त वर्षेनी यसैबेला आँउछु, तर मन्दिरमाथि आकाशमा यस्तो विपद कहिल्यै देखेको थिइनँ। आज एक्कास्सि यसमा आँखा पर्ने बित्तिकै मेरो ता आङै सिरिङ्ग भएर आयो। यसले ता मन्दिरको टुप्पोलाई समेत माथ त्यो, मानौं, त्यसलाई चुनौती दिइरहेछ। जाऊँ जस्तो त लागेको छैन, तैपनि गएर नैवेद्य चढ़ाइराखेर आऊँ।

[प्रस्थान]

[एउटी आइमाईको प्रवेश। थाप्लोमा एउटा सेतो मजेत्रो छ। जसले उसको सम्पूर्ण शरीरलाई बेहेर्दै भुइँमा लत्रिरहेको छ।]

आइमाई : सुमन! ए छोरा! सुमन! (नागरिकसित) दाजु तपाईहरु त सबै फर्केर आउनुभयो तर मेरो छोरा सुमन त अहिलेसम्म फर्केको छैन।

नागरिक : तिमी को हौ?

आइमाई : म जनाई गाउँकी अम्बा हुं। हाय! मेरो आँखाको तारा, मेरो जीवनको सहारा, मेरो सुमन!

नागरिक : उसलाई के भो त, नानी!

अम्बा : खोइ, कहाँ लगे कोनि उसलाई, के जान्नु। म भैरव-मन्दिरमा पूजा गर्न गएकी थिएँ। फर्केर आउँदा चाल पाएँ, उसलाई लगेछन्।

नागरिक : त्यसो हो भने त उसलाई मुक्तधाराको बाँध बाँध्नका लागि लगेका होलान्।

अम्बा : उसलाई त यही बाटोबाट लगे भन्ने सुनेकी छु, उता, गौरीशङ्करको पश्चिमपट्टि—त्यहाँ म देख्न सक्तिनँ, अगाड़िको बाटोभने देखिंदैन।

नागरिक : रोएर के हुन्छ त? हामी भैरव-मन्दिरमा आरती हेर्न जाँदैछौं। आज हाम्रो हर्क-बढ़ाईको दिन हो। तिमी पनि हिंड़।

अम्बा : होइन दाजु, त्यस दिन पनि त भैरवको आरतीमा गएकी थिएँ। त्यसै दिनदेखि मलाई पूजामा जान डर लाग्छ। हेर्नोस्, तपाईलाई

एउटा कुरा भनूँ, हाम्रो पूजा भैरव बाबासम्म पुग्नै पाउँदैन—कसैले बीचैमा खोस्तछ।

नागरिक : कल्ले खोस्तछ?

अम्बा : उसैले जसले मेरो कारवबाट सुमनलाई खोसेर लग्यो। त्यो को हो त्यो अहिलेसम्म चाल पाउन सकेकी छैनँ। सुमन! छोरा सुमन!! मेरो बाबु!!!

[दुवै जान्छन्]

[उत्तरकूटका युवराज अभिजितले यन्त्रराज विभूति भए ठाँउ दूत पठाएका छन्। मन्दिरतिर जाँदैगरेका विभूतिसित दूतको भेट।]

दूत : यन्त्रराज विभूति! मलाई युवराजले पठाउनुभएको हो।

विभूति : के आदेश छ उहाँको?

दूत : यतिका दिनदेखि तिमी हाम्रो मुक्तधाराको बाँध बाँध्नमा लागेका थियौ। कैयौंपटक त्यो भत्क्यो, त्यसको साँधी छैन, कति मानिस बालुवा-माटोमुनि पुरिएर गए, कति उलाउमा बगेर गए। निदानसेखमा आज . . . . . ।

विभूति : उनीहरुले दिएको प्राणदान व्यर्थ भएन। मेरो बाँध बनिइसकेको छ।

दूत : शिवतराईका प्रजाले अझै यो कुरा चाल पाएकै छैनन्। जुन पानी उनीहरुलाई विधाताले दिएको छ त्यो कुनै एउटा मान्छेले गर्दा बन्द पनि हुनसक्छ भन्ने कुरा तिनीहरु सोच्न पनि सक्तैनन्।

विभूति : विधाताले त उनीहरुलाई पानी मात्तै दिएका छन् तर, मलाई दिएका छन् पानीलाई बाँध्ने शक्ति।

दूत : वहाँका मानिसहरु निश्चिन्त छन्। उनीहरुलाई थाहै छैन। हप्ता दिनमै उनीहरुको खेत . . . . . ।

विभूति : खेतको चैं के कुरा नि?

दूत : किन र, उनीहरुका खेतलाई सुक्खा पारिदिनु नै तिम्रो यो बाँध बाँध्नाको उद्देश्य थिएन र?

विभूति : मेरो उद्देश्य त ढुंगा-माटो-पानीको षडयन्त्रको माध्यमबाटै मानव-बुद्धि विजयिनी होओस् भन्ने हो। कुन खेतीवालको कुन मकैको खेत सुक्नेछ, त्यो सबै विचार गरिरहने समय नै कहाँ थियो र?

दूत : युवराजले सोध्नुभएको छ, के अझै पनि सोच्ने बेला भएन अरे?

विभूति : अहँ। म त यन्त्रशक्तिको महिमाको कुरा पो विचार गर्दैछु।

दूत : भोकाहरुको क्रन्दनले के तिम्रो ध्यान भङ्ग नगर्ला?

विभूति : अहँ। मेरो बाँध पानीको बेगले भत्किदैन, मेरो यन्त्र क्रन्दनको

बलसँग डग्दैन।

दूत : तिमीलाई सरापको डर लाग्दैन?

विभूति : सराप! सुन, जुनबेला उत्तरकूटमा श्रमिक पाइएनन्, त्यसबेला मैले राजाज्ञाद्वारा चण्डपतनका प्रत्येक घरबाट अठार वर्षदेखि उँभोको उमेरका केटाहरुलाई बोलाएथें। उनीहरुमध्ये धेरै त फर्केनन्। मेरो यन्त्रले यहाँ कति आमाहरुका सरापमाथि विजय प्राप्त गरिसकेको छ के थाहा! जो दैवी शक्तिसित जुधिरहेको छ उसले नाथे मान्छेको सरापलाई के गन्ती गर्थ्यो?

दूत : युवराजले भन्नुभएको छ, कीर्ति निर्माण गर्ने गौरव त तिमीले पाइसकेका छौ। आफ्नो कीर्तिलाई आफ्नै हातले मेटाउनाको गौरव त्योभन्दा पनि ठूलो हुन्छ। अब त्यो पनि प्राप्त गर।

विभूति : जहिलेसम्म कीर्ति निर्माण भएन, तहिलेसम्म त्यो मेरो थियो। अब त त्यो समस्त उत्तरकूटको भयो। त्यसलाई नष्ट गर्ने अब कुनै अधिकार छैन।

दूत : युवराजले भन्नुभएको छ, नष्ट गर्ने अधिकार उहाँ आफैले लिनुहुन्छ अरे।

विभूति : उत्तरकूटका युवराजले नै यो कुरा भनेका हुन् त? उनी के हाम्रा होइनन् त? उनी के शिवतराईका हुन् त?

दूत : उहाँले भन्नुभएको छ, उत्तरकूटमा केवल यन्त्रको राज छैन, त्यहाँ देउताहरु पनि बस्तछन् भन्ने प्रमाण दिनु आवश्यक छ।

विभूति : ममाथिको यन्त्रको भरमा हामी स्वयं देव-पद प्राप्त गर्न सक्तछौं भन्ने कुराको पो प्रमाण दिनुपर्ने जिम्मेवारी छ। युवराजलाई भन्दिनु, मैले कुनै कसर बाँकी राखेको छैनँ जसले यो मेरो यन्त्रबाँधको मुट्ठीलाई अलिकति खुकुल्याउन सकोस्।

दूत : विनाशका देउता सधैं ठूलो बाटोबाट आउ-जाउ गर्दैनन्। तिनका निम्ति थुप्रै छिंड़-प्वालहरु हुन्छन्, तीमाथि कसैको आँखा पुग्दैन।

विभूति : (झस्केर) छिंड़, कस्तो छिंड़? छिंड़का विषयमा के तिमीलाई थाहा छ?

दूत : म के जानूँ? जसलाई जान्नु छ उनीहरु नै जानून्।

[दूतको प्रस्थान]

(उत्तरकूटका नागरिकहरु उत्सव मनाउन मन्दिर गइरहेका छन्।) (विभूतिलाई देखेर. . . . )

पहिलो नागरिक : हरे! यन्त्रराज! तिमी निकैको छौ? कहिले हो कहिले झुक्याएर अघि भथाहैहाले छौ । पाइएन।

दोस्रो नागरिक : यो ता यसको सधैं को बानी हो। सुमुसुमु अघि बढ्दै गएर यसले कुनबेला सबैलाई पछि छोड़िदिने हो, पत्तै पाइन्न। हाम्रो चबुवा गाउँको त्यही सिङाने केटो त हो यो विभूति भन्ने। कैलास गुरुले हामी सबैको एकैचोटि सँगसँगै कान निमोठ्ने गर्दथे। थाहै नपाई कहिले हो कहिले यसले यत्रो ठूलो काण्ड गर्यो।

तेस्रो नागरिक : एइ गबरु, डालो बोकेर यसरी ह्वाङ्ग मुख फर्काएर किन उभिराखेको हँ? विभूतिलाई पहिले कहिल्यै देखेको थिइनस्? ले खै। माला झि पहिराइदिऊँ।

विभूति : भो, भो, पर्दैन।

तेस्रो ना. : हरे! किन पर्दैन? तिमी यसरी एकास्सि ठूलो मान्छे हुनपुग्यौ, त्यसैले तिम्रो घाँटी पनि यसरी ऊँटको जस्तो ठूलो हुनपुग्यो हो। उत्तरकूटका सारा मानिसले भेला भएर तिम्रो गला मालैमालाले लादिदिंदा हुन् ता तिमी खास देखिने थियौ।

दोस्रो ना. : खोइ हरीश नगर्चीं अहिलेसम्म आइपुगेन।

पहिलो ना. : मोरो अल्छीको घर छ—त्यसको डँडाल्नोमा नगराको गजाले हिर्काए त सायद--

तेस्रो ना. : बित्थाको कुरा, गजाले हिर्काउनमा उसका हात हाम्राभन्दा धेरै बलिया छन्।

चौथो ना. : मैले त आज बिशाई सामन्तको रथ मागेर विभूति दाइको रथयात्रा गराउँला भन्ने सम्झेको थिएँ। तर सुनिंदैछ, आज ता राजा पनि पैदलै मन्दिर जाने अरे।

पाँचौं ना. : राम्रै भयो। सामन्तको रथ ता पूरै दशरथ भने पनि हुन्छ। बाटोमा पाइलैपिच्छे त्यसका दश टुक्रा हुन जान्छन्।

तेस्रो ना. : हाः, हाः, हाः, हाः। दशरथ? हाम्रो लामघारेले पनि कहिलेकाहीं कस्ता गतिला कुरा गर्छ भने, खोइ के भनूँ? दशरथ।

पाँचौं ना. : अँ, मैले वित्थामा भनेको हो कि क्या हो? छोराको बिहेमा त्यही रथ मगाएको थिएँ। चढ्नु ता उस्तै हो, तर तान्नु भने थोरै परेन।

चौथो ना. : एउटा काम गरौं। विभूतिलाई काँधमा बोकेर लैजाऔं।

विभूति : हरे! हरे! यो के गरेको हँ, तिमीहरुले यो के गरेको?

पाँचौं ना. : हो! ठीकै त छ नि, उत्तरकूटको काखमा तिम्रो जन्म भएको हो, तर आज तिमी त्यसको कुममा चढ़िसकेका छौ। तिम्रो टाउको सबैको भन्दा अग्लो भएको छ।

(काँधमाथि लट्ठी मिलाएर त्यसमाथि विभूतिलाई चढाउँछन्)

सबैजना : जय होस्, यन्त्रराज विभूतिको जय होस्!

गीत-२

नमो यन्त्र, नमो यन्त्र, नमो यन्त्र।
तिमी चन्द्रमुखर मन्वित, तिमी बज्र वन्हि वन्दित तव्र वस्तुविश्‍चवक्षोदंश ध्वंशविकट दन्त।
तव दीप्त-अग्नि शतशतघ्नी-विघ्न विजय मन्त्र।
तव लौह गलन शैल दलन अचल-चलन मन्त्र।
कहिले काष्ठ-लोष्ठ इष्टक-दृढ़-घनपिनद्ध-काया
कहिले भूतल-जल अन्तरिक्ष-लंघन लघु माया
तव खन-खनित्र-नख-विदीर्ण क्षिति विकीर्ण यन्त्र
तब पञ्चभूत बन्धनकर इन्द्रजाल तन्त्र।

(छाउनी भएतिर उत्तरकूटका राजा रणजित र उनका मन्त्रीहरुको प्रवेश)

रणजित : तिमीले त कसै गरेर पनि शिवतराईका प्रजालाई वशमा ल्याउन सकेनौ। यत्तिका दिनपछि मुक्तधाराको पानीलाई छेकेर विभूतिले उनीहरुलाई ठीक पार्ने उपाय निकालेको छ। तर मन्त्री, तिम्रो मनमा त कुनै उत्साह भए जस्तो देखिंदैन। ईर्ष्या लाग्दैछ कि कसो?

मन्त्री : क्षमा गर्नुहोला महाराज! हातमा काँटा-कोदालो लिएर ढुंगा-माटोसित लाप्पा खेल्नु मेरो काम होइन। मेरो अस्त्र हो राजनीति, मेरो सरोकार मानव मनसित छ। शिवतराईको शासन चलाउने भार युवराजलाई सुम्पिने सल्लाहा मैले नै दिएको थिएँ। त्यस कामबाट जुन बाँध बाँधिन्थ्यो त्यो बाँध यो बाँधभन्दा कम्तीको हुने थिएन।

रणजित : तर यसले के फाइदा भयो? दुइ वर्षको ऋण-कर बाँकी नै छ। यस्तो अनिकाल ता त्यहाँ भई नै रहन्छ। त्यसबाई राजालाई दिने कर कहीं रोकिन्छ?

मन्त्री : करभन्दा पनि बढ़ी पाइनसक्नु कुरा फेला पर्न आँटेको थियो। त्यसै बेला तपाईंले उहाँलाई फर्केर आउनु भन्ने आदेश दिइहाल्नुभयो। राजकाजमा सानो भनेर हेलाँ गर्नु उचित होइन। याद रहोस् महाराज, दुखको आड़मा साना मानिसहरु ठूला-बड़ालाई पछारेर आफू ठूलो बन्दछन्।

रणजित : तिम्रो सर-सल्लाहाको स्वर एक एक छिनमा बदलिइरहन्छ। तिमीले नै बारम्बार भनेका थियौ, माथि उक्लेर तलकालाई थिच्न सजिलो पर्छ भनेर, अनि विदेशी प्रजालाई यसरी दबाएर राख्नु नै राजनीति हो। भनेका थियौ कि थिएनौ?

मन्त्री : हो, भनेंथें। त्यसबेला स्थिति अर्कै थियो। मेरो सल्लाहा समयानुकूल थियो। तर अहिले—

रणजित : युवराजलाई शिवतराई पठाउन मलाई ठ्याम्मै मन थिएन।

मन्त्री : किन महाराज ?

रणजित : टाढ़ाका प्रजाहरुका छेउमा गएर उनीहरुसित उठ्‌बस् गर्नाले तिनीहरुका मनबाट डर हराउँछ। आफन्तहरु प्रीतिले र पराईहरु डरले वशमा रहन्छन्।

मन्त्री : महाराज! युवराजलाई शिवतराई पठाउनाको खास कारण तपाईं बिर्सँदै हुनुहुन्छ। अलिक अस्तिदेखि नै उनको मन उद्विग्न छ भन्ने लाग्दैथियो। सायद उनलाई आफ्नो जन्म राजमहलमा भएको होइन, उनलाई मुक्तधारामुनि भेटिएको भन्ने कुरा कुनै सूत्रबाट थाहा भयो क्यार भन्ने मलाई सन्देह भयो। त्यसैकारण उनको मन बहलाउन—

रणजित : त्यो त जान्दछु—त्यहाँ उ प्रायः राती झरनामा गएर पल्टिरहन्थ्यो। खबर पाएर एकपल्ट म राती त्यहाँ पुगें र सोधें, के भयो अभिजित ? यहाँ कसरी ? उसले भन्यो, यो पानीको आवाजमा म आफ्नी आमाको स्वर सुन्दछु।

मन्त्री : तिमीलाई के भएको छ युवराज ? अचेल प्रायः तिमी राजमहलमा देखा पनि पर्दैनौ, भनी उनलाई सोद्धा उनी भन्थे : मैले एउटा सन्देश पाएको छु—म पृथ्वीमा बाटो बनाउन आएको हुँ अरे।

रणजित : यस केटामा चक्रवर्ती राजाका लक्षण विद्यमान छन् भन्ने कुरामा मेरो विश्वास हराउँदै गइरहेछ।

मन्त्री : यी दिव्य लक्षणहरुको कुरा ता महाराजका महागुरु अभिराम स्वामीले भन्नुभएको थियो।

रणजित : उनले भूल गरे। यसैले गर्दा त मेरो रातदिन नोक्सान भइरहेछ। शिवतराईको ऊन विदेशको बजारमा जाला भन्ने डरले नै त जिजु च्याप्जुका पालादेखि नान्दी-संकटको बाटो बन्द राखिएको थियो। अभिजितले त्यही बाटो खोलिदिएको छ। अब उत्तरकूटमा अन्न वस्त्र दुर्लभ हुनेछ।

मन्त्री : अहिले कलिलै उमेर छ नि त। युवराज त खालि शिवतराईवासीका निम्ति. . . ।

रणजित : तर यो ता आफन्तहरुकै विरुद्धमा विद्रोह भयो। शिवतराईमा त्यहाँका प्रजालाई भड़काइहिंड़ने धनञ्जय बैरागी भन्ने छ त्यसको पनि पक्कै यसमा हात रहेको हुनुपर्छ। यसपल्ट चाहिं स मातेर सकण्ठी त्यसको कण्ठ बन्द गरिदिनुपर्छ। त्यसलाई झेलखानामा थुनिदिनुपर्छ।

मन्त्री : महाराजको इच्छाको प्रतिवाद गर्ने साहस गर्दिनँ। तर तपाईंलाई थाहै छ, यस्ता दुर्योग पनि हुन्छ जसलाई रोकेर राख्नुभन्दा खुल्ला छोड़िदिनु नै निरापद हुन्छ।

रणजित : जे होस्, त्यसको चिन्ता नगर।

मन्त्री : म चिन्ता गर्दिनँ। महाराजले चिन्ता गर्नुहोला, यही निवेदन छ।

[प्रतिहारीको प्रवेश]

प्रतिहारी : मोहनगढ़का काका-महाराज विश्वजित आउँदै हुनुहुन्छ।

रणजित : एकजना यिनी पनि हुन्। अभिजितलाई बिगार्नेहरुमा सबैभन्दा अघि यिनी छन् जो मानिस आफन्तका रूपमा पराई हुन्छन् तिनीहरु कुम्भो मानिसका ढाड़को कुम्लो जस्तै हुन्छन्। तिनीहरुबाट कसै गरी छुटकारा पाउन सकिन्न। न काटेर फ्याँक्न सकिन्छ, न ता बोकेर हिंन नै। यो आवाज केको हो?

मन्त्री : भैरव-पन्थीहरुको दल मन्दिर परिक्रमा गर्न निस्केको छ। (भैरवपन्थीहरुको प्रवेश र गीत)

गीत-३

तिमिर-हृद्विदारण

जलदग्निनिदारुण  मरु-श्मशान-संचर
बज्रघोष-वाणी  शङ्कर शङ्कर!
रुद्र शूल-पाणी

मृत्यु-सिन्धु-संतर

शङ्कर शङ्कर!

[प्रस्थान]

(रणजितका काका, मोहनगढ़का महाराज विश्वजितको प्रवेश। उनका कपाल, लुगा र फेटा जम्मै सेता छन्।)

रणजित : प्रणाम काका-महाराज, तपाई आज उत्तरभैरवको पूजामा सघाउ पुर्याउन आउनुहोला भन्ने मलाई ता आशै थिएन।

विश्वजित : म ता उत्तरभैरवले आजको पूजा ग्रहण गर्ने छैनन् भन्न मात्रै पो आएको।

रणजित : तपाईको यो दुर्वाच्यले, आजको हाम्रो यस महोत्सवलाई.....।

विश्वजित : केको लागि महोत्सव? विश्वभरिका तिर्खाएकाहरुका निम्ति देवाधिदेवले आफ्नो कमण्डलुबाट जुन जलधारा बगाएथे त्यस मुक्तजललाई तिमीले किन थुन्यौ?

रणजित : शत्रुहरुलाई दबाएर राख्नको निम्ति।

विश्वजित : महादेवसित शत्रुता गर्न डर लाग्दैन?

रणजित : उत्तरकूटका पुरदेउता जो छन्, हाम्रो जीत भन्नु उनैको जीत हो। त्यसैकारण हाम्रो पक्ष लिएर उनले आफ्नो दान फिर्ता लिएका छन्। तिनले शिवतराईलाई तिर्खाको तीरले छेड़ेर उत्तरकूटको सिंहासनमुनि पछारिदिनेछन्।

विश्वजित : त्यसो हो भने त तिम्रो पूजा पूजा होइन, बेतन हो।

रणजित : काका-महाराज! तपाईं पराईहरुका पक्षपाती हुनुहुन्छ र आफन्तहरुका चाहिं विरोधी। तपाईंकै शिक्षाले गर्दा अभिजितले आफ्नो राज्यलाई आफ्नो ठान्न सकेको छैन।

विश्वजित : मेरो शिक्षाले गर्दा, रे? यस्तो पनि दिन थियो जुन बेला म तिम्रै दलमा थिएँ? चण्डपत्तनमा तिम्रै कारणले विद्रोह मच्चिंदा के मैले त्यहाँका प्रजाको सर्वनाश गरेर त्यस विद्रोहलाई दबाएको थिईन? तर पछिबाट कुन्नि कताबाट यो बालक अभिजित मेरो मनमा बस्न आइपुग्यो प्रकाश झैं भएर। अँध्यारोमा केही नदेखिंदा जसमाथि मैले आक्रमण गरेको थिएँ उनीहरुलाई नै त्यसपछि मैले आफन्त ठान्न सकें। चक्रवर्ती राजाका लक्षण रहेको देखेर जसलाई तिमीले ग्रहण गरेका थियौ उसलाई के तिमी यो उत्तरकूटको सानो राज्यभित्रै बाँधिराख्न चाहन्छौ?

रणजित : अभिजित मुक्तधारा मुन्तिर भेटिएको थियो भन्ने रहस्यको जानकारी पनि सायद तिमीले नै उसलाई दियौ?

विश्वजित : हो, मैले नै दिएको हो। गाईतिवारे औंशीका दिन मैले उसलाई आफ्नो भवनमा निम्त्याएको थिएँ। गोधूलिको बेला के देखें भने उ एक्लै कौशीमा गौरी-शिखरतिर एकटकसित हेर्दै उभिरहेको रहेछ। सोधें, के हेरेको बाबु? उसले भन्यो, जुन बाटाहरु अहिलेसम्म बनेका छैनन् त्यो दुर्गम पहाड़ पार गरेर पल्लापट्टि जाने ती भावी बाटाहरु म देख्तै छु. . . . टाढ़ालाई नजिक ल्याउने बाटाहरु। सुन्नेबित्तिकै यस्तो लाग्यो, कुनै घरबारविहीन आमाले जसलाई मुक्तधाराको मुहाननेर जन्म दिएको हो उसलाई कसले बाँधेर राख्न सक्छ र! मैले आफूलाई थाम्न सकिनँ। भनें, बाबु, तिम्रो जन्म हुँदा गिरिराजले बाटैमा तिम्रो अभ्यर्थना गरेको थियो, घरको शंखले तिमीलाई घरमा बोलाएको थिएन।

रणजित : अहिले बुझें।

विश्वजित : के बुझ्यौ?

रणजित : यही कुराले उत्तरकूटको राजवंशप्रतिको अभिजितको ममता टुक्रिएर गयो। यही कुराको पोल खोल्नको निम्ति उसले नन्दिसंकटको बाटो खोलिदिएको छ।

विश्वजित : त्यसले के भो त! जुन बाटो खोलिन्छ त्यो सबैको लागि हुन्छ– जस्तो उत्तरकूटका लागि त्यस्तै शिवतराईको लागि पनि।

रणजित : काका-महाराज, तपाईं आफन्त हुनुहुन्छ, गुरुजन हुनुहुन्छ, त्यसैकारण यत्तिका दिनसम्म धैर्य धारण गरेर बसें। तर अब त्यसो हुनेछैन। तिमी स्वजन-द्रोही हौ, यो राज्य छोड़ेर गइहाल।

विश्वजित : म छोड्न सक्तिनँ। अँ, तिमी मलाई छोड़ेर जान्छौ भने बरु सहुँला।

[प्रस्थान]

[अम्बाको प्रवेश]

अम्बा : (राजालाई) अन्त, तिमी चाहिं को हौ नि? घाम अस्ताइसक्यो, मेरो सुमन त अहिलेसम्म फर्केको छैन।

रणजित : को हौ तिमी?

अम्बा : म कोही पनि होइनँ। मेरो सर्वस्व त यही बाटोबाट भएर गयो। यस बाटोको अन्त छैन कि कसो? त्यसो भए सुमन के अहिले पनि हिंडिरहेकै छ त–हिंड़ेको हिंड़ेकै गइरहेछ–पश्चिमतिर, गौरीशिखर पल्लैपट्टि, जहाँ घाम अस्ताइरहेछ, उज्यालो अस्ताइरहेछ, सबथोक अस्ताइरहेछ?

रणजित : मन्त्री यो शायद.....

मन्त्री : हजुर महाराज, बाँध बाँध्नकै निम्ति–

रणजित : (अम्बालाई) तिमी दुख नमान। मलाई थाहा छ, तिम्रो छोराले जे पायो त्योभन्दा ठूलो दान यस पृथ्वीमा अर्को छैन।

अम्बा : त्यसो हुँदो हो त उसले बेलुकी ल्याएर मेरो हातमा राखिदिने थियो त्यो दान। म उसकी आमा हुँ।

रणजित : पक्कै ल्याएर राख्नेछ। त्यो बेलुकी आफै आइपुगेको छैन।

अम्बा : बाबु, तिम्रो मुखमा सरस्वती बसेकी होउन्। म भैरव-मन्दिरको बाटोमा उसैको आशा लिएर उभिइरहनेछु। सुमन!

[प्रस्थान]

(नजिकैको रुखमुनि विद्यार्थीहरुको दलसँगसँगै उत्तरकूटका गुरुजीको प्रवेश)

गुरु : खायौ, खायौ, अब बेत खायौ जस्तो छ। घोक्रो फुटिञ्जेल चिच्याएर भन – जय राजराजेश्वर।

विद्यार्थीदल : जय राजराजे –

गुरू : (हातकै छेउमा उभिएका एक-दुइ केटाहरुलाई थप्पड़ लगाउँदै) जेश्वर।

विद्यार्थीदल : जेश्वर।

गुरु : श्री श्री श्री श्री श्री

विद्यार्थीदल : श्री श्रा श्री–

गुरु : (ठेल्दै) पाँचपल्ट।

विद्यार्थीदल : पाँचपल्ट।

गुरु : अभागी बाँदर हो! भन श्री श्री श्री श्री श्री—

विद्यार्थीदल : श्री श्री श्री श्री श्री

गुरु : उत्तरकूटाधिपतिको

विद्यार्थीदल : उत्तरकूटा-

गुरु : धिपतिको

विद्यार्थीदल : धिपतिको

गुरु : जय!

विद्यार्थीदल : जय!

रणजित : तिमीहरु कता हिंड़ेका?

गुरु : महाराज, हाम्रा यन्त्रराज विभूतिलाई शिरपाउ चढ़ाउँछौं, त्यसैकारण यी केटाहरुलाई लिएर जाँदैछु रमिता देखाउन। म त्यस्तो कुनै पनि मौका चुकाउन चाहन्नँ जसबाट यिनीहरुले केटाकेटी उमेरमै उत्तरकूटको गौरवलाई आफ्नो गौरव ठान्न सकून्।

रणजित : विभूतिले के गरेको छ, त्यो जान्दछौ होइन त?

केटाहरु : (उफ्रिएर थप्पड़ी मार्दै) जान्दछौं, शिवतराई जाने पानी थुनिदिएको छ।

रणजित : किन थुनिदिएको छ?

केटाहरु : (उत्साहपूर्वक) उनीहरुलाई दबाउनका निम्ति।

रणजित : दबाउनु केको निम्ति?

केटाहरु : ती मानिसहरु नराम्रा छन् नि त!

रणजित : किन नराम्रा छन्?

केटाहरु : ती मानिसहरु साह्रै नराम्रा छन्, साह्रै नै नराम्रा छन्, सबैलाई थाहा छ।

रणजित : किन नराम्रा छन् त्यो थाहा छैन?

गुरु : थाहा किन नहुनु महाराज, के हो एइ, तैंले पढ़िनस्? किताबमा पढ़िनस्? उनीहरुको धर्म साह्रै नराम्रो छ।

गुरु : अनि, हाम्रो झैं उनीहरुको—भन न, के—(नाक देखाउँछ)

केटाहरु : नाक अग्लो छैन।

गुरु : अँ, हाम्रा ज्योतिषीले के प्रमाणित गरेका छन्? नाक अग्लो छ भने के हुन्छ?

केटाहरु : धेरै उच्च जाति हुन्छ।

गुरु : यस्ता मानिसहरु के गर्छन् ? भन न, पृथ्वीमा– भन भन–उनीहरुले नै सबैमाथि विजय पाउँछन् होइन ?

केटाहरु : हो, विजय पाउँछन्।

गुरु : उत्तरकूटका मानिस कहिल्यै युद्धमा हारेको थाहा छ ?

केटाहरु : कहिल्यै हारेका छैनन्।

गुरु : हाम्रा बड़ामहाराज प्राणजितले दुइसय तिरानब्बेजना सैनिक लिएर एकतीस हजार साढ़े सात सय दक्षिणी बर्बरहरूलाई लखेटिदिएका थिएनन् त ?

केटाहरु : ज्यू, लखेटेका थिए।

गुरु : यति निश्चित ठान्नुहोस् महाराज, जो अभागीहरु उत्तरकूटदेखि बाहिर आफ्नी आमाको कोखमा बस्न आएका छन् उनीहरुका निम्ति यी केटाहरु एकदिन संकट बन्नेछन्। त्यसो भएनछ भने मेरो गुरुत्व मिथ्या ठान्नुहोला। हाम्रो जिम्मेवारी कति ठूलो छ भन्ने कुरा म एकनिमेष पनि बिर्सिन्नँ। हामीहरु नै ता मानिस तयार पार्छौं जसद्वारा तपाईंका मन्त्रीगणले आफ्नो काम चलाउँछन्। तैपनि उनीहरुले के पाउँछन् अनि हामी के पाउँछौं, कुनै बेला दाँजेर हेर्नुहोला।

मन्त्री : तर यिनै विद्यार्थीहरु नै त तिम्रा पुरस्कार हुन्।

गुरु : साह्रै राम्रो कुरा भन्नुभयो तपाईंले, मन्त्रीज्यू, हाम्रो पुरस्कार त विद्यार्थीहरु नै हुन्। आ हा हा! तर खानेकुरा साह्रै महँगो भएको छ –अब यही विचार गर्नुहोस् न, गाईको घिउ जुन पहिला–

मन्त्री : लौ भैगो, गाईको घिउबारे तिम्रो कुरामाथि विचार गरूँला। अहिले जाऊ, पूजा गर्ने बेला हुनलागेको छ। (जय जयकार गर्दै विद्यार्थीहरुलाई लिएर गुरुको प्रस्थान)

रणजित : तिम्रो यो गुरुको गिदीमा अरु कुनै घिउ छैन खालि गाईको घिउ भरिएको छ।

मन्त्री : पञ्चगव्यमध्ये एउटा न एउटा त पक्कै हुन्छ। तर महाराज, यिनै मानिसहरु काम लाग्छन्। यसलाई जसो जसो अह्रायो ठीक उसै उसै गर्दै आइरहेछ। बुद्धि बेसी भयो भने, मिसिनले जस्तो काम हुन पाउँदैन।

रणजित : मन्त्री, आकाशमा देखिएको यो के हो ?

मन्त्री : बिर्सिनुभो महाराज, यही त हो विभूतिको यन्त्रको टुप्पो।

रणजित : यति टड़कालो ता अघि कहिल्यै देखिएको थिएन।

मन्त्री : बिहान तूफान आएको थियो त्यसैले आकाश सफा भयो र यो यसैकारणले त्यति टडकालो देखिंदैछ।

रणजित : देख्यौ घरपछाड़िबाट सूर्यदेव कस्तो क्रुद्ध, भएर निस्किंदै छन्।

यस्तो देखिन्छ मानौं कुनै राक्षसले मुड्की उजाइरहेछ। यसलाई यति अग्लो नबनाएको भए राम्रो हुनेथ्यो।

मन्त्री : यस्तो देखिन्छ मानौं आकाशको छातीमा बर्छा रोपिएको छ।

रणजित : हिंड, मन्दिर जाने बेला भयो।

[दुवैको प्रस्थान]

[उत्तरकूटका अर्को दलका नागरिकहरुको प्रवेश]

पहिलो नागरिक : देख्यौ, अचेल विभूति हामीदेखि कसरी तर्की-तर्की हिंड्छ। मानौं, हाम्रै माझ बढ़ेर ठूलो भएको हो भन्ने कुरा आफ्नो छालाबाट खुर्किएर फ्याँक्न चाहन्छ। तरवारले म्यानभन्दा ठूलो हुन खोज्नु उचित होइन भन्ने कुरा एक दिन चाल पाउनेछ।

दोस्रो नागरिक : जेसुकै भन भाइ, विभूतिले उत्तरकूटको नाम राखेको छ।

प. ना. : भो भो, छोड़। उसको विषयमा तिमीले निकै ठूल्ठूला कुरा गर्नथालेका छौ। एउटा बाँध बाँध्दैमा उ अतालिइसक्यो। कम्तीको पनि दशपल्ट जति ता हतोत्साह नै भइसकेको छ।

तेस्रो ना. : कसले भन्न सक्छ, अझै मूर्च्छा पर्ला।

प. ना. : देख्यौ होइन त बाँधको उत्तरपट्टिको त्यो ढिस्कनु?

दो. ना. : किन, किन, के भयो?

ते. ना. : के भयो, रे? त्यत्ति पनि जान्दैनौ? जसले देख्छ उसैले भन्छ–

दो. ना. : के भन्छ, दाइ?

प. ना. : के भन्छ? तँ पनि नजाने झैं नगर् न! यो पनि सोध्ने कुरा हो? माथिदेखि तलसम्म–खोइ, अब के भनूँ—

दो. ना. : तैपनि, कुरा चाहिं के हो, स्पष्टसित भन न–

प. ना. : तँ पनि बड़ो हतार गर्छस् रञ्जन! अलिक धैर्य लिई न। सबैकुरो बुझिहाल्ने-छस् जब एकैचोटि फट्टै–

दो. ना. : सर्वनाश! के भन्दैछौ तिमी दाइ! एकैचोटि फट्टै?

प. ना. : अँ भाइ, झगडूलाई सोध। उ आफै जाँचबुझ गरेर आएको छ।

दो. ना. : झगडूमा यही त छ विशेषता। उसको दिमाग नै एक प्रकारले चिसो छ। अनि, जतिबेला अरु मानिस वाह वाह गर्दै श्यावास भनिरहेका हुन्छन् त्यसबेला उता उ चाहिं खोई कता कताबाट आएर त्यही कुराको मूल्यांकन गर्न थालिहाल्छ।

ते. ना. : आच्छ्या दाइ, कोही कोही के भन्छन् भने विभूतिसित जति पनि विद्या छ उसले—

प. ना. : वेंकट बर्माबाट चोरेको हो, म स्वयं जान्दछु। हो भाइ, साँचो गुणी ता उही थियो। यत्रो ठूलो टाउको! खोइ, कुरै नगर! अनि अचम्मलाग्दो

कुरा त के भने विभूतिले त्यत्रो सम्मान आदर पायो, उता उचाहिं विचरा भोकै मर्यो।

ते. ना. : के उ खान नपाएरै मर्यो त?

प. ना. : लौ! खानै नपाएर मर्यो अथवा कसैले दिएको खाना खाएर मर्यो भन्ने कुरामा के छ र! अनि फेरि भाइ, कसले भन्न सक्छ कहिले को कहाँबाट – आखिर निन्दा गर्नेहरुको कमी छैन नै। यस ठाँउका मान्छे कसैको उन्नति भएको फुटेका आँखाले पनि हेर्न सक्दैनन्।

दो. ना. : जे होस्, तिमी जेसुकै भन, तर मानिस त उ–

प. ना. : लौ अब, किन नहोस् पनि त? कुन माटोमा उसको जन्म भएको हो, विचार त गर्। त्यही चबुवा गाउँमा मेरा बूढ़ा बाबै बस्तथे। उनको नाउँ त सुनेको छस् होइन?

दो. ना. : भैगो भैगो। उनको नाउँ नजान्ने उत्तरकूटमा को छ र! उनी ता उनी नै थिए– अरे उनै क्या त, के नाउँ पो–

प. ना. : अँ, अँ तिनै– भास्कर। नस बनाउनमा यत्तिको सिपालु यस मुलुकभरिमा अर्को कुनै मानिस भएन। उनको हातले बनाएको नस नसुर्की राजा शत्रुजित एकै दिन पनि बाँच्न सक्तैनथे।

दो. ना. : यी कुरा त हुँदै गर्छन् नि, अब जाऔं। हामी भनेका विभूतिको आफ्नै गाउँका मानिस, पहिला त्यसले हाम्रो हातबाट माला लाउने छ, त्यसपछि अरु केही। भएन, हामी नै ता उसको दाहिनेपट्टि बस्नेछौं।

[नेपथ्यबाट]

दो. ना. : उता नजाऊ भाइ उता नजाऊ। फर्केर आऊ।
लौ अब, बूढ़ो बटुक आइपुग्यो।

[बटुकको प्रवेश]

[जिउमा फाटेको कम्बल छ, हातमा बाङ्गो-टिङ्गो लट्ठी, छरपस्ट भएको कपाल]

प. ना. : भन बटुक, कहाँसम्म हिंड्यौ?

बटुक : सावधान नानी सावधान! उता नजाऊ! अझै पनि बेला छँदैछ, फर्क।

दो. ना. : किन फर्कूं?

बटुक : बलि चढ़ाइन्छ, नर-बलि। मेरा दुइदुइजना तन्नेरी नातिहरुलाई जबर्जस्ती लिएर गए। ती फेरि फर्केनन्।

ते. ना. : केमा बलि चढ़ाउँछन् काका?

बटुक : तृष्णामा, तृष्णा दानवीमा।

दो. ना. : त्यो भनेको को नि ?

बटुक : त्यही जो जति जति खाँदै जान्छे उति उति धेरै माग्दै पनि जान्छे। घिउमा दन्किएको आगोको लप्का जस्तो उसको सुकेको जिब्रो लगातार बढ़िरहन्छ।

प. ना. : फटाहा ! हामी त उत्तरभैरवको मन्दिरमा जाँदैछौं—त्यहाँ तृष्णा दानवी कसरी हुन्छे ?

बटुक : हन, तिमीलाई थाहा छैन ? भैरवलाई त आज उनीहरु मन्दिरबाट विदा दिन लागिरहेछन्। त्यहाँ वेदीमा अब तृष्णा बस्छे।

दो. ना. : चुप लाग्, फटाहा ! उत्तरकूटका मानिसले सुने भने अहिले तँलाई धूलोपीठो पार्छन्।

बटुक : तिनीहरु ता मलाई छारोले हान्छन्, केटाहरु ढुंगाले हिर्काउँछन्—भन्छन् तेरा नातिहरुले ज्यान गुमाए, त्यो ता तिनीहरुको सौभाग्य पो त !

प. ना. : नभा, को कुरा त गरेनन् त।

बटुक : नभा, को कुरा गरेनन्, रे ? यदि ज्यानको साटो ज्यान पाइन्न भने, मृत्युद्वारा यदि मृत्युलाई नै डाक्ने हो भने फेरि यत्रो ठूलो खति भैरवले किन सहिरहुन् ? सावधान, बाबु सावधान उता नजानु है।

[प्रस्थान]

दो. ना. : हेर दाइ, मेरो ता आङ नै जुरुङ्ग भएर आइसक्यो।

प. ना. : तँ चाहिं ता साह्रै डरछेरुवा छस् हौ रञ्जु। हिंड् हिंड्।

[सबै जान्छन्]

[युवराज अभिजित र राजकुमार सञ्जयको प्रवेश]

सञ्जय : मैले बुझ्न सकिनँ युवराज, तिमी राजमहल छोड़ेर किन जान लागिरहेछौ ?

अभिजित : जम्मै कुरा तिमी बुझ्न सक्तैनौ। म ता मेरो जीवनधारा राजमहलको सँघार नाघेर बाहिर जानेछ भन्ने संवाद सुन्दै सुन्दै यस धरतीमा आएको हुँ।

सञ्जय : निकै दिनदेखि म तिमीलाई व्याकुल देख्तैछु। जुन बन्धनले तिमी हामीसित बाँधिएका थियौ त्यो बन्धन तिम्रो मनमा खुकुलिंदै गइरहेथ्यो। के त्यो आज चुँड़ियो ?

अभिजित : उ त्यहाँ हेर सञ्जय ! गौरी शङ्करमाथि सूर्यास्तको छवि। मानौं कुनै अग्निरूपी पक्षी बादलका पखेटा फिंजाएर रात भएतिर उड़ेर गइरहेछ। सूर्यास्तले आकाशमा मैले हिंड़नुपर्ने बाटोको नक्सा कोरिदिएको छ।

सञ्जय : देख्नुभएन युवराज ! त्यस यन्त्रको टुप्पो सूर्यास्तको बादलको छाती चिरेर उभिएको छ, मानौं उड्दै गरेको चराको छातीमा काँड़ रोपिएको छ, अनि त्यो आफ्ना पखेटा लातरेर रातको खाड़लमा खसिरहेको छ। यस्तो म सहन सक्तिनँ। विश्राम गर्ने बेला भयो। युवराज जाऔं। राजमहलमा।

अभिजित : जहाँ बाधा हुन्छ त्यहाँ केको विश्राम ?

सञ्जय : राजमहलमा तिमीलाई बाधा छ भन्ने कुरा यत्रो दिनपछि तिमीले कसरी चाल पायौ ?

अभिजित : उनीहरुले मुक्तधारामा बाँध हाले भन्ने कुरा सुन्नोबित्तिकै मैले या चाल पाएँ।

सञ्जय : मैले तिम्रो यस कुराको अर्थ बुझिनँ।

अभिजित : मानिसको भित्री रहस्य विधाताके बाहिर कतै न कतै लेखेर राखेका हुन्छन् मभिक्षको संवाद यही मुक्तधारामा छ। जब चसैका गोड़ामा उनीहरुले फलामाका नेल हाले, त्यसैबेला यो उत्तरकूटको सिंहासन नै मेरो जीवन-धाराको बाँध हो भन्ने कुरा मैले झल्याँस्स सम्झिहालें।

सञ्जय : युवराज, मलाई पनि आफ्नो सङ्गी बनाऊ।

अभिजित : होइन भाइ, आफ्नो बाटो तिमीले आफै खोज्नुपर्छ। यदि मेरो पछि लाग्यौ भने म नै तिम्रो बाटोको तगारो बन्ने छु।

सञ्जय : यति निठुरी नहोऊ न। मलाई आघात पर्छ।

अभिजित : तिमीले मेरो मन चिनेका छौ, त्यसैकारण आघात खाएर पनि तिमीले मलाई बुझिदिन सक्छौ।

सञ्जय : कसले तिमीलाई बोलाएको छ र तिमी जानलागिरहेछौ, यस विषयमा म केही पनि सोध्न चाहन्नँ। तर हेर! साँझ पर्नलाग्यो, राजमहलमा चारणहरुले दिवसावसानको यो जुन गीत गुञ्जाइरहेछन् यसको पनि त कुनै पुकार छ ? जुन कुरो कठिन छ त्यसको गौरव अवश्य होला, तर जुन मधुर छ त्यसको पनि ता मूल्य छ।

अभिजित : भाइ, त्यसैको मोल चुकाउनका लागि त कठिनको साधना गरिन्छ।

सञ्जय : बिहान तिमी पूजा गर्न जुन आसनमा बस्तछौ, सम्झना छ होइन, त्यसैको अघिल्तिर त्यस दिन एउटा सेतो कमल देखेर तिमी दंगदास परेका थियौ ? तिमी उठ्नुभन्दा पहिल्यै झिसमिसेमै कसैले कुन्नि कताबाट त्यो कमल ल्याएर त्यहाँ राखिदियो, उ को हो भन्ने कुरा उसले थाहै हुन दिएन। तर, यति सानो कुरामा पनि कत्रो अमृत भरिएको छ, के आज त्यसको सम्झना आउँदैन ? त्यो डरछेरुवा, जसले आफूलाई गुप्त राखेर पनि आफ्नो पूजालाई गुप्त राख्न सकेन– के त्यसको अनुहारको तिमीलाई झझल्को आउँदैन ?

अभिजित : किन नआउनु । त्यसैकारण त म यो धरतीको संगीतलाई रूद्ध तुल्याएर आकासमा फलामका दाँत गाड़ी अट्टहास गरिरहेको यस विभत्सलाई सहन सक्तिनँ । स्वर्ग मन पर्छ, त्यसैकारण त दैत्यसित लड्न जानामा मलाई कुनै हिच्किचाहट हुँदैन ।

सञ्जय : गोधूलिको उज्यालो उः त्यो नीलो पहाड़मा मूर्च्छा परिराखेको छ। त्यसबाट फैलिरहेको क्रन्दनको एउटै पनि छाया तिम्रो मनमा पुग्दैन ?

अभिजित : अँ पुग्छ। मेरो छाती पनि क्रन्दनले भरिएको छ। म कठोरतामा गर्व गर्दिनँ। उ त्यहाँ हेर त्यो देउदारको रुखको टुप्पाको हाँगामा एक्लै बसेको त्यो चरा– त्यो गुँड़मा जाने हो कि– अन्धकारलाई चिर्दै टाढ़ा प्रवासको कुनै बनको यात्रामा जाने हो, कोही जान्दैन, तर चुपचापसित सूर्यास्तको आकासतिर एकटक लाएर हेरिरहेको छ र त्यसको त्यस एकटकको हेराइको स्वर मेरो हृदयमा ध्वनित भइरहेछ। कति सुन्दर छ यो पृथ्वी । जस-जसले मेरो जीवनलाई मधुमय बनाएका छन् ती सबैलाई आज म नमस्कार गर्दछु ।

[बटुकको प्रवेश]

बटुक : जानै दिएनन् कुटेर फर्काइदिए ।

अभिजित : के भयो बटु, तिम्रो टाउकोबाट रगत पो बग्दैछ त !

बटुक : म सबैलाई सावधान गराउन निक्लेको थिएँउता नजाऊ, फर्क ।

अभिजित : किन, के कुरा हो ?

बटुक : थाहा छैन युवराज ? आज तिनीहरु चन्द्रवेदीमा तृष्णा राक्षसीको स्थापना गर्दैछन् नि ! अन्त नर-बलि चढ़ाउन चाहन्छन् ।

सञ्जय : तिमी यो के भन्दैछौ ?

बटुक : त्यही वेदी बनाउँदाखेरि तिनीहरुले मेरा दुइजना नातिहरुको रगत बगाए। मैले त पापको वेदी आफै-आफ भत्केर लड़नेछ भन्ने सम्झेको थिएँ। तर केको लड़थ्यो, अहिलेसम्म त भत्केकै छैन, भैरव जागेकै छैनन् ।

अभिजित : भत्किन्छ। अब बेला आइसकेको छ।

बटुक : (नजिकै गएर बिस्तारोसित) त्यसो हो भने तिमीले सायद सुनेका छौ ? भैरवको आह्वान सुनेका छौ ?

अभिजित : सुनेको छु ।

बटुक : सर्वनाश ! त्यसो हो भने त तिम्रो उम्किने ठाँउ छैन।

अभिजित : ठयाम्मै छैन ।

बटुक : देख्यौ होइन त, मेरो टाउकोबाट बगिरहेको यो रगत, जिउभरि लागेको यो धूलो ? सहन सकौला के त राजकुमार, जब छाती चिरिन

लाग्दछ ?

अभिजित : भैरवको कृपाले सहनेछु।

बटुक : चारैतिर शत्रु नै शत्रु भएको बेला ? आफ्नै मानिसहरुले जब धिक्कार्न थाल्छन्, त्यसबेला ?

अभिजित : सहनै पर्दछ।

बटुक : त्यसो हो भने त केहीको डर छैन।

अभिजित : छैन, कुनै डर छैन।

बटुक : साह्रै राम्रो। त्यसो भए बटुलाई सम्झँदै गर्नु। म पनि यही बाटोमा छु। भैरवले मेरो टाउकोमा जुन यो रगतको टीका लगाइदिएका छन्, यसबाट तिमीले मलाई अँध्यारोमा पनि चिन्नेछौ।

[बटुकको प्रस्थान]

[राजप्रहरी उद्धवको प्रवेश]

उद्धव : नन्दिसंकटको बाटो किन खोलिदिएको युवराज ?

अभिजित : शिवतराईका मानिसलाई सधैं अनिकालबाट जोगाउनका निम्ति।

उद्धव : महाराज ता तिनीहरूलाई मदद गर्न तयार हुनुहुन्छ, उहाँमा पनि त दयामाया छ।

अभिजित : दाहिने हातको कञ्जुस्याइँले बाटो थुनिसकेपछि देब्रे हातको उदारताले उनीहरुलाई बचाउन सकिंदैन। त्यसैकारण मैले उनीहरुका निम्ति अन्नपानी ल्याउने-लैजाने बाटो खोलिदिएको छु। दयाको भरमा बाँच्ने दीनता म हेर्न सक्तिनँ।

उद्धव : महाराजको त भनाइ के छ भने नन्दि-संकटको गढ़ी भत्काएर तिमीले उत्तरकूटको हातको टपरीमा दूलो पारिदिएका छौ।

अभिजित : मैले त उत्तरकूटलाई सधैं शिवतराईको अन्नको भरोसामा रहनुपर्ने दुर्गतिबाट मुक्ति पो दिएको छु।

उद्धव : दुस्साहसी काम गर्यौ तिमीले। महाराजले चाल पाइसकेका छन्। यसभन्दा धेर म भन्न सक्तिनँ। सकेदेखि अहिल्यै निस्केर गइहाल, बाटोमा उभिएर तिमीसँग कुरा गर्नु पनि खतराजनक छ।

[उद्धवको प्रस्थान]

[अम्बाको प्रवेश]

अम्बा : सुमन ! नानी सुमन ! उसलाई जता लगेका छन् त्यता तिमीहरु मध्ये कोही पनि गएनौ ?

अभिजित : तिम्रो छोरालाई लगेका छन् ?

अम्बा : अँ त, उता पश्चिमतिर, जहाँ घाम अस्ताउँछ, दिन ढल्दछ।

अभिजित : म त्यतै जाँदैछु ।

अम्बा : त्यसो भए यस दुखियाको एउटा कुरा मनमा राखिदिन्छौ बाबु ! उससित भेट भएमा तिम्री आमा तिम्रो बाटो कुरेर बसिरहेकी छ भन्देऊ है ।

अभिजित : हुन्छ, भनिदिन्छु ।

अम्बा : चिरञ्जीवी भए बाबु ! सुमन, सुमन !

[प्रस्थान]

[भैरवपन्थीहरुको प्रवेश र गीत]

गीत-४

जय भैरव ! जय शङ्कर
जय जय जय प्रलयङ्कर
जय सशंयभेदन जय बन्धनछेदन
जय संकट संहर शङ्कर शङ्कर !

[प्रस्थान]

[सेनापति विजयपालको प्रवेश]

विजयपाल : मेरो विनम्र अभिवादन ग्रहण होस्, युवराज । म महाराजका हजुरबाट आइरहेछु ।

अभिजित : उनको के आदेश छ ?

विजयपाल : एकान्तमा भन्नेछु ।

सञ्जय : (अभिजितको हात समातेर) एकान्तमा किन ? के मबाट पनि लुकाउनुपर्ने कुरा छ ?

विजयपाल : हुकुम नै त्यस्तै छ । युवराज एकछिन राजशिविरमा सवारी होस् ।

सञ्जय : म पनि सँगै जान्छु ।

विजयपाल : महाराज एकान्तमा भन्नु भन्ने चाहनुहुन्छ ।

सञ्जय : त्यसो हो भने म यहीं नै बाटो कुरेर बसिरहन्छु । [अभिजितलाई सँगै लिएर विजयपाल शिविरतिर जान्छन्]

(बाउलको प्रवेश)

गान-५

उ अब फर्कंदैन फर्कंदैन फर्कंदैन
नाउ तूफानको बेगमा बगिसक्यो
किनार अब त्यो लाग्दैन

कुन्नि कसले डाक्यो त्यस बौलाहालाई
उ गयो अगि छोड़ी क्रन्दन पछाडि
सक्तैन अब डाक्न तिम्रो अँगालोले उसलाई।

[प्रस्थान]

[फूलवाल्नीको प्रवेश]

फूलवाल्नी : बाबु, उत्तरकूटबाट आएका विभूति कुनचाँहि हुन्?

सञ्जय : किन, उसित तिम्रो के काम छ?

फूलवाल्नी : परदेशिनी हुँ बाबु, देवतलीबाट आउँदैछु। उत्तरकूटका मानिसहरू उ हिंड़ने बाटोमा फूल वर्षाउँदैछन् भन्ने सुनेकी छु। उनी कुनै महात्मा हुन् क्यारे? बाबाको दर्शन गरुँ भनेर आफ्नै फूलबारी बाट फूल ल्याएकी छु।

सञ्जय : महात्मा होइनन् भने पनि बुद्धिमान त हुँदैहुन्।

फूलवाल्नी : उनले काम चाहिं के गरेका छन्?

सञ्जय : आफ्न खोल्सामा बाँध बाँधेका छन्।

फूलवाल्नी : त्यसैको निम्ति पूजा? बाँधले के देउताहरुको काम फत्ते हुन्छ?

सञ्जय : होइन, देउताका हातमा हातकड़ी लाग्छ।

फूलवाल्नी : त्यसका निम्ति पुष्पवृष्टि? खै, मैले कुरै बुझिनँ।

सञ्जय : नबुझेकै राम्रो। देउताका फूल अपात्रमा खेर नफाल। फर्केर जाऊ– सुन, सुन, तिम्रो यो सेतो कमल मलाई बेच्छ्यौ?

फूलवाल्नी : जुन फूल महात्मालाई चढ़ाउँला भन्ने भाकल गरेर ल्याएकी थिएँ त्यसलाई म कसरी बेचूँ?

सञ्जय : जुन महात्मामाथि मलाई सबैभन्दा बेसी भक्ति छ उहाँलाई नै म चढ़ाउँछु।

फूलवाल्नी : त्यसो भए लैजाऊ। अह, दाम चाहिं म लिन्नँ। बाबालाई मेरो प्रणाम पुर्याइदिनू। भन्दिनू, देउतलीकी दुखिया फूलवाल्नीले दिएर गएकी भनेर।

[प्रस्थान]

[विजयपालको प्रवेश]

सञ्जय : दाजु कहाँ हुनुहुन्छ?

विजयपाल : शिविरमा थुना पर्नुभा, को छ।

सञ्जय : युवराज थुनामा? यत्रो दुस्साहस!

विजयपाल : यीःयो हेर महाराजको आदेश-पत्र। -

सञ्जय : कसको षड्यन्त्र हो यो? मलाई एकपल्ट उनी भए ठाँउ पुर्याऊ।
विजयपाल : माफ गर्नुहोला।
सञ्जय : मलाई पनि थुनामा हाल, म विद्रोही हुँ।
विजयपाल : आदेश छैन।
सञ्जय : ठीक छ उसो भए, म आदेश लिन हिंडें। (केही परसम्म गएर, फेरि फर्किएर) विजयपाल, यो कमल मेरो तर्कबाट दाजुलाई दिनु।

[दुवै जान्छन्]
[शिवतराईका बैरागी धनञ्जयको प्रवेश]

गीत-६

आँधीबीच जगमगाउँदो भयमग्न मेरो यो नाउमा
प्रहारहरुको सागर म पार गर्नेछु।
'मा मैः' को तिम्रो सन्देशको भरमा
यो च्याङ्लो तिर्पालमा पनि छाती फुकाउँदै
बरको छायाँमा यो नाउ पारि पुग्नेछ।
मलाई जो चाहन्छ उसैले मलाई बाटो देखाउनेछ,
निर्भय मनले नाउ खोलिदिनु—
बस्, मेरो काम त यति नै छ।
घाम अस्ताउँदा पारि पुगी
चढ़ाउँछु तिम्रो करुणामय चरणमा
आफ्ना दुखी दिनहरुको मेरो रक्त कमल यो।
(शिवतराईका प्रजाको एउटा दलको प्रवेश)

धनञ्जय : अरे, अनुहार यस्तो फुंग उड़ेको? किन, के भयो?
पहिलो व्यक्ति : मालिक, राजाको सालो चण्डपालको प्रहार सहन सकिंदैन। उ हाम्रो युवराजलाई पनि टेर्दैन, त्यसले गर्दा सहन अझै चर्को पर्दछ।
धनञ्जय : अरे, अझै पनि कुटाइ खाँदा बानी परेको छैन? अझै पनि दुख्छ?
दोस्रो व्यक्ति : राजाको चोकमा थुनिएर पिटाइ खानु? कस्तो अपमान।
धनञ्जय : आफ्नो अभिमान आफूसित नराख् बरु आफूभित्र जुन देउता बस्तछन् उनैका चरणमा चढ़ाएर आइज, त्यहाँ अपमान पुग्न सक्तैन।

(गणेश सरदारको प्रवेश)

गणेश : अब यसभन्दा धेर सहन सकिंदैन। हात चिलाइरहेछन्।
धनञ्जय : त यसो भन, अब यी हात पनि आफ्ना अधीनमा छैनन्।
गणेश : ठाकुर, एकपल्ट हुकुम दिनुहोस् न, यस षण्ड-मार्का चण्डपालको

दण्ड खोसेर अलिक देखाइदिउँ प्रहार केलाई भनिन्छ भन्ने कुरा।

धनञ्जय : प्रहार केलाई भनिंदैन भन्ने कुरा देखाउन सक्तैनौ कि? त्यसमा सकेधेर बल पर्छ क्यार? छाललाई थप्पड़ले रोक्न सकिंदैन, हाल ठम्याएर मात्रै छाललाई जित्न सकिन्छ।

चौथो व्यक्ति : त्यसो भए कसो गर्नु भन्नुहुन्छ त?

धनञ्जय : प्रहार नाउँको वस्तुलाई जरादेखि नै उखेलेर फ्याँक।

तेस्रो व्यक्ति : त्यो के गरी हुनसक्छ र मालिक?

धनञ्जय : जब टाउको उचालेर दुख्दैन भन्छौ त्यसै बेला प्रहारका जरा काटिन्छन्।

दोस्रो व्यक्ति : दुख्दैन भन्न ता गाह्रो छ।

धनञ्जय : वास्तवमा मानिसलाई कहीं दुख्थ्यो के त, उ ता बत्तीको शिखा हो। दुख्छ त हाड़-मासुको जनावरलाई पो दुख्छ, जो प्रहार पाएर क्याउँ क्याउँ गर्दै मर्दछ। वाङ्ङ मुख बाएर किन उभिएको? कुरा बुझ्यौ?

दोस्रो व्यक्ति : हामी ता तिमीलाई बुझ्दछौं, तिम्रो कुरा नबुझिए नबुझिइरहोस्।

धनञ्जय : त्यसो हो भने त सर्वनाश भयो।

गणेश : कुरा बुझ्नलाई समय लाग्छ, यस्ता कुरामा हतार गरेर काम लाग्दैन। हामीले ता तपाईंलाई बुझेका छौं। यति भएपछि रात नपर्दै पार तरिन्छ।

धनञ्जय : अनि रात परेपछि चैं नि त? त्यसबेला थाहा हुन्छ नाउ किनारमा आइपुगेर डुबेछ भन्ने कुरा। ठिक कुरा यदि ठिकसित बुझिएन भने भरे डुबौला।

गणेश : त्यसो नभन्नुहोस् ठाकुर। तपाईंको चरणमा शरण पाएपछि अब जसरी भए पनि कुरा त बुझेकै छौं।

धनञ्जय : बुझेनौ, यो कुरा बुझ्नलाई अब केही बाँकी रहेको छैन। तिम्रा आँखा राता-राता हुँदैछन्, गलाबाट सोर पनि निक्लँदैन। अलिक सूर हालिदिऊँ?

गीत-७ (अ)

अझै, अझै, अलिकति अझै प्रभु! तिमी यसै गरी हिर्काइरहू।
अरे डरछेरूवा, कुटाइबाट जोगिनलाई तिमी
कि ता हिर्काउन थाल्छौ कि ता भाग्न थाल्छौ
कुरा तर दुवै एकै हुन्।
तिमीलाई दुइटैले पशुको दलमा मिसाउँछन्
पशुपतिसंग भेट गराउँदैनन्
लुकी हिंडछु म, भागी हिंडछु,
डरले तिमीसित तर्की हिंडछु

जे जति छ मसित सबै खोस, लौ सबै खोस।
हेर भाइ, म त हिंड़ेको मृत्युञ्जयसित हर-हिसाब गर्न।
भन्न चाहन्छु, मेरो प्रहारले दुख्छ कि दुख्दैन
त्यो त तिमी आफै ठोकी-बजाई हेर। डराउनेहरु अथवा
डर देखाउनेहरुको भारी काँधमा लादेर म अघि बढ्न सक्तिनँ।

गीत-७ (आ)

अब जे गर्नु छ गर हार होस् चाहे तिम्रो वा मेरो।
ख्याल ठट्टैमा हाँस्तै खेल्दै समय सारा बितिसक्यो
हेरूँ कसरी मलाई तिमीले रुवाउँदछौ।

सबै : अरे साधु, साधु, ठाकुर यही ठीक हो—"हेरूँ कसरी मलाई तिमीले रुवाउँदछौ।"

दोस्रो व्यक्ति : तर तिमी जान चाहिं कता जाँदैछौ, त्यो ता भन।

धनञ्जय : राजाको समारोहमा।

तेस्रो व्यक्ति : ठाकुर, राजाको निम्ति जुन कुरा समारोह भएको छ, तिम्रो निम्ति त्यही के बन्ने हो, के थाहा। त्यहाँ जानुपर्ने खाँचो के नि?

धनञ्जय : राजसभामा नाउँ चलाइराखेर आउँ भनेर।

चौथो व्यक्ति : आफ्नो मुट्ठीभित्र पाएर राजाले तिमीलाई कतै–होइन–होइन, त्यसो हुन सक्तैन।

धनञ्जय : किन हुन सक्तैन र! जति हुन्छ, भुँड़ी भरिञ्जेल हुन्छ!

पहिलो व्यक्ति : तिमी ता राजादेखि डराउँदैनौ, तर हामीलाई ता डर लाग्छ।

धनञ्जय : तिमी मनमनै मार्न चाहन्छौ नि त, त्यसैकारण तिमीलाई डर लाग्छ। म मार्न चाहन्नँ त्यसैले मलाई डर पनि लाग्दैन। जसमा हिंसा छ उसैलाई डरले कुटुर-कुटुर खाइरहन्छ।

दोस्रो व्यक्ति : उसो भए ठीक छ त, हामी पनि तिमीसँग जान्छौं।

तेस्रो व्यक्ति : राजालाई अर्जी चढ़ाउँछौं।

धनञ्जय : के माग्छौ?

तेस्रोव्यक्ति : माग्ने कुरा त कति हो कति छन् नि, दिए त हो।

धनञ्जय : राजपाट माग्दैनौ?

तेस्रो व्यक्ति : खेलाँची गरेको ठाकुर?

धनञ्जय : खेलाँची गर्ने के कुरा छ? एक खुट्टाले हिंड़दा जति कष्ट हुन्छ, त्यस समान कष्ट अर्को कुन होला? राजपाट यदि राजा एक्लैको हुन्छ, प्रजाको हुँदैन भने, त्यस्तो लङ्गड़ो राजाको उफ्राइ देखेर तिमीहरु छक्क परिरहे पनि देवताका आँखामा त आँसु आइहाल्छन्। भाइ, राजाकै निम्ति राज-पाटको माँग गर्नुपर्छ।

दोस्रो व्यक्ति : अनि झपारिमाग्दा चैं नि त ?

धनञ्जय : राज-दरबारभन्दा पनि माथिकोले जब नालिश मञ्जुर गर्दछ, त्यसबेला राजाको हप्कावट राजामथि नै बर्सिन लाग्दछ।

गीत-८ (अ)

बिर्सिहाल्छु म ता घरिघरि
तिमीले नै बसाउँछौ डाकी डाकी
आफ्नो आसनमा मलाई भन्ने कुरा।

साँचो कुरो भनूँ दाइ ? सिंहासनलाई उनको आसन भनेर नचिनेसम्म सिंहासनमाथि दाबी कसैको लाग्नै सक्तैन– राजाको न प्रजाको। त्यो कहीं फुई लाएर बस्नो ठाँउ हो र ? त्यहाँ त जौंले हात गरेर बस्नुपर्छ।

गीत-८ (आ)

चिन्दैन मलाई ढोकेले बीचमा छेक्तछ
कति उभिरहुँ बाहिर अझ
बोलाऊ लौ भित्र मलाई।
ढोकेले के यसै चिन्दैन र ? धूलोले निधारको
राजतिलक छोपिएको छ।
मनमाथि ता केही जोर चलेन, अब बाहिर राज गर्न हिंडें।
जो साँचो राजा छ उही राजासनमा बस्छ।
राजासनमा बस्तैमा त्यसै कोई राजा भइहाल्दैन।

गीत-८ (इ)

तिमीले ममा सास भर्यौ
त्यसमाथि थपिदियौ अभिमान पनि।
लोभ लाज भयले गर्दा
नभए खेर जान्छ अभिमान मेरो
मैला भएर दिनदिनै छोपिंदै जाँदो छ धूलोमुनि।

पहिलो व्यक्ति : जे सुकै भन, तर तिमी राजाको ढोकामा किन जाँदैछौ भन्ने कुरा मैले चाहिं बुझ्न सकिनँ।

धनञ्जय : किन भनूँ ? मन भ्रमित भइरहेछ।

पहिलो व्यक्ति : त्यो कसरी ?

धनञ्जय : तिमी मलाई जति बलियो गरी समात्छौ पौरिन सिक्ने काममा तिमी उत्ति नै पछि पर्दछौ। म आफै पार लाग्न पनि गाम परिसक्यो हो, त्यसैले जहाँ मेरो कुनै सोधीखोजी हुँदैन त्यही ठाँउमा गइरहेछु,

छुटकारा पाउन।

पहिलो व्यक्ति : गर राजाले तिमीलाई त्यति सजिलैसित छोड़दैन।

धनञ्जय : किन छोड़नुपरयो ? मलाई यदि बाँध्न सकेको भए फेरि कुन कुराको चिन्ता नि ?

गीत-९

मलाई बाँधिराख्ने शक्ति कसैमा होस्,
त्यो के यसै हुन्छ ?
त्यही मेरो बन्धन हुन्छ जो ममा बाँधिन्छ
त्यो के यसै हुन्छ ?
को छ ममा भरोसा राखी मलाई वशमा ल्याउने
त्यो के यसै हुन्छ ?
वशमा राखोस् न पहिला आफैलाई उसले प्रेम रसमा भिजोस्—
त्यो के यसै हुन्छ ?
उसले मलाई रुवाउँछ त्यसको भाग्यमा रुनु लेखेको छ
त्यो के यसै हुन्छ ?

दोस्रो व्यक्ति : तर ठाकुर, यदि उसले तिमीमाथि हात उठाएको खण्डमा हामी सहनसक्ने छैनौं नि।

धनञ्जय : जसका चरणमा मेरो यो शरीर बिकिसकेको छ, उनले यदि सहन्छन् भने तिमीहरु पनि सहौला।

पहिलो : ठीक छ ठाकुर। हिंड़, भनेर-सुनेर आऔं, त्यसपछि भाग्यमा जे छ।

धनञ्जय : त्यसो हो भने तिमीहरु यहीं बस। यहाँ अघि कहिल्यै आइएको थिएन, खै बाटो घाटोको यसो खोज-खबर गेरेर आऊँ।

[प्रस्थान]

पहिलो : देख्यौ दाइ, यी उत्तरकुटयालीहरुको अनुहार कस्तो अचम्भको हुन्छ ? मानौं विधाताले मासुको एउटा लुम्सो लिएर त्यसलाई कुँदन शुरू ता गरेका थिए तर त्यसलाई पूरा गर्न भने उनले भ्याएनन्।

दोस्रो : अनि, यिनीहरुले फेर लुँड़ो पारेर फुर्को पछाड़ि सिउरिएर धोती लाउने ढाँचा देख्यौ के ?

तेस्रो : मानौं चुहिएर नजाओस् भनेर शरीरलाई बोरामा भरेर राखिएको छ।

पहिलो : यिनीहरु त मजदूरी गर्नैलाई जन्मेका हुन्। सात समुद्र पारिसम्म बजार-बजार भौतारिंदै हिंड़छन्।

दोस्रो : यिनीहरुमा शिक्षा त नामसम्मको लागि पनि पाइँदैन। यिनीहरुका

शास्त्रमा त्यस्तो कुरै पो के छ र?

पहिलो : केही छैन, केही छैन। धमिरा जस्ता तिनका अक्षर देखेनौ?

दोस्रो : पक्कै धमिरा जस्ता। यिनीहरुको विद्या जेमा लाग्दछ त्यसैलाई काटेर—

तेस्रो : अनि माटोको उरूङ लगाइदिन्छन्।

पहिलो : यिनीहरु शस्त्रद्वारा प्राण हर्दछन्, औ शास्त्रहरुद्वारा मन।

दोस्रो : शिव, शिव! हाम्रा गुरुजीका भनाइ अनुसार त यिनीहरुका छायाँ-सम्मको पनि छेउमा जानुहुँदैन, थाहा छ किन?

तेस्रो : किन, भन त।

दोस्रो : थाहा छैन? समुद्र मन्थनपछि देउताहरुका घैंटाबाट छचल्किएर जुन माटोमा अमृत पोखिएको थियो, हाम्रो शिवतराईका पुर्खाहरु त्यही माटोले बनेका हुन्। अनि दैत्यहरुले देवताका ती जूठा घैंटा चाटचुट पारेर जब जुठ्यानमा फ्याँकिदिए त्यसबेला ती फुटेका घैंटाको पाकेको माटोबाट उत्तरकूट्यालीहरु बने। त्यसैकारण त यी यति बलिया हुन्छन्, तर. . . कति अपवित्र, छ्या।

तेस्रो : यो तैंले कसरी जानिस्?

दोस्रो : गुरुजी आफैले भनेका हुन्।

तेस्रो : (गुरुप्रति प्रणाम गर्दै) गुरो! तिमी नै सत्य हौ।

(उत्तरकूटका नागरिकहरुको एउटा टोलीको प्रवेश)

उ. १ : अरू कुरा त सबै ठीकै भयो, तर त्यस कामीको छोरो विभूतिलाई राजाले छेत्री माने, यो चाहिं अलिक—

उ. २ : अरे, यी त घरभित्रका कुरा हुन्। त्यो आफ्नो गाउँमा फर्केर आवोस्, त्यसपछि हेरौंला। अहिलेलाई भन—यन्त्रराज विभूतिको जय होस्!

उ. १ : ए दाइ, यी ता शिवतराईका मानिस जस्ता पो देखिन्छन् त।

उ. २ : कसरी चिन्यौ?

उ. १ : तिनका कानेटोपी देखेनौ? कस्तो अनौठो देखिन्छ! मानौं माथिबाट कसैले छालाको गद्दा बाँधेर यिनीहरुको बढ्ने क्रम रोकिदिएको छ।

उ. २ : साँच्ची, यत्रो ठूलो हुँदाहुँदै यिनीहरु कानलाई नै चाहिं किन छोप्छन्? यिनीहरु विधाताले भूल गरेर कान बनाए भन्ठान्छन् कि कसो?

उ. १ : कानमा बाँध बाँधेका छन्—बुद्धि बगेर नजाओस् भनेर।

[सबैजना हाँस्छन्]

उ. ३ : होइन, होइन, बुद्धि भित्र पस्न नपाओस् भनेर बाँधेका पो त। [हाँसो]

उ. १ : कतै उत्तरकूटको कान निमोठुवा भूतले कान नसमातोस् भनेर नि। अरे हाँस न शिवतराईका मूर्खहरु हो, कुरो-कन्थो केही छैन, के कुरा

हो ?

उ. ३ : थाहा छैन, आज हाम्रो दशैं हो। भन, यन्त्रराज विभूतिको जय होस्।

उ. १ : किन चूप लागेका ? गला बस्यो कि क्या हो ? करेली नमर्क्याएसम्म सके स्वर निस्कँदैन होला ? भन यन्त्रराज विभूतिको जय होस्।

गणेश : किन भनौं यन्त्रराज विभूतिको जय होस् भनेर ? के पो गरेको छ उसले ?

उ. १ : के, रे ? उसले के गरेको छ अरे ? यत्रो ठूलो खबर पनि तिम्रो कानमा अझै परेको छैन ? देख्यौ त कानेटोपीको गुण ?

उ. २ : तिमीहरुको खाने पानी अब उसको मुट्ठीभित्र छ। उसको दया नपाएसम्म तिमीहरु खड़ेरीका भ्यागुता जस्ता भएर तिर्खैले मर्नेछौ।

उ. ३ : खाने पानी विभूतिको मुट्ठीमा ? उ के अचानक देउता भयो त ?

उ. १ : देउतालाई छुट्टी दिएर देउताको काम आफैले चलायो।

शिव १ : देउताको काम। खोई त्यसको एउटा नमूना हेरौं त।

उ. १. : उ त्यहाँ हेर मुक्तधाराको बाँध।

[शिवतराईवासीहरुको अट्टहास]

उ. १ : यसलाई तिमीले के खेलाँची सम्झेका छौ ?

गणेश : खेलाँची होइन त ? मुक्तधारालाई बाँध्छ ? भैरवले आफ्ना हातले जे दिएका छन् त्यो तिमीहरुको यस कामी केटाले खोस्छ ?

उ. १ : आफै हेर न त उ त्यो आकाशमा।

शिव १ : अपुई ! त्यो के हो दाइ ?

शिव २ : मानौं कुनै ठूलो फलामको फटेङ्ग्रा आकाशमा उफ्रिन लागिरहेछ।

उ. १ : त्यही फटेङ्ग्राको खुट्टाले तिमीहरुको पानी थुनेको छ।

गणेश : आ! छोड़िदेऊ यी बित्थाका कुरा। कुन दिन फेरि यही फलामको फटेङ्ग्रा का पखेटामा चढ़ेर तिमीहरुको त्यो कामी केटो जून टिप्न गएको छ भन्नेछौ।

उ. १ : लौ हेर, कान छोप्नाको फाइदा। यिनीहरु सुनेर पनि सुन्दैनन् र ता मर्छन् त।

शिव १ : मरेर पनि मर्दैनौं। हामीले प्रण गरेका छौं।

उ. १ : खूब राम्रो गर्यौ। बचाउने चाहिं कसले नि ?

गणेश : हाम्रा देउतालाई देखेनौ ? प्रत्यक्ष देउतालाई ? हाम्रा धनञ्जय ठाकुरलाई ? उनको एउटा शरीर मन्दिरमा छ अर्को बाहिर।

उ. ३ : यी कानछोपुवाहरु कुन्नी के बकबक गर्छन् ? यिनीहरुको दुर्दिन आइसकेको छ।

[उत्तरकूटवासीहरु जान्छन्। धनञ्जयको प्रवेश]

धनञ्जय : तँ के भन्दैथिइस् हँ? तँलाई बचाउने भार ममाथि छ अरे? त्यसो हो भने सम्झी सातपल्ट मरेर भूत भइस्।

गणेश : उत्तरकूटेहरु हामीलाई विभूतिले मुक्तधारामा बाँध बाँधिदियो भनेर धमास देखाइरहेका थिए।

धनञ्जय : के भन्यौ, बाँध बाँधेको छ?

गणेश : हो ठाकुर।

धनञ्जय : सायद पूरा कुरा सुनेनौ होला?

गणेश : त्यो पनि कुनै सुन्ने कुरा थियो के त ? हाँसेर उड़ाइदिएँ।

धनञ्जय : तिमीहरु जम्मैले आफ्ना कान जति मैलाई जिम्मा दिएका छौ कि क्या हो? तिमीहरु जम्मैले सुन्नुपर्ने कुरा के म एक्लैले सुन्नुपर्छ?

शिवतराई : त्यसमा सुन्ने योग्य कुरै के छ र ठाकुर?

धनञ्जय : के भन्छौ तिमी! जुन शक्ति दुर्निवार छ त्यसलाई बाँध्नु के खेलाँची हो? चाहे त्यो भित्रको होस् वा बाहिरको।

गणेश : त के त्यसैको भरमा यिनीहरुले हाम्रो खाने पानी थुन्दिन्छन् त ठाकुर?

धनञ्जय : त्यो बेग्लै कुरा हो। भैरवले त्यो सहन सक्तैनन्। तिमी बस, म बुझेर आउँछु। संसार त शब्दमय छ, यसमा जतापट्टि सुन्न बन्द गरिदिन्छौ उतैपट्टिबाट मृत्युवाण आएर लाग्छ।

[धनञ्जयको प्रस्थान। शिवतराईको एकजना नागरिकको प्रवेश]

शिव ३ : अरे विषण? हालखबर के छ?

विषण : राजाले युवराजलाई शिवतराईबाट बोलाइपठाएका छन्। अब उनलाई त्यहाँ राख्नैनन्।

सबै : यो हुन सक्तैन, कदापि हुन सक्तैन।

विषण : गर्छौ के र?

जम्मै : फर्काएर लैजान्छौं।

विषण : कसरी?

जम्मै : जबरजस्ती।

विषण : राजाबाट छुटकारा पाउन सकौला?

जम्मै : हामी राजालाई मान्दैनौं।

(रणजित र मन्त्रीको प्रवेश)

रणजित : कसलाई मान्दैनौ अरे?

सबै : प्रणाम!

गणेश : तपाईं भए ठाउँ अर्जी चढ़ाउन आएका छौं।
रणजित : कस्तो अर्जी ?
सबै : हामी युवराजलाई चाहन्छौं।
रणजित : के रे ?
पहिलो : ज्यू, हामी युवराजलाई शिवतराई लैजान्छौं।
रणजित : अनि खुशीले फुल्लिएर कर दिने कुरा बिर्सिदिन्छौ ?
सबै : अन्न बिना जम्मै त मरिरहेछौं।
रणजित : तिमीहरुको सरदार कहाँ छ ?
दोस्रो : (गणेशतिर देखाएर) यिनै हुन् हाम्रा गणेश सरदार।
रणजित : यो होइन, तिमीहरुको त्यो बैरागीचाहिं।
गणेश : उहाँ आउँदै हुनुहुन्छ।

(धनञ्जयको प्रवेश)

रणजित : तिमीले नै सारा प्रजालाई बहकाइराखेका छौ।
धनञ्जय : अवश्य बहकाएको छु, आफै पनि बहकिइरहेको छु।

गीत-१०

को हो त्यो बौलाहा मलाई गल्ली गल्ली बहकाई हिंड़ने। अरे, उसको बाँसुरीको मोहन स्वरले हावा झुलिरहेछ, आकाश गुँजिरहेछ। समय बित्दै गइरहेछ, त्यो बौलाहा कुन्नि कस्तो लुकीचोरी खेलिरहेछ। उसको स्वरले मलाई विकल पारिरहेछ, तर त्यसलाई खोई भेटिंदैन। वनपर्वतभरि खोज्दै घुम्दो म यस आगोमा जलिरहेंछु।

रणजित : यस्ता उरन्ठेउला कुराले मेरो कुरा यसै उड़ाउन सक्तैनौ। भन लगानी कर दिन्छौ कि दिंदैनौ ?
धनञ्जय : दिंदैनौं महाराज दिंदैनौं।
रणजित : दिंदैनौं ? तिम्रो यत्रो हिम्मत ?
धनञ्जय : जुन कुरा तपाईंको होइन त्यो तपाईंलाई कसरी दिऊँ त ?
रणजित : मेरो होइन अरे ?
धनञ्जय : मेरो उब्रेको अन्न तपाईंको हो, मेरो पेटभरिको अन्न तपाईंको होइन।
रणजित : तिमीले नै प्रजालाई तिरो बुझाउनबाट रोकेको हो ?
धनञ्जय : उनीहरु त डरले थुरथुर भएर दिन चाहन्छन् तर म नै उनीहरुलाई रोकेर भन्दैछु—प्राण उनैलाई दिनु जसले प्राण दिएका छन्।
रणजित : कतै तिमीले आफ्नो भरोसाको आड़मा उनीहरुको डरलाई लुकाइ-राखेको त छैनौ होला। बाहिरी भरोसामा अलिकति मात्र छिंड पर्ने बित्तिकै भित्री डर सातगुणा बढ़ी बेगले फुटेर निस्किन्छ। त्यसबेला जम्मै मारिनेछन्। बुझ्यौ त वैरागी, तिम्रो भाग्यमा दुख लेखिएको

छ।

धनञ्जय : भाग्यमा जुन दुख थियो त्यसलाई मैले हृदयमा राखिसकेको छु। जो दुखभन्दा पनि पर छन्, तिनीहरु त्यहीं रहन्छन्।

रणजित : (प्रजासित) म तिमीहरुलाई भन्दैछु, शिवतराई फर्क। वैरागी, तिमी यहीं बस!

गीत-११

(क)

धनञ्जय : बस भनेर कसलाई बसाउँछौ? तिम्रो हुकुम कहिले चल्ला? यो लुछाचुँड़ीले के हुने र दाइ! उही बस्तछ जसलाई बस्नु छ। राजा, लुछाचुँड़ी गरेर केही पाउँदैनौ। सहज भावले बसाउने शक्ति भएमा मात्र बसाउन सक्छौ।

रणजित : त्यसको अर्थ?

धनञ्जय : जसले सबैथोक दिन्छ उसैले सबैथोक राख्न पनि सक्छ। लोभमा परेर यदि केही राख्न चाह्यौ भने त त्यो चोरीको माल भयो, त्यो कहिल्यै टिक्न सक्तैन।

गीत-११

(ख)

जे मन लाग्छ गर तिमी, शरीरको बलले मार वा राख।
लाग्नेहरुले जतिञ्जेल सहन्छन, त्यतिञ्जेलाई ठीकै छ सम्झ।
राजा तपाई दुनियाँलाई हत्याउने बित्तिकै दुनियाँ तपाईको भइहाल्यो भन्ने सम्झिनु-हुन्छ, यही तपाईंको भूल हो। जुन कुरा खुल्ला छोडिदिनाले प्राप्त हुन्छ त्यसैलाई यदि मुट्ठीमा अठ्याउनतिर लाग्नुभयो भने हेर्नुहोला त्यो हातबाट फुत्किनेछ।

गीत-११

(ग)

जस्तो चाहन्छौ तिमी त्यही हुन्छ यस्तै तिमी सम्झन्छौ
यस दुनियाँलाई नचाउने पनि तिमी आफै हूँ भनिठान्छौ।
एकदिन जब यी आँखा खोलिन्छन् देख्नेछौ तब यस दुनियाँमा
हुँदै नहुने कुरा पनि हुन्छन्।

रणजित : मन्त्री, वैरागीलाई यहीं बाँधेर हुलिदेऊ।

मन्त्री : महाराज—

रणजित : के भो! आदेश तिमीले चाहे जस्तो भएन?

मन्त्री : शासनको परिणामले भीषण यन्त्र त तयार भइसकेकै छ, त्यसमाथि

अझै डर पनि थोपरियो भने सबैथोक भताभुङ्ग हुनेछ।

प्रजागण : हामी यो सहने छैनौं।

धनञ्जय : म जे भन्छु गर—फर्क।

पहिलो : ठाकुर, हामीले युवराजलाई पनि त गुमाइराखेका छौं। सके तपाईंले सुन्नु भएको होवैन?

दोस्रो : अनि फेरि हामीले कसको भरोसा लिएर हिंड्नु?

धनञ्जय : मेरो भरोसामै तिमीहरुको भरोसा छ? त्यसो भनेर त तिमीहरुले मलाई समेत कमजोर पारिरहेछौ।

गणेश : त्यसो भनेर आज हामीलाई नबहकाउनुहोस्! एकजना तपाईंमाथि नै हामी जम्मैको भरोसा छ।

धनञ्जय : त्यसो हो भने त म हारें। मैले पन्छिनुपर्ने भो।

सब : किन ठाकुर?

धनञ्जय : मलाई भेटेर के आफैलाई चाहिं हराउँछौ त? ममा त्यत्रो ठूलो खति पुरताल गर्न सक्ने सामर्थ्य नै कहाँ छ र? म साह्रै लज्जित छु।

पहिले : त्यो के भनेको ठाकुर? ठीकै छ त उसो भए, जसो भन्नुहुन्छ उसै गरौंला।

धनञ्जय : मलाई छोड़ेर जाऊ।

दोस्रो : गएर के हुन्छ? तपाईं हामीलाई छोड़ेर बस्न सक्नुहुन्छ? हाम्रो माया लाग्दैन?

धनञ्जय : मायाले तिमीहरुलाई निमोठ्नुभन्दा मायाले तिमीहरुलाई परै छोड़िदिनु उचित छ। जाऊ, अब अर्थोक कुरा नगर, खुरुक्क जाऊ।

सबै : ठीकै छ ठाकुर जाँदैछौं तर—

धनञ्जय : केको तर नि! पूर्णतः निश्चिन्त भए जाऊ, टाउको ठाड़ो गरेर।

सबै : हवस्, जान्छौं।

धनञ्जय : यसलाई हिंड्नु भनिन्छ? फटाफट हिंड़।

गणेश : जान्छौं, तर हाम्रो बल-बुद्धि जम्मै यहीं छोड़ेर जाँदैछौ।

[प्रस्थान]

रणजित : के भयो वैरागी? किन चुप लाग्यौ?

धनञ्जय : चिन्ताले घेरिराखेको छ, राजा!

रणजित : कस्तो चिन्ता?

धनञ्जय : तपाईंले आफ्नो चण्डपालको दण्डले पनि जुन कुरा गर्न सक्नुभएन त्यही मैले गरिसकेको देख्तैछु। अहिलेसम्म म ता यिनीहरुको बल-बुद्धि बढ़ाइरहेंछु भन्ने पो ठानिरहेको थिएँ। तर मैले यिनीहरुको बल-बुद्धि हरें भनेर आज यिनीहरुले मेरै मुखेञ्जी भनेर गए।

रणजित : त्यस्तो कसरी भयो ?

धनञ्जय : यिनीहरुलाई जति माथि उठाएँ त्यति पक्का बनाउन सकिनँ-अर्थोक के हुन्थ्यो र। जसलाई लाग्नुसम्म ऋण लागेको छ, उनीहरुले दौड धूप गर्दैमा बाँकी ऋण चुक्ने होइन। यिनीहरुको ठनाइअनुसार म विधाताभन्दा पनि ठूलो हुँ। यिनीहरुमाथि जुन ऋण लागेको छ, त्यो म माफ गराउन सक्छु भन्ने यिनको विश्वास छ। त्यसैकारण आँखा झिमिक्क नगरी मेरै आड़पिच्छामा रहन्छन्।

रणजित : यिनीहरुले त तिमीलाई नै देउता मानिराखेका छन्।

धनञ्जय : त्यसैले त यिनीहरु ममा आएर अडिए साँच्चैका देउतासम्म पुग्न सकेनन्। जसले यिनलाई भित्रबाट प्रेरित गर्न सक्थे तिनलाई मैले बाहिरै रोकेको छु।

रणजित : जब यिनीहरु राजाको करनी बुझाउन हिंड़छन् त्यसबेला तिमी यिनीहरुलाई ढुक्कैसित रोकिदिन्छौ, तर जब देउताको पूजा-सामा तिम्रा खुट्टामा पर्न आउँछ त्यसबेला के तिमीलाई निको लाग्दैन ?

धनञ्जय : अबुई नि। निको किन नलाग्नु ? भागेर उम्किन पाए ज्यान जोगिएला। मलाई पूजा चढ़ाउँदा यी मानिसहरु भित्रभित्रै कंगाल भइसकेका छन्। यिनीहरुका ऋणको भार त मेरै काँधमा आउने छ, देउताले कहिल्यै छोड्थे के त।

रणजित : उसो भए अब तिम्रो कर्त्तव्य के हो ?

धनञ्जय : टाढ़ा बस्नु। यदि मैले साँच्ची नै यिनका मनमा बाँध बाँधेको रहेंछु भने भैरवले मलाई र तपाईंका विभूतिलाई दुवैलाई एकैचोटि दण्ड दिउन्।

रणजित : उसो भए अब ढीलो केलाई नि ? पन्छिहाल न !

धनञ्जय : म पन्छिदिने बित्तिकै यिनीहरु तपाईंका चण्डपालको घोक्रो अँठ्याउन पुग्नेछन् अनि त, जुन दण्ड मैले पाउनुपर्ने हो त्यो यिनीहरुका खप्परमा खस्न पुग्नेछ। यही सम्झेर हट्न सकिरहेको छैन।

रणजित : आफै पन्छिन सक्तैनौ भने लौ त म पन्छाइदिन्छु। उद्धव, वैरागीलाई अहिले नै बन्दी बनाएर शिविरमा लैजाऊ।

गीत-१२

मलाई तिम्रो साङ्लोले विकल पार्न सक्तैन। तिम्रो प्रहारले मर्मलाई मार्नसक्तैन। उनका आफ्नै हातले लेखेको मुक्ति-पत्र मेरो प्राणमा सुरक्षित छ। तिमीले बाँधेर म बाँधिन्नँ। जुन बाटोबाट म आउ-जाउ गर्छु त्यसको भेउ तिम्रा प्रहरीले कसरी पाउन् ए ! म त उनको दैलोमा पुगिसकेको छु, मलाई अब तिम्रो दैलोमा कसले अड़काउन सक्छ !

डरसित मेरो प्राण डराउँदैन।

[धनञ्जयलाई लिएर उद्धवको प्रस्थान]

रणजित : मन्त्री, बन्दीगृहमा गएर अभिजितलाई भेटेर त आऊ। उ आफूले गरेको कामकुरोमाथि पछुतो मानिरहेको चाल पायौ भने—

मन्त्री : महाराज, तपाईं आफै एकपल्ट गएर—

रणजित : अहँ हुन्न, त्यो राजद्रोही हो। जबसम्म त्यसले आफ्नो अपराध स्वीकार गर्दैन तबसम्म म त्यसको मुख पनि हेर्दिनँ। म राजधानी जाँदैछु, मलाई उहीं खबर गर्नु।

[राजाको प्रस्थान]

[भैरवपन्थीहरुको प्रवेश]

गीत-१३

तिमिर हृद् विदारण
जलदग्नि निदारुण
मरुश्मशान सञ्च र
शङ्कर शङ्कर!
बज्रघोषी वाणी
रुद्र शूलपाणि
मृत्यु सिन्धु संतर
शङ्कर शङ्कर!

[प्रस्थान]

[उद्धवको प्रवेश]

उद्धव : यो कस्तो कुरा? महाराज युवराजलाई नभेटीकनै गइहाल्नुभो।

मन्त्री : उसको मुख हेरिएमा आफ्नो प्रतिज्ञा भंग होला भन्ने डरले। मनमनमा यही द्विविधामा परेकोले यतिञ्जेलसम्म उनी वैरागीसित बात मारिरहे। न त शिविरमा जान मन लागेको थियो, न त शिविर छोड़ेर हिंड्नलाई पाइला नै चल्दथे। जाऔं, युवराजसित भेट गरेर आऔं।

[प्रस्थान]

[दुइवटी स्त्रीहरुको प्रवेश]

पहिली : छ्यामा, यी मानिसहरु सबै यति साह्रो किन तात्तिएका? युवराजले त्यस्तो अनुचित के काम गरेछन् हँ? न म बुझ्नसक्छु, न ता सहन नै सक्छु।

दोस्री : उत्तरकूटकी छोरी भएर पनि बुभिन्दनस्? उनले नन्दी-सकंटको बाटो खोलिदिए नि त।

पहिली : त्यसो गर्दा अपराध चाहिं के भो, त्यो त मलाई थाहा छैन, तर युवराजले कुनै अनुचित काम गरे भन्ने कुरा चाहिं म कुनै पनि हालतमा पत्याउन सक्तिनँ।

दोस्री : तँ अझै केटाकेटी नै छस्। जुन दिन दुख पाउँछेस् त्यसै दिन बाहिरबाट भलादमी भनिने मानिसहरु नै वास्तवमा बढ़ी शङ्का गर्नुपर्ने हुन्छन् भन्ने कुरा चाल पाउलिस्।

पहिली : तर युवराजमाथि तिमीलाई के कुरामा शङ्का छ?

दोस्री : उनी शिवतराईका मानिसलाई वशमा ल्याएर उत्तरकूटको सिंहासन हासिल गर्ने ताकमा छन् भनेर सबै भन्छन्। उनी अब यसभन्दा बढ़ी पर्खन सक्तैनन्।

पहिली : सिंहासनको उनलाई के जरुरत छ र? उनले त सबैको हृदय जितिसकेका छन्। उनलाई बदनाम गराउन चाहनेहरुलाई चाहिं विश्वास गर्ने अनि उनीलाई चाहिं विश्वास नगर्ने त!

दोस्री : तँ चूप लाग्! फुच्चे केटी, तेरो मुखबाट यस्ता कुरा निस्किन सुहाउँदैन। देशभरिका मानिसहरु मिलेर जसलाई सत्र–सराप गरिरहेछन्, बुझ्नु-सुझ्नु, छैन तँ चाहिं उसैको—

पहिली : म देशभरिका मानिसका अगाड़ि उभिएर भन्न सक्छु—

दोस्री : चूप लाग्, चूप लाग्!

पहिली : किन चूप लागूँ? मेरा आँखाबाट त आँसु झर्नै आँटिरहेछन्। मेरो मनले त के भन्दैछ भने म कुनै यस्तो एउटा काम गरूँ जसले गर्दा म उनीमाथि सबैभन्दा बढ़ी विश्वास गर्दछु भन्ने कुरा जम्मैलाई थाहा होओस्। म आज आफ्ना यी लामा-लामा केशले भैरवलाई भाकल गर्ने छु। भन्ने छु, बाबा, तिमी सबैलाई जनाइदेऊ, जीत युवराजको नै हुनेछ, उनलाई बदनाम गर्नेहुरु झुट्टा हुन् भनेर।

दोस्री : चूप, चूपलाग् भन्दैछु। अहिले कसैले सुन्यो भने। यस केटीले अप्ठ्यारोमा पार्छे क्यार!

[दुवैको प्रस्थान]

[उत्तरकूटका नागरिकहरुको एउटा टोलीको प्रवेश]

पहिलो : अब केही गरे पनि छोड़दिनँ। हिंड़, राजाकहाँ जाऔं।

दोस्रो : के फाइदा? युवराज भनेका राजाको गलाका हार हुन्, उनको अपराधको न्याय उनले गर्न सक्तैनन्। उल्टा हामीसित रिसाउने छन्।

पहिलो : रिसाउन् न त, म ता सफा-सफी भनिदिन्छु, त्यसपछि जो हुनु छ

त्यही हुन्छ।

तेस्रो : यता हामीलाई त युवराज कति औधी प्रेम दर्शाउँछन्, मानौं आकाशबाट जून नै टिपेर हातमा राखिदेलान् जत्तिकै गर्छन्, अनि भित्रभित्रै भने उनको यस्तो करतूत ! शिवतराई उनका लागि अचानक उत्तरकूटभन्दा पनि ठूलो भयो।

दोस्रो : त्यसो हो भने, अब पृथिवीमा धर्म भन्ने कुरा कहीं रह्यो के त? तिमी नै भन त दाइ!

तेस्रो : कसैको केही ठेगान छैन।

पहिलो : राजाले उनलाई सजाईं दिएनछन् भने हामी दिनेछौं।

दोस्रो : के गर्छौ?

पहिलो : यस देशमा अब उनका निम्ति ठाँउ छैन। जुन बाटो उनले देखाए त्यही बाटोबाट उनलाई लखेट्नेछौं।

दोस्रो : तर अहिले भरखरै त चबुवा गाउँका मान्छेहरुले भनेको उनी शिवतराईमा छैनन् अरे अनि यता राजमहलमा पनि उनको कुनै पत्तो छैन अरे!

पहिलो : राजाले अवश्य पनि उनलाई लुकाएका छन्।

तेस्रो : लुकाएका छन्? अँह! पर्खाल भत्काएर निकालेर ल्याउँछौं।

पहिलो : महलमा डड़ेलो लाएर निकालेर ल्याउँछौं।

तेस्रो : हामीलाई झुक्याउँछन्? बरु मरिएला तर—

[उद्धवसित मन्त्रीको प्रवेश]

मन्त्री : के भयो?

पहिलो : यस्तो लुकीचोरी चल्दैन। निकाल युवराजलाई।

मन्त्री : अरे भाइ म को हुँ र निकाल्ने?

दोस्रो : तिमीले नै त सल्लाहा दिएर उनलाई—तर लुकाउन सक्नेछैनौ, हामी जबर्जस्ती निकालेर ल्याउँछौं।

मन्त्री : ठीक छ, उसो भए यो सारा राज-पाट आफ्नो हातमा लिइहाल, राजाका गारदबाट उनलाई छुटाएर ल्याऊ।

तेस्रो : गारदबाट?

मन्त्री : महाराजले उनलाई बन्दी बनाएका छन्।

सबै : जय, महाराजको जय, उत्तरकूटको जय!

दोस्रो : हिंड़, हामी पनि पहरा चौकीका माझ पसौं र त्यहाँ गएर—

मन्त्री : के गर्छौ र त्यहाँ गएर?

दोस्रो : विभूतिको गलाको मालाका फूल जति निकालेर त्यसको डोरी उसको गलामा झुण्ड्याइदिएर आउँछौं।

तेस्रो : गलामा किन, हातमा पो त। बाँध बाँध्नेको अभिनन्दनको जूठोले बाटो खोलिदिनेको हातमा बन्धनको काम गरोस्।

मन्त्री : युवराजले बाटो खोलिदिए, त्यो भयो अपराध, अनि तिमी व्यवस्था भंग गर्दछौ, के त्यो चाहिं अपराध हुँदैन ?

दोस्रो : अँ हुन्थ्यो। त्यो त एकदमै अर्कै कुरा हो नि। जे होस् लौ त्यही कुरा नै सही भयो अरे मानौं। यदि व्यवस्था भङ्ग नै गर्यौं भने पनि के हुन्छ त ?

मन्त्री : उही त होला नि कुरा, पैतालामुनिको धरती मन परेन, त्यसैले आकाशमा दौड्यौ। तर त्यो पनि तिमीलाई मन पर्ने छैन, अहिल्यै भन्दिएको छु। अर्को व्यवस्था मिलाएपछि नै कुनै व्यवस्था भत्काउँछन्।

तेस्रो : ठीकै छ, उसो भए पहरा रहिरहोस् राजमहल अगाड़ि गएर—महाराजको जयजयकार नै गरेर आऔं।

पहिलो : ए दाइ, उ हेर! घाम अस्ताइसक्यो। आकाशमा अँध्यारो फैलिन लाग्यो। तर विभूतिको यन्त्रको टुप्पो अझै पनि चम्किरहेछ। मानौं रश्मिले भैरव-मन्दिरको त्रिशूल कस्तरी समातिराखेको छ भने, यस्तो लाग्छ मानौं अस्ताउनदेखि डराइरहेछ। कस्तो अचम्भलाग्दो छ।

[नागरिकहरुको प्रस्थान]

मन्त्री : महाराजले युवराजलाई बन्दी बनाएर शिविरमा राख्ने हुकुम किन दिए भन्ने कुरा बल्ल पो बुझियो।

उद्धव : कसरी ?

मन्त्री : प्रजाका हातबाट उनलाई बचाउनका निम्ति। तर, लक्षण राम्रो देखिन्न। मानिसको उत्तेजना बढ़ेको बढ़ेकै छ।

[सञ्जयको प्रवेश]

सञ्जय : महाराजसित धेर आग्रह गरिरहने साहस भएन। त्यसो गर्नाले उनको संकल्प अझ बलियो भएर जान्छ।

मन्त्री : शान्त रहनुहोस् राजकुमार, उत्पातलाई अझै जटिल नपार्नुहोस्।

सञ्जय : म पनि विद्रोह मच्चाएर बन्दी हुन चाहन्छु।

मन्त्री : त्यसको साटो मुक्त रहेर बन्धन फुकाउने कुरा सोच्नुहोस्।

सञ्जय : त्यही कोशिश गर्न ता म प्रजाका बीचमा गएको थिएँ त। सम्झेको थिएँ, युवराजलाई उनीहरु प्राणभन्दा पनि बढ़ी प्रेम गर्छन्, उनलाई गिरफ्तार गरिएको उनीहरु सहन सक्ने छैनन् भनेर। तर गएर हेरेको त, नन्दिसंकटको खबर सुनेर तिनीहरु रिसले आगो भएका छन्।

मन्त्री : यसैले ठान्नुहोस् युवराज बन्दीगृहमा नै निरापद छन्।

सञ्जय : म ता सदैव उनैको अनुगामी रहिआएको छु। बन्दीगृहमा पनि

मलाई उनको अनुसरण गर्नदेऊ।

मन्त्री : त्यसले के हुन्छ र?

सञ्जय : पृथ्वीमा कुनै पनि मानिस आफैमा पूर्ण हुँदैन, अधूरो नै हुन्छ। कुनै अर्कोसितको योगले नै उ पूर्णता प्राप्त गर्दछ। युवराजसित मेरो यस्तै योग छ।

मन्त्री : त्यो त मानें, राजकुमार। तर जहाँ साँचो योग रहन्छ त्यहाँ नजिकमा बसिरहनुपर्ने आवश्यकता हुँदैन। आकाशको बादल र समुद्रको पानी वास्तवमा एकै हुन्, त्यसैकारण बाहिरबाट हेर्दा बेग्ला-बेग्लै जस्ता रहेर ती त्यस ऐक्यलाई सार्थक तुल्याउँदछन्। आज युवराज जहाँ छैनन् त्यहाँ ती तिम्रो माध्यमबाट प्रकट भइरहेका छन्।

सञ्जय : मन्त्री, यो कुरा त तिमी आफैले भनेको जस्तो त लाग्दैन। यो त मानौं युवराज बोले जस्तो पो लाग्दैछ।

मन्त्री : उनका स्वर यहाँको बतासमा रमेका छन्। म तिनको प्रयोग गर्दछु, तर ती उनका हुन् कि मेरा हुन् सो चाहिं बिर्सिन्छु।

सञ्जय : जे होस्, तिमीले यो कुरा सम्झाएर राम्रै गर्यौ। म उनीबाट टाढ़ा रहेर उनैको काम गर्नेछु। जाऔं महाराजकहाँ।

मन्त्री : केको लागि?

सञ्जय : शिवतराईको शासनभार माग्छु।

मन्त्री : साह्रै विकट समय छ, यसबेला के—

सञ्जय : यसैले त उपयुक्त समय छ।

[दुवै जान्छन्]

[विश्वजितको प्रवेश]

विश्वजित : को हँ? उद्धव?

उद्धव : हजुर, काका महाराज!

विश्वजित : अँध्यारोको बाटो हेरिरहेको थिएँ। मेरो चिट्ठी पायौ होइन त?

उद्धव : हजुर, पाएँ।

विश्वजित : त्यै हिसाबले काम भयो?

उद्धव : एकछिनपछि थाहा लाग्नेछ। तर—

विश्वजित : मनमा संशय नल्याऊ। महाराज आफै त उनलाई छोड्न तयार छैनन् तर उनलाई भन्दै न भनीकन कसैले यो काम गरेदेखि उनको चित्त अलिक स्थिर हुनेथियो।

उद्धव : तर त्यस "कसै" लाई उनले केही गरे पनि माफ गर्ने छैनन्।

विश्वजित : मेरा सारा सेना उपस्थित छन्। तिनले तिमी र तिम्रा पहरेहरुलाई समातेर लैजाने छन्। सबै कुराको जिम्मा मेरो।

नेपथ्यबाट : आगो ! आगो !

उद्धव : लौ तब, बन्दीगृहसित गाँसिएको पाकशालाको तम्बूमा आगो लगाइदिएछन्। यही हो मौका। दुवै बन्दीहरुलाई मुक्त गरिदिऔं।

[एकछिनपछि अभिजितको प्रवेश]

अभिजित : अरे, बाबा ! तपाईं !

विश्वजित : तिमीलाई गिरफ्तार गर्न आएको। मोहनगढ़ जानुपर्छ।

अभिजित : आज तपाईं मलाई कसै गरी पनि गिरफ्तार गर्न सक्नुहुन्न, न रिसले, न स्नेहले। तपाईं, यो आगो तपाईंले लगाउनु भएको भन्ने ठान्नुहुन्छ ? होइन, जे सुकै नै भए पनि यो त लाग्ने नै थियो। आज मसित बन्दी बनिरहने अवकाश छैन।

विश्वजित : किन भाइ, के छ तिम्रो काम ?

अभिजित : जन्मदाखेरि लागेको रिन तिर्नु छ। झरनाको धारा मेरी धाई हुन्, उनको बन्धन चुँड़ाल्नु छ।

विश्वजित : त्यसको लागि प्रशस्त बेला छ, आज छोड़िदेऊ।

अभिजित : म ता बस् यति नै जान्दछु, आज बेला आएको छ फेरि कहिल्यै आउला नआउला कसले जान्दछ।

विश्वजित : म पनि तिमीलाई साथ दिन्छु।

अभिजित : पर्दैन, सबैको काम एकै किसिमको हुँदैन, ममाथि जुन काम आइलागेको छ त्यो म एक्लैको हो।

विश्वजित : शिवतराईका ती तिम्रा भक्तहरु जो तिम्रो काममा सघाउ-पघाउ गर्नलाई मौका पर्खिरहेछन्, के तिनीहरुलाई पनि बोलाउँदैनौ त ?

अभिजित : जुन पुकार, मैले सुनेको छु त्यो यदि उनीहरुले पनि सुनेका हुँदा हुन् त मेरो बोलाहटको बाटो हेरिरहने थिएन् नि त, मैले यदि बोलाएँ भने उनीहरुले बाटो बिराउनेछन्।

विश्वजित : भाइ अँध्यारो पनि त हुनलाग्यो. . .

अभिजित : जहाँबाट बोलाहट आएको छ त्यहींबाट उज्यालो पनि आउनेछ।

विश्वजित : मसित तिमीलाई रोक्न सक्ने शक्ति छैन। अँध्यारोमा एक्लै जाँदैछौ, तैपनि तिमीलाई विदा गरिराखेर फर्किनुपर्छ। अर्थोक नभए पनि फेरि भेट हुनेछ भन्ने यति आश्वासन त दिएर जाऊ।

अभिजित : तिमीबाट मेरो विच्छेद हुनै सक्तैन. . . . . . बस्, यति याद गर भैगो।

[दुवै एक-एकतिर लाग्छन् ]

[धनञ्जयको प्रवेश]

गीत-१४

अग्नि, तँ मेरो मित्र होस्, म तेरै जय गाउँदछु। तेरो जस्तो श्रृंङ्खला-मुक्त लालमूर्ति मैले कहिल्यै देखेको थिइनँ। आकाशतिर उठाएर दुवै हात कसको गीतमा मग्न छस् तँ? तेरो यो अभयनृत्य कति आनन्दमय छ, म यसमा उत्सर्ग गर्छु। जुन दिन दुनियाँको म्याद पुग्दछ, बन्धन फुक्नेछन् त्यस दिन तैंले हात-गोड़ाका डोरी जलाई भस्म गर्नेछस्। त्यसैदिन म पनि तँ सँगसँगै मस्त भएर नाचूँला। तेरो डढाइमा सारा ताप भष्म हुनेछन् सारा ताप-कष्ट मेटिन्छन्।

(बटुकको प्रवेश)

बटुक : ठाकुर, दिन त ढल्किसक्यो, अँध्यारो भयो।

धनञ्जय : भाइ, बाहिरको उज्यालोमाथि भरोसा गर्ने बानी छ होइन? त्यसैले त अँध्यारो हुनेबित्तिक्कै अँध्यारो देखिन थाल्छ।

बटुक : सम्झेको थिएँ आजै भैरवको नृत्य शुरु हुन्छ भनेर। तर के यन्त्रराजले उनका हात-गोड़ा पनि यन्त्रले बाँधिदिए त?

धनञ्जय : भैरवको नृत्य शुरु हुदाँखेरि देखिंदैन, सकिन लाग्दाखेरि मात्र प्रकट हुन्छ।

बटुक : ढाड़स देऊ प्रभु, साह्रै डर लागिरहेछ। जाग, भैरव! जाग! उज्यालो निभिसकेको छ, बाटो हराइसकेको छ, आहट पनि सुनिंदैन मृत्युञ्जय! डरलाई डरले मार! जाग भैरव! जाग!

[प्रस्थान]

[उत्तरकूटका नागरिकहरुको टोलीको प्रवेश]

पहिलो : झूट्टा! उ राजधानीको पहराभित्र छैन। उसलाई लुकाएर राखेको छ।

दोस्रो : हेरौंला नी कहाँ राख्तारहेछन् लुकाएर।

धनञ्जय : होइन भाइ, लुकाएर कहाँ राख्छन्। पर्खाल लड़दछ, दैलो भत्किन्छ, उज्यालो प्रस्फुटित भएर निक्लिन्छ—सबै उदाङ्गो हुनेछ।

पहिलो : अरे यो के हो हँ भाइ! अचानक झसङ्गै पार्यौ।

दोस्रो : राम्रै भयो। कोही न कोही त चाहियो नै। लौ, यस वैरागीलाई नै समातौं। बाँध यसलाई।

धनञ्जय : जो अघिबाटै पक्रा परिराखेको छ उसलाई फेरि कसरी पक्रिने?

पहिलो : साधुपना आफैसित राख, हामी यो सबथोक मान्दैनौं।

धनञ्जय : नमान्नु नै ठीक छ। भगवान आफैले हात समातेर मनाउने छन्। तिमीहरु भाग्यमानी छौ। म जुन अभागीहरुलाई चिन्दछु उनीहरुले मानेर नै गुरु गुमाइ-पठाए। म समेतलाई मानेर उनीहरुले देश

निकालाको आदेश दिएका छन्।

पहिलो : को हो उनको गुरु ?

धनञ्जय : जसका हातबाट उनी कुटाइ खान्छन्।

पहिलो : त हामी पनि तिमीमाथि गुरुगिरी किन चलाउन नथालौं ?

धनञ्जय : मञ्जुर छ भाइ ! हेरूँ, ठीकसित पढ़ाउन सक्छु कि सक्तिनँ। पारख गरिहेरुँ !

दोस्रो : यस्तो लाग्दैछ, तिमीले नै हाम्रा युवराजमाथि कुनै चाल चलाएका छौ।

धनञ्जय : तिम्रा युवराज मभन्दा पनि बढी चलाख छन्। उनी ता ममाथि चाल चल्दछन्।

दोस्रो : देख्यौ त ? रहस्यको कुरा छ। दुईजना मध्ये कसै न कसै एक जनाले पक्कै चाल चलिरहेछ।

पहिलो : होइन भनेदेखि यत्ति राती हुँदो यहाँ किन डुलिरहेछ ? युवराजलाई शिवतराई खुसुक्क पठाउने चेष्टा चल्दै छ। अहिले यसलाई यहीं बाँधिराखेर हिंड़ौं। पछि युवराजको पत्तो लागेपछि यससित पनि कुरा गरौंला। एई कुन्दन, बाँध् न, डोरी तँसँगै छ।

कुन्दन : लौ यो डोरी, तिमी नै बाँध न।

दोस्रो : हन तँ पनि कस्तो उत्तरकुद्याली होस् हँ ! खोइ ले ड़ोरी, मलाई दे। (बाँद्धै-बाँद्धै) कसो त, कस्तो भयो ? गुरुजी के भन्छन् ?

धनञ्जय : कसेर जकड़ेको छ। सजिलैसित छोड़ने खालका छैनन्।

(भैरवपन्थीहरुको प्रवेश)

गीत-१५

तिमिर हृदय विदारुण जलदग्नि निदारुण
मरुश्मशान संचर शङ्कर शङ्कर
वज्रघोष वाणी रुद्र शूलपाणी
मृत्यु सिन्धु संतर शङ्कर शङ्कर !

[प्रस्थान]

कुन्दन : लु त्यो देख्छौ। जसै जसै गोधुलिको उज्यालो निभ्दै आइरहेछ, उसै उसै हाम्रो यन्त्रको टुप्पो कालो हुँदै गइरहेछ।

पहिलो : दिउँसो त सूर्यसित होड़बाजी गरिरहेथ्यो, अब अँध्यारोमा त्यो रातको कालिमासित टक्कर लिंदैछ। कस्तो भूत जस्तो देखिंदैछ।

कुन्दन : विभूतिले आफ्नो कीर्तिलाई यस्तो किन बनाए? उत्तरकूटभरि जहाँसुकै जाऊ, यसतिर नहेरी धरै छैन। कस्तो लाग्छ भने, मानौं यो

एउटा विकट चित्कार हो।

[चौथो नागरिकको प्रवेश]

चौथो : थाहा लागे अनुसार त्यस आँप-बघैंचाको पछाड़िपट्टि राजाको शिविर छ, युवराजलाई त्यहीं राखिएको छ।

दोस्रो : बल्ल बुझियो। यसैकारण पो यो वैरागी यस सड़कमा घुमिरहेको रहेछ। यसलाई यहीं यत्तिकै बाँधिराखेर छोड़िदेऊ, गएर हेरेर आऔं।

[नागरिकहरुको प्रस्थान]

गीत-१६

धनञ्जय : हे मेरा गुणी ! तर बाँध्दैमा के तिम्रो काम सिद्धियो ? यो बाँधिइराखेको वीणा के यहीं यसै अलपत्र रहने हो ? त्यसो हो भने त सम्झ हार भयो हार, यो बँधाइ व्यर्थ भयो। बन्धनमा जब तिम्रो हात पुग्दछ तब नै त यसमा स्वर जाग्न सक्तछ। नत्र ता यो धूलोमा लड़ेर लाजले पुरिने छ, हे मेरा गुणी !

[नागरिकहरुको पुनः प्रवेश]

पहिलो : यो के कुरा हो ?

दोस्रो : काका महाराजले युवराज र उनका पहरादार सबैलाई मोहनगढ़ लिएर गए। यसको के मतलब भयो र !

कुन्दन : उनका धमनीहरुमा पनि त उत्तरकूटको रगत छ। पछि यहाँ कसै गरी युवराजको ठीक फसेला हुन नपाओस् भनेर उनले जबर्जस्ती उनलाई गिरफ्तार गरेर लगे।

पहिलो : यो ता अलिक अचाकली नै भयो। यसैलाई त भन्छन् अत्याचार। हामी के आफ्ना युवराजलाई सजाइसम्म पनि दिन सक्तैनौं त !

दोस्रो : यसको ठीक उपाय छ—बुझ्यौ दाइ—

पहिलो : अँ, अँ उनको त्यो सुनको खानी—

कुन्दन : अनि तिमीलाई थाहा छ के त भाइ, उनीसित धेरै नभए पनि पच्चीस हजार गाई त होलान् नै।

पहिलो : बस, एक-एकवटा गनेर ती जम्मै—यस्तो अचाकली ! हामी यस्तो अचाकली सहन सक्तैनौं।

तेस्रो : अनि उनको त्यो केसरको खेती, त्यसबाट नभएको पनि वर्षेनी—वैरागीलाई चाँहि के गर्ने नि ?

पहिलो : यो लड़िरहोस् न यहाँ।

[नागरिकहरुको प्रस्थान]

धनञ्जयको गीत-१६

हे अबोध, तिमीले राखिदिंदैमा के त्यो त्यसै रहिरहन्छ? जसलाई उसको मोल थाहा छ उसले उठाएर लैजान्छ। अलिकति विचार गरेर त हेर त्यो कुन रत्न हो। त्यो के माटोमा मिसाइदिनका निम्त हो? त्यो हरायो भने त उनको गलाको हार उन्नु नै व्यर्थ हुनेछ। तँलाई थाहा छैन, उसको खोजी चलिरहेछ, यसैकारण त यताउता दूत घुमिरहेछन्। उपेक्षा गरेर तिमीले त्यसको मोल अझै बढ़ाइदिएका छौ। तिमी जसलाई पीड़ा दिंदैछौ उसको पीड़ा के त्यस पीड़ितको प्राणले सहने छ?

[कुन्दनको पुनः प्रवेश]

कुन्दन : ठाकुर, तिम्रो बन्धन खोलिदिन्छु, नराम्रो नमान है। तिमी तुरुन्तै घर गैहाल। के जान्नु आज राती—

धनञ्जय : के जान्नु, आज राती मलाई बोलाहट नै आउने हो कि, त्यसैले त भागेर घर जान सक्तिनँ।

कुन्दन : यहाँ तिम्रो बोलाहट कस्तो?

धनञ्जय : उत्सव सकिने बेलामा।

कुन्दन : शिवतराईको मान्छे भएर तिमी उत्तरकूटका—

धनञ्जय : भैरवको उत्सवमा अब खालि शिवतराईकै आरती मात्र बाँकी रहेको छ।

[नेपथ्यबाट]

[जाग भैरव, जाग !]

कुन्दन : मलाई लच्छिन राम्रो छ जस्तो लाग्दैन। हिंड़।

[दुवैको प्रस्थान]

[उत्तरकूट राजाका दुईजना दूतको प्रवेश]

पहिलो : अब कता जाऔं? नओसानुमा बाख्रा चराउनेहरुले ता युवराजलाई यही बाटोबाट भएर पश्चि-मतिर जाँदै गरेको देखेका थिऔं भन्थे।

दोस्रो : जसरी भए पनि आज राती उनलाई खोजेर निकाल्नै पर्छ। महाराजको हुकुम छ।

पहिलो : चर्चा त उनलाई मोहनगढ़ लगेका छन् भन्ने छ। तर बौलाही अम्बाको कुराबाट ता के थाहा लाग्छ भने उसले जसलाई देखेकी थिई तिनी हाम्रा युवराज नै थिए, र तिनी यही बाटोबाट भएर गएका छन्।

दोस्रो : तर यस अँध्यारोमा एक्लै कहाँ जालान्? केही भन्नै सकिएन।

पहिलो : उज्यालो बिना हामी त एक पाइला पनि हिंड्न सक्तैनौं। जाऔं गढ़ रक्षक कहाँबाट उज्यालो लिएर आऔं।

[दुवैको प्रस्थान]

[एउटा पथिकको प्रवेश]

पथिक : (चिच्याउँदै) एई बूध—न ! शम्भू— ऊ ! विपदमा पार्यो। मलाई अगाड़ि हिंड़ाएर भन्न थाले, उकालो पार गरेर सोझै तिमीलाई भेटिहाल्छौं। अनि अहिले अब कसैको अत्तोपत्तो छैन। अँध्यारोमा यो कालो यन्त्रले इशारा गरिरहेछ। डर लाग्न थालिसक्यो। को हो त्यो आउने ? को हँ ! किन जवाफ दिंदैनौ ? बूधन, तिमी हौ ?

दोस्रो पथिक : म हुँ निम्कू, बत्तीवाला। राजधानीमा रातभरी उज्यालोको निम्ति बत्तीहरु चाहिए। तिमी को हौ ?

प. पथिक : म हुं, हुब्बा, रासमण्डलीमा गाउने काम गर्छु। बाटामा कतै आन्दू अधिकारिको मण्डली ता देखिएन ?

निम्कू : केयौं मान्छे आइरहेका छन्, कस-कसलाई चिन्नु ?

हुब्बा : उसलाई 'कैयौं', मध्येको नठान। हाम्रो आन्दु त आफै एक्लै नै एउटा सिंगो मानिस छ, भीडमा उसलाई खोजिरहनै पर्दैन, सबैभन्दा माथि देखिइराखेको हुन्छ। भाइ तिम्रो यस टोकरीमा थुप्रै बत्ती छन् जस्तो देखिन्छ नि ! एउटा बत्ती मलाई देऊ न। घरकाहरुलाई भन्दा बाटाकाहरुलाई उज्ज्यालोको बेसी आवश्यकता हुन्छ।

निम्कू : कति दिन्छौ ?

हुब्बा : दाम दिन सक्ने भएदेखि त तिमीसित अड़की-अड़की कुरा गर्थ्यें थिइनँ नि, त्यस्तो नरम स्वर किन पार्छौ ?

निम्कू : बड़ो राम्रो ठट्यौलो रहेछौ।

(प्रस्थान)

हुब्बा : बत्ती ता दिएन, उल्टै मलाई ठट्यौलो ठहराइराखेर पो गयो। भैगो, के यो पनि कम हो र, ठट्यौलाको गुण नै यस्तो हुन्छ जसले गर्दा उ अँध्यारोमा पनि चिनिन्छ। ओफ, झ्याउँकीरीको झङ्कारले आकाश भुनभुनाइरहेछ, भूल भयो, बत्तीवालसित दिल्लगी गर्नको साटो डकैति गरेको भए बरु काम हुन्थ्यो।

[अर्कै एउटा बटुवाको प्रवेश]

बटुवा : एई !

हुब्बा : बाफ' रे ! किन तर्साएको ?

[केही मानिसहरुसित नरसिंहको प्रवेश]

नरसिंह : यी हेर, हूल बटुलेर ल्याएँ। अरु पनि कैयौं हूल अघि नै गइसके।

कङ्कर : उसो भए हिंड़, बाटोमा अरू पनि फेला पर्दछन्। हूलको एउटा मान्छे: म जाँदिनँ।

कङ्कर : किन जाँदैनौ ? के भयो ?

उही मान्छे : भएको त केही पनि छैन, तर म जान्नँ।

कङ्कर : यसको नाउँ के हो नरसिंह ?

नरसिंह : बनवारी। कमलका दानाको माला बनाउँछ।

कङ्कर : ठीक छ, खोई यसलाई अलिक बुझिहालूँ ! किन जाँदैनौ, भन त !

बनवारी : मन छैन। शिवतराईकाहरुसित मेरो कुनै झगड़ा छैन। उनीहरु हाम्रा दुश्मन होइनन्।

कङ्कर : ठीकै छ, उनीहरु नहोऊन्, हामी नै तिनका दुश्मन हौं नि त। त्यसो हुँदा पनि त तिम्रो केही कर्त्तव्य छ।

बटुवा : अब हिंड़ न।

हुब्बा : जान भनेर नै त निस्केको थिएँ। मण्डलीका मानिसलाई छोड़ेर एक्लै हिंड्दा मानिस कस्तो अचल हुन्छ, मन मनै यही तत्त्वलाई पचाउन लागिरहेंछु।

बटुवा : मण्डलीका मानिस तयार छन्। खालि तिमीले गएर भेटनु मात्र रहेको छ।

हुब्बा : के भन्यौ ? हामी तिनमोहनाकाहरु हौं, हाम्रो नराम्रो बानी छ—कुरा प्रस्ट भएन भने बुझिंदैन। मण्डलीका मानिस कसलाई भनेको तिमीले ?

बटुवा : अनि हामी चाहिं चबुवा गाउँका हौं। प्रस्टसित सम्झाउने हाम्रो बानी कस्तो नराम्रो छ भने यी हात समेत थाकिसके। (धक्का दिएर) अब बुझ्यौ ?

हुब्बा : ओफ ! बुझें ! सोझो अर्थ के भने मेरो इच्छा होस् कि नहोस् मैले जानैपर्छ। कता जानुपर्ने हो ? अब चाहिं अलिक हलौं हातले सम्झाउनु नी। तिम्रो कुराकानीको पहिलो धक्काले नै मेरो बुद्धि खोलियो।

बटुवा : शिवतराई जानुपर्छ।

हुब्बा : शिवतराई ? यस्तो औंशीको राती ? त्यहाँ कुनचाहिं लीला हुन्छ ?

बटुवा : नन्दी संकटको भत्केको गढ़ी जोड्ने लीला।

हुब्बा : भत्केको गढ़ी मद्वारा जोड़ाउँछौ ? भाइ, अँध्यारोमा तिमीले मेरो अनुहार देखेनौ, त्यसैले यत्रो ठूलो कुरा भनिहाल्यौ। म त हुँ—

बटुवा : तिमी जोसुकै नै किन नहोऊ, दुईटा हात त छन् ?

हुब्बा : बस्, छन् भन्नसम्मका निम्ति त छन्, नत्र त के यिनलाई—
बटुवा : हातको चिनारी बातबाट पाइन्न, ठीक ठाउँमा पाइन्छ। हिंड़ उठ।

[दोस्रो बटुवाको प्रवेश]

दोस्रो पथिक : लौ, यो अर्को एउटा मान्छे फेला परयौ, कङ्कर!
कङ्कर : को हो?
तेस्रो : कोही होइन दाइ, म ता लक्ष्मण हुँ, उत्तर भैरवको मन्दिरमा घण्टी बजाउने काम गर्छु।
कङ्कर : यो त झन् राम्रो कुरा भयो। हातमा बल होला। हिंड़ शिवतराई।
लक्ष्मण : जान त जाउँला तर मन्दिरको घण्टी—
कङ्कर : भैरव बाबाले आफ्नो घण्टी आफै बजाउने छन्।
लक्ष्मण : तिमीलाई बिन्ती छ, घरमा मेरी जहान बिरामी छ।
कङ्कर : तिमी हामीसित हिंड्यौ भने कि ता उ जाति हुन्छे, अथवा मर्दछे। यहाँ बसे पनि त त्यही हुने हो।
हुब्बा : भाइ लक्षमण चुप लागेर मान। काममा जोखिम पक्कै छ, तर नाइँ भन्नुमा पनि कम्ती जोखिम छैन, मैले केही न केही अड़कल पाइसकेको छु।
कङ्कर : लौ यी नरसिंहको स्वर सुनिंदैछ। कसो नरसिंह सबै ठीकै छ होइन?
बनवारी : म अन्याय गर्न सक्तिनँ।
कङ्कर : न्याय-अन्याय विचार गर्ने स्वतन्त्रता होओस्, तब पो अन्याय-अन्याय हुन्छ। उत्तरकूट विराट् छ, उसको एउटा अंशको रूपमा तिमी जे जति गर्दछौ त्यसको कुनै जवाफदेही तिमीमाथि हुँदैन।
बनवारी : यस्ता विराट् पनि छन् जो उत्तरकूटभन्दा पनि ठूला छन् । जस्तो उत्तरकूट तिम्रो अंश हो त्यस्तै नै शिवतराई पनि।
कङ्कर : सुन्यौ नरसिंह, पट्ठो निकै तर्क गर्दैछ। देशको निम्ति योभन्दा ठूलो अर्को कुनै संकट छैन।
नरसिंह : गाह्रो काम दिने बित्तिकै सारा तर्क झर्नेछ। त्यसैले त यसलाई घिस्याएर लैजाँदैछु।
कङ्कर : तँ उत्तरकूटलाई भार होस्, तँलाई हल्का गर्ने जुक्ति खोज्दैछु।
हुब्बा : बनवारी काका, तिमी प्रत्येक कुरा सोच-विचार गरेर मात्र बुझ्न चाहन्छौ, त्यसैले त जो मानिसहरु केही सोच-विचारै नगरी तिमीलाई सम्झाउन चाहन्छन् तीसित तिम्रो कुरै मिल्दैन। कि ता उनीहरुको प्रणाली अप्नाऊ, नभए आफ्नो प्रणाली छोड़ेर शान्त भएर बस।
बनवारी : तिम्रो कस्तो प्रणाली छ?
हुब्बा : म ता गीत गाउँछु। यहाँ त्यसले काम दिने होइन भन्ने सम्झेर सूर

अलापिरहेको छैनँ, नत्र ता अहिलेसम्ममा ताल उठाइसकेको हुन्थें।

कङ्कर : (बनवारीसित) अब के विचार छ तेरो?

बनवारी : म एक पाइला पनि सर्दिनँ।

कङ्कर : त्यसो भए हामी नै तँलाई सार्दछौं, बाँध यसलाई।

हुब्बा : एक थोक भनूँ है त कङ्कर दाइ, नरिसाउनुहोला। यसलाई बोक्नमा जुन मेहनत खर्च हुन्छ त्यसलाई बरु जोगाइराखेदेखि काम लाग्दछ।

कङ्कर : उत्तरकूटको सेवामा काम ठग्नेहरुको दमन गर्नु पनि त कामै हो, राम्ररी विचार गर, अझै समय छ।

हुब्बा : मैले त यतिञ्जेलमै बुझिसकें।

[नरसिंह र कङ्करबाहेक अरु सबैको प्रस्थान]

नरसिंह : *अरे, यी ता विभूति आइरहेछन्। यन्त्रराज विभूतिको जय होस्!*

[विभूतिको प्रवेश]

कङ्कर : काम धेरै अगाड़ि बढ़िसकेको छ, मान्छे पनि प्रशस्तै भेला भएका छन्, तर तिमी यहाँ कसरी? तिम्रो उपलक्षमा नै त उनीहरुले उत्सव मनाउने छन्।

विभूति : मलाई उत्सवको सोख छैन।

नरसिंह : किन किन?

विभूति : मेरो यश खर्व पार्नेका निम्ति नन्दिसंकटको गढ भत्केको खबर आजको दिन पारेर पठाइएको हो। मसित होड़बाजी लगाइरहेको छ।

कङ्कर : कसले होड़ लगाइराखेको छ यन्त्रराज?

विभूति : सबैलाई थाहा छ, म नाउँ लिन चाहन्न। उत्तरकूटमा तिनको बढ़ी मान हुने कि मेरो? बस् यही त छ कुरा। एउटा कुरा तिमीलाई थाहा छैन, यसै मध्ये कसैको तर्फबाट एउटा दूत आएथ्यो मकहाँ, मेरो मन भाँच्न। मुक्तधाराको मेरो बाँध भत्काइदिइने छ भन्ने पनि धमास दिएर गयो।

नरसिंह : त्यत्रो आँट?

कङ्कर : अनि तिमी चूप लागेर सहिरह्यौ, विभूति!

विभूति : पुङ न पुच्छरको कुरा खण्डन गर्दिन।

कङ्कर : तर विभूति, यति साह्रो निष्फिक्री भइ बस्नु ठीक होला? तिमी नै ता भन्थ्यौ बाँधको जोड़नीमा एक-दुइ ठाँउ छ्यान्द्रा छ भनेर। त्यसको पत्तो लाग्यो भने अलिकतिमा नै—

विभूति : जसले छ्यान्द्रा भएको चाल पाउँछ, उसले ती छिंड़ खोल्न जाने बाँच्न सक्तैन भन्ने पनि चाल पाउँछ, पानीको धाराले त्यसलाई उसै

बेला बगाएर लैजान्छ।

नरसिंह : के पहरा राख्नु पनि ठीक छैन त?

विभूति : त्यस छ्यान्द्रामा महाराज आफै पहरा दिइरहनु भएको छ। बाँधको निम्ति मेरो मनमा अलिकति पनि आशंका छैन। अहिलेलाई त्यो नन्दिसंकटको बाटो थुन्न सके भैगो। अनि त मलाई अरु कुनै कुराको चिन्ता छैन।

कङ्कर : तिम्रो निम्ति त यो कुनै गाह्रो काम होइन।

विभूति : ठीक छ, मेरा यन्त्र तयार छन्। अप्ठयारो के छ भने त्यो पहाड़ी बाटो साँघुरो छ, थोरै मान्छेले पनि त्यसलाई सजिलैसित थुन्न सक्छन्।

नरसिंह : कतिसम्म रोक्लान् र? मरेर पनि हामी बाटो बनाइछाड्छौं।

विभूति : छुम्रै मान्छे चाहिन्छन् मर्नका लागि।

कङ्कर : मार्नेहरु छन् भने मर्नेहरुको खाँचो हुँदैन।

*नेपथ्यबाट* : *जाग भैरव ! जाग!*

कङ्कर : लौ अब, हिंड्ने बेलामा अपशकुन।

विभूति : वैरागी, तिमी जस्ता साधुले ता अहिलेसम्म भैरवलाई जगाउन सकेन, अब पाखण्डी भनिंदो म भैरवलाई जगाउन हिंड़िरहेछु।

धनञ्जय : मान्दछु, भैरवलाई जगाउने जिम्मा तिमी हरुमाथि नै छ।

विभूति : तर यो जगाउनु होइन।

धनञ्जय : ठीकै छ। तिमी उनलाई साङ्लीहरुले बाँध्छौ उनी साँङ्ली चुँड़ाल्नका निम्ति जाग्नेछन्।

विभूति : हाम्रो साङ्ली कुनै लरतरो साङ्ली होइन, कड़ापछि कड़ा, मुन्द्रीपछि मुन्द्री।

धनञ्जय : जब मुश्किल सबैभन्दा बढ़ी हुन्छ, तब नै उनको पनि बेला हुन्छ।

[भैरवपन्थीहरुको प्रवेश]

गीत-१७

जय भैरव जय शङ्कर!
जय जय जय प्रलयङ्कर।
जय संशयभेदन,
जय बन्धन छेदन,
जय संकट संहर,
शङ्कर शंङ्कर!

[प्रस्थान]

[रणजित र मन्त्रीको प्रवेश]

मन्त्री : महाराज, शिविर साह्रै शून्य भएको छ, धेरै भाग त जलिसकेको छ। जुन दुई-चारजना पहरेहरु थिए ती ता—

रणजित : तिनीहरु जहाँसुकै होउन्, अभिजित कहाँ छ त्यो पत्तो लाउनुपर्छ।

कङ्कर : महाराज, हामी युवराजलाई सजाई होस् भन्ने माँग गर्दछौं।

रणजित : जसले सजाई पाउनुपर्ने हो उसलाई सजाई दिनका निम्ति के म तिमीहरुको बाटो हेरिरहन्छु ?

कङ्कर : खोजेर पनि उनको अत्तोपत्तो पाइएन, त्यसैले मानिसका मनमा सन्देह उब्जिरहेछ।

रणजित : के भन्यौ ? सन्देह ! कसमाथि ?

कङ्कर : क्षमा गर्नुहोला महाराज, प्रजाका मनको कुरा तपाईंले थाहा पाउनुपर्छ। युवराजलाई खोज्नमा जति धेर समय लाग्दैछ उतिनै उनीहरु अधीर हुँदै गइरहेछन्। कतिसम्म भने अब त युवराज भेटिएपछि उनलाई सजाई दिनका निम्ति तिनीहरुले महाराजको बाटो हेरिरहने छैनन्।

विभूति : महाराजको आदेश नपर्खीकन नै हामीले नन्दिसंकटको भत्केको किल्ला उभ्याउने भार आफ्नो टाउकोमा लिएका छौं।

रणजित : ममाथि किन छोड़ेनौ ?

विभूति : तपाईंको वंशको अपकीर्तिमा तपाईंको गुप्त सम्मति रहेको हुनसक्छ भन्ने सन्देह हुनु स्वाभाविक हो।

मन्त्री : महाराज आज जनसाधारणको मन एकातिर आत्मकुण्ठाले अनि अर्कोतिर क्रोधले गर्दा उत्तेजित भई उठेको छ। तपाईं अधीर भएर तिनको अधीरता अझै नबढ़ाइदिनुहोस्।

रणजित : त्यो को उभिएको त्यहाँ ? बैरागी धनञ्जय ?

धनञ्जय : देख्तैछु, महाराजलाई वैरागीको पनि ध्यान रहेछ।

रणजित : युवराज कहाँ छ ? कुरा तिमी निश्चित रूपले जान्दछौ।

धनञ्जय : होइन महाराज, म जुन कुरा निश्चित रूपले जान्दछु त्यो लुकाउनै सक्तिनँ, त्यसैले त विपद्मा पर्छु।

रणजित : त्यसो भए फेरि यहाँ के गरिरहेका छौ त ?

धनञ्जय : युवराज प्रकट हुने बाटो हेरिरहेंछु।

नेपथ्यबाट : सुमन ! छोरा सुमन ! अँध्यारो हुनलाग्यो, चारैतिर अँध्यारो हुनलाग्यो !

राजा : को हो यो ?

मन्त्री : त्यो बौलाही अम्बा।

[अम्बाको प्रवेश]

अम्बा : कहाँ उ त फर्केकै छैन।

रणजित : किन खोज्छ्यौ त्यसलाई ? बेला भइसकेको थियो, उसलाई भैरवले बोलाए।

अम्बा : भैरव के खालि बोलाउँछन् मात्रै कहिले फर्काउँदैनन् ? चुपचाप ? घनघोर रातमा ?—सुमन ! सुमन !

[प्रस्थान]

[दूतको प्रवेश]

दूत : शिवतराईबाट हजारौं मानिस हिंड़ेर आइरहेछन्।

विभूति : यो के भन्दैछौ ? निधो त हामी त्यहाँ अचानक पुगेर उनीहरुलाई निरश्त्र पार्ने छौं भन्ने पो थियो। अवश्य पनि तिम्रो कुनै विश्वासघातीले तिनलाई खबर गरिदियो। कङ्कर तिमीहरु दुई-चारजनालाई छोड़ेर अरू त कसैलाई पनि भित्रको कुरा थाहा छैन। अनि फेरि कसरी ?

कङ्कर : यो के विभूत ! हामीमाथि पनि शङ्का गर्छौ कि क्या हो ?

विभूति : सन्देहको कुनै सीमा हुँदैन।

कङ्कर : त्यसो हो भने हामी पनि तिमीमाथि शङ्का गर्दछौं।

विभूति : यसो गर्ने अधिकार छ तिमीलाई, जे होस् बेला आइपुगेपछि यसको पनि फसेला हुनेछ।

रणजित : (दूतसित) तिनीहरु किन आउँदैछन् तिमीलाई थाहा छ ?

दूत : उनीहरुले युवराज गिरफ्तार भए भन्ने सुनेछन्, त्यसैकारण उनलाई खोजेर निकाल्छौं भन्ने प्रण उनीहरुले गरेका छन्। यहाँबाट छुटाएर उनीहरु उनलाई शिवतराईका राजा बनाउन चाहन्छन्।

विभूति : हामी पनि युवराजलाई खोज्दैछौं अनि उनीहरु पनि, हेरौं कसका हातमा पर्ने हुन्।

धनञ्जय : दुवै दलका हात पर्नेछन् कारण उनको मनमा पक्षपात छैन।

दूत : लौ हेर, शिवतराईको गणेश सरदार आउँदैछ।

[गणेशको प्रवेश]

गणेश : (धनञ्जयलाई सोध्छ) ठाकुर उनी भेटिन्छन् होइन त ?

धनञ्जय : अँ अँ भेटिन्छन्।

गणेश : साँच्ची भन।

धनञ्जय : भेटिन्छन् हौ भेटिन्छन्।

रणजित : कसलाई खोज्दैछौ ?

गणेश : अरे, यिनी ता राजा हुन् । छोड्नै पर्छ ।

रणजित : कसलाई भाइ ?

गणेश : हाम्रा युवराजलाई ! तपाईं उनलाई चाहनुहुन्न, हामी चाहन्छौं । हाम्रो सबथोक तपाईं रोकेर राख्नुहुन्छ ? उनलाई पनि. . . ?

धनञ्जय : अहिलेसम्ममा पनि चिन्न सकिनस् मूर्ख ? कसको सामर्थ्य छ उनलाई रोक्न सक्ने ?

गणेश : हामी उनलाई हाम्रो राजा बनाउँछौं ।

धनञ्जय : अवश्य बनाउनु । उनी राजभेष धारण गरेर आउनेछन् ।

[भैरवपन्थीको प्रवेश]

गीत-१८

तिमिर हृदय विदारण
जलदग्नि निदारुण
मरुश्मशान संचर
शङ्कर ! शङ्कर !
वज्रघोष वाणी
रूद्र शूलपाणि
मृत्यु सिन्धु सन्तर
शङ्कर ! शङ्कर !

(प्रस्थान)

(नेपथ्यबाट) : आमाले बोलाउँदैछ, आमाले बोलाउँदैछ । फर्केर आइज सुमन । फर्केर आइज !

विभूति : यो के सुनिरहेंछु । यो कसको आवाज हो ?

धनञ्जय : अरे, अँध्यारोको छातीमा कोही खित्का छोड़ेर हाँस्तै छ ।

विभूति : ओफ, भैगो छोड़िदेऊ ! कहाँबाट आइरहेछ यो आवाज, भन त ।

(नेपथ्यबाट) : जय होस्, भैरवको जय होस् !

विभूति : यो त स्पष्टै जलधाराको स्वर हो ।

धनञ्जय : नृत्यको थालनीको पहिलो डमरु-ध्वनि हो ।

विभूति : आवाज बढ़िरहेछ, बढ़दै गइरहेछ ।

कङ्कर : मानौं यो—

नरसिंह : कस्तो लाग्छ भने मानौं—

विभूति : हो, हो, निस्सन्देह। मुक्तधारा झल्केर निस्किरहेछ। बाँध कसले झल्कायो ? कसले झल्कायो ? त्यसले निस्तार पाउने छैन।

[कङ्कर, नरसिंह र विभूति द्रूत गतिमा निस्केर जान्छन्]

रणजित : मन्त्री, यो के कुरा हो ?

धनञ्जय : बाँध झल्काउने उत्सवको निम्तो हो।

बज्यो है बज्यो डमरु बज्यो।

हृदय माझ हृदय माझ।

मन्त्री : महाराज, यो ता मानौं—

रणजित : अँ, यो त मानौं उसैको—

मन्त्री : उसको बाहेक अरु त कसको. . .?

रणजित : यत्रो साहस अरु कसमा छ र ?

धनञ्जय : नाचे है नाचे चरण नाचे

प्राण छेउ प्राण छेउ

रणजित : दण्ड दिनुपरे मै दण्ड दिउँला। तर यो उन्मत्त प्रजाका हातबाट—मेरो अभिजित देउताहरुको प्यारो छ, देउताले उसको रक्षा गरून्।

गणेश : मालिक के भयो, केही बुझ्नै सकिन्न।

धनञ्जय : प्रहरी जागे, प्रहरी जागे

तारा तारा सबै काम्न लागे

रणजित : अरे, मानौं कसैको पैतालाको आवाज सुनिइँदैछ। अभिजित ! अभिजित !

मन्त्री : सायद आइरहेछन् क्यार !

धनञ्जय : मर्म मर्ममा वेदना फुट्छ

बन्धन छुट्छ बन्धन छुट्छ।

[सञ्जयको प्रवेश]

रणजित : यो ता सञ्जय हो ! अभिजित कहाँ छ ?

सञ्जय : मुक्तधाराको प्रवाहले उनलाई लग्यो, हामीले उनलाई भेटेनौं।

रणजित : के भन्दैछौ कुमार !

सञ्जय : युवराजले मुक्तधाराको बाँध झल्काए।

रणजित : बुझें। त्यसलाई मुक्त गर्दा नै उनले मुक्ति पाए।

सञ्जय : उनले तिमीलाई सँगै लगेका थिए ?

सञ्जय : अहँ, तर मनमनै मैले चाल पाइसकेको थिएँ उनी त्यहीं जान्छन् भन्ने कुरा। म त्यहाँ गएर अँध्यारोमा उनको बाटो हेर्न थालें, तर बस्

त्यत्ति नै। उनले मलाई रोकिदिए, अन्तसम्म पुग्नै दिएनन्।

रणजित : के भयो, अरु पनि केही भनन।

सञ्जय : कुन्नि कसरी हो उनले बाँधमा रहेको एउटा त्रुटि चाल पाएका रहेछन्। त्यहीं उनले यन्त्रासुरमाथि प्रहार गरे। यन्त्रासुरले उनको प्रहार उनीमाथि नै घोप्ट्याइ-दियो। अनि मुक्तधाराले आमाले जस्तै उनको घाइते शरीरलाई काखमा लिएर हिंड़ी।

गणेश : हामी त युवराजलाई खोज्न भीन निस्केका थियौं। उसो भए के अब उनी भेटिन्नन् त?

धनञ्जय : सधैंको निम्ति भेटिए।

[भैरवपन्थीको प्रवेश]

गीत-२०

जय भैरव! जय शंकर!
जय जय जय प्रलयंकर!
जय संशय भेदन
जय बन्धन छेदन
जय संकट संहर।
शंकर शंकर
तिमिर हृदय विदारण
जलदग्नि निदारुण
मरुश्मशान संचर।
शंकर शंकर
बज्रघोष वाणी
रुद्र शूलपाणि
मृत्यु सिन्धु संतर।
शंकर शंकर!

* * *

[ यो घटना जुन नगरमा घटित भएको हो, त्यसको नाँउ क्षयपुरी हो । यहाँका ज्यामीहरु माटो मुनिबाट सून निकाल्ने कामया नियुक्त छन् । यहाँका राजा एउटा अत्यन्त जटिल जालको आवरणको अन्तरालमा बस्ने गर्दछन् । महलमा जहाँनेर त्यो जाल-को आवरणा छ, त्यही स्थान यो नाटकको एक मात्र दृश्य हो । त्यही आवरणको बाहिरपट्टि सबै घटनाहरु घटित हुन्छन् ।]

[नन्दिनी र किशोर, खानी खन्ने बालक]

किशोर – नन्दिनी, नन्दिनी, नन्दिनी !

नन्दिनी – चिच्याई-चिच्याई मलाई किन बोलाउँदैछौ, किशोर ! म कान सुन्दिनँ र ?

किशोर – जान्दछु, तिमीले कान सुन्छयौ । तर तिमीलाई बोलाउँदा मलाई आनन्द लाग्छ । तिमीलाई अझ फूल चाहिन्छ ? लौ त, म जाऊँ ?

नन्दिनी – जाऊ, जाऊ । अहिले काममा फर्केर जाऊ । ढिलो नगर ।

किशोर – दिनभरी त सूनको खानी नै खनिरहन्छु । अलिकति समय त्यसैबाट चोरेर तिम्रो लागि फूल लिएर आउने जुन समय पाउँछु, त्यस बेला प्राण नै पाएँझैं मलाई लाग्छ ।

नन्दिनी – अरे, किशोर, तिनीहरुले थाहा पाए भने तिमनीले दण्ड पाउनेछौ ।

किशोर – जसरी भए पनि तिमीलाई रातो कणेल चाहिन्छ भनेर तिमीले नै भनेकी हौ । रातो कणेल यहाँ सजिलै नपाइने कुराले मलाई आनन्द लागेको छ । धेरै सोध-खोज गर्दा त्यसको एउटा मात्र रुख पाउनसकेको छु । त्यो यहाँको व्यवस्थाको पछिल्तिर छ ।

नन्दिनी – त्यसो भए मलाई त्यो देखाइदेऊ, म आफै गएर टिपेर ल्याउँछु ।

किशोर – त्यस्तो कुरा नगर, नन्दिनी, यति निठुरी नहौ । त्यो रुख मेरो एउटा मात्र गोप्य कुराजस्तो लुकेर बसोस् । विशूले तिमीलाई गीत सुनाउने गर्छ, त्यो गीत उसको आफ्नो हो, आजदेखि म तिमीलाई फूल दिने गर्छु, ती मेरा आफ्ना फूल हुनेछन् ।

नन्दिनी – तर यहाँकाहरुले तिमीलाई दण्ड दिने गर्दछन्; त्यो देखेर मेरो मन छिया-छिया हुन्छ ।

किशोर – त्यो दुःखले मेरा फूल अझ बढ़ता मेरा आफ्ना भएर फक्रन्छन् । ती मेरा दुःखका धन हुन् ।

नन्दिनी – तर तिमीहरुका यी दुःख म कसरी सहन गर्नसक्छु !

किशोर – कस्ता दुःख, नन्दिनी ? म एक दिन तिम्रा निंति प्राण पनि दिन्छु, यो कुरा कैयौंपल्ट म मनमनै समझने गर्दछु ।

नन्दिनी – तिमीले मलाई यतिका दियौ, तर मैले तिमीलाई के दिनू ? तिमी नै भन त, किशोर ?

किशोर – तिमीले ? तिमीले मलाई यति मात्र वचन देऊ—मेरै हातबाट तिमी

प्रत्येक दिन फूल थाप्रे गनेछ्यौ।

नन्दिनी – लौ, यही सही। तर तिमी अलि होशियार भएर हिंड्ने गर।

किशोर – होइन, म होशियार भएर हिंडदिनँ, हिंडदिनँ। तिनीहरुका कुटाइ खाएर पनि म तिम्रो लागि फूल लिएर आइपुग्नेछु।

[प्रस्थान]

[अध्यापकको प्रवेश]

अध्यापक – नन्दिनी, पर्ख, एक छिन नजाऊ।

नन्दिनी – के हो, अध्यापक!

अध्यापक – घरिघरि आँखा तिर्मिर्याइराखेर किन जाने गर्छ्यौ? मनलाई झटका दिइसकेपछि अलिकति बोलिराखेर जाँदा के नोकसान हुन्छ? एक छिन त पर्ख। एक-दुइ शब्द बोलिराख।

नन्दिनी – तिमीलाई मेरो के आवश्यकता पर्यो?

अध्यापक – आवश्यकताको कुरा गर्यौ। यसो यता हेर त! खनाइ गर्ने हाम्रा ज्यामीहरुका हल पृथ्वीको छाती चिरेर चाहिंदो भारी टाउकोमा धारणा गरेर कीराहरुझै खानीबाट बाहिर निस्किरहेछन्। यो क्षयपुरीमा हाम्रा जे-जति धन छन्, ती त्यही धूलोको नाड़ीको धन हो—सून! तर सुन्दरी, तिमी जुन सून हौ, त्यो धूलोको सून होइन, त्यो त प्रकाशको सून हो। आवश्यकताको बन्धनमा त्यसलाई कसले बाँन्धसक्तछ?

नन्दिनी – एउटै कुरा तिमी घरिघरि गर्ने गर्छौ। भन त, मलाई देखेर तिमीलाई त्यतिको आश्चर्य किन लाग्छ, अध्यापक?

अध्यापक – बिहानै फूलको बनमा जुन प्रकाश फैलिन्छ, त्यसमा आश्चर्यको कुरा उठ्छैन, तर पक्का देवलको कापबाट जुन प्रकाश फैलिन्छ, त्यो अर्कै हुन्छ। क्षयपुरीमा तिमी त्यही आश्चर्यपूर्ण प्रकाश हौ। लौ, भन त, तिमी यहाँको बारेमा के सोन्चे गर्दछ्यौ?

नन्दिनी – सारा शहरलाई माटोमुनि टाउको घुसारेर अन्ध्यारोमा खोजि-हिंड़ेको अवाक भएर हेर्छु। पातालमा खानी खनेर क्षयको धन निकालेर ल्याउँछौ। तर त्यो त कैयन् दिनदेखिको मेरो धन हो, धरतीले त्यसलाई कबर बनाएर राखेको थियो।

अध्यापक – हामीहरु त्यही मृत धनको शव-साधना गर्दछौं। त्यसको प्रेतलाई वशमा गर्नचाहन्छौं। सूनका तालमा ताल-बेताललाई बाँध्नसक्यौं भने सारा पृथ्वी मुट्ठीमा हुनेछ।

नन्दिनी – अनि फेरि तिमीहरुले आन्फा राजालाई एउटा अदभुत जालको देवलको आड़मा बाँधेर राखेका छौ। तिमीहरुका राजा पनि मानिस हुन् भन्ने तिमीहरूलाई डर छ। तिमीहरुको खानीको अन्धकारको ढकनीलाई

भत्काएर त्यसमा प्रकाश खन्याइदिने मलाई इच्छा भएर आउँछ। त्यो भद्दा जाललाई भत्काएर बिचरा त्यो मानिसलाई उद्धार गर्ने इच्छा पनि भएर आँउछ।

अध्यापक – हाम्रो मृत धनको प्रेतको जस्तो भयंकर शक्ति छ, त्यस्तै भयंकर प्रताप छ हाम्रो मनुष्यतामा चालिएको राजाको पनि!

नन्दिनी – यी सब तिमीहरुका गढ़न्त कुराहरु हुन्।

अध्यापक – गढ़न्त त हो नै। नांगो मानिसको कुनै परिचय हुँदैन। बनाइएको, सिंगारिएको लुगाले नै कोही राजा हुन्छ, कोही रंक हुन्छ। हिंड़ मेरो घरमा! तिमीलाई तत्त्वका कुरा बुझाउँदा बड़ो आनन्द लाग्छ।

नन्दिनी – तिम्रा खन्ने ज्यामीहरु जसरी खानी खन्दा-खन्दा माटोमुनि डुब्दै जाँदैछन्, त्यसरी नै रात-दिन पुस्तकहरुमा तिमी खाड़ल खन्दै गइरहेछौ। मलाई लगेर व्यर्थै किन समय नष्ट गर्छौ?

अध्यापक – हामीहरु ठोस अवकाशरहित विबरका कीराहरु हौ, गहन कार्यमा डुबेका छौ। तिमी खुल्ला समयको आकाशको सन्ध्या-तारा हौ, तिमीलाई देखेर हाम्रा पखेटा फर्फराउन थाल्छन्। आऊ मेरो घरमा। तिमी-आफूलाई लिएर मलाई केही समय नष्ट गर्नदेऊ।

नन्दिनी – हुँदैन, हुँदैन। अहिले समय छैन। तिम्रा राजालाई उसको आफ्नै घरमा म हेर्न आएकी हुँ।

अध्यापक – उ त लज्जाको आड़मा बस्ने गर्छ, तिमीलाई घरभित्र पस्नै दिइनेछैन।

नन्दिनी – म जालको बाधालाई मान्दिनँ, म घरभित्र पस्न आएकी हुँ।

अध्यापक – जान्दिछयौ, नन्दिनी? म पनि एउटा जालको पछिल्तिर छु, मबाट पनि मानिसका धेरै थोक लोप भइसकेका छन्, मात्र पण्डित जागरित छ। हाम्रो राजा भयंकर राजा हो, म पनि त्यस्तै भयंकर पण्डित हुँ।

नन्दिनी – तिमी मसित परिहास गरिरहेछौ। तिमी त भयंकर देखा पर्दैनौ! एउटा कुरा सोधूँ? यिनीहरुले मलाई त यहाँ ल्याए, तर रंजनलाई किन संगै ल्याएनन्?

अध्यापक – सबै वस्तुलाई टुक्रा-टुक्रा पारेर ल्याउनु नै यिनीहरुको दस्तूर हो। तर म सोध्छु, यो जग्गाको मेरो धनको बीचमा आफ्नो प्राणको धनलाई तिमी किन ल्याउनचाहन्छ्यौ?

नन्दिनी – मेरा रंजनलाई ल्याइदिए यिनीहरुका मृत पंजरमा प्राण नै नाँन्चथाल्नेछन्।

अध्यापक – एकली नन्दिनीलाई ल्याउँदा नै क्षयपुरीका सरदार हतबुद्धि भएका छन्, रंजनलाई पनि ल्याए के हाल होला।

नन्दिनी – तिनीहरुलाई आफू विचित्रका भएका कुरा थाहै छैन। तिनीहरूका बीचमा विधाताले एकपल्ट राम्ररी हाँसिदिए तिनीहरुको निद्रा हराउनेछ।

रंजन विधाताको त्यही हाँसो हो।

अध्यापक – देवताको हँसाइ सूर्यको प्रकाश हो, त्यसले हिंउ पगाल्छ तर ढुँगा पग्लँदैन। सरदारहरुलाई पगाल्न ताकत चाहिन्छ।

नन्दिनी – मेरा रंजनको ताकत तिमीहरुको शंखिनी नदीको जस्तो छ। त्यो नदीजस्तै उ जसरी हाँस्नसक्छ, त्यसरी नै तोड़-फोड़ गर्न पनि सक्छ। अध्यापक, तिमीलाई आजको एउटा गुप्त खबर भनिदिऊँ। आज रंजनसित मेरो भेट हुन्छ।

अध्यापक – कसरी जान्यौ ?

नन्दिनी – हुन्छ, हुन्छ ! भेट हुन्छ। खबर आएको छ।

अध्यापक – सरदारको आँखा छलेर कुन बाटोबाट खबर आउनसक्छ ?

नन्दिनी – जुन बाटोबाट वसन्त आउने खबर आउँछ, त्यही बाटोबाट। त्यसमा लागेका छन आकाशका रंग र पवनका लीला !

अध्यापक – अर्थात् आकाशको रंग र पवनको लीलामा उड्दै-उड्दै खबर आइ-पुग्यो !

नन्दिनी – खबर उड्दै-उड्दै कसरी माटोमा आइपुग्छ, रंजन आएपछि म देखा-इदिऊँला !

अध्यापक – रंजनको कुरा चल्नेबित्तिकै नन्दिनीको मुखका कुराहरुले रोकिने नाँउ नै लिंदैंनन्। हुनदेऊ। मसित वस्तु-तत्त्व-विद्या छ, त्यसैको गह्वरमा पस्छु। अब साहस गइसक्यो।

[केही पर गएर फेरि फर्कन्छ]

नन्दिनी, एउटा कुरा तिमीलाई सोध्छु, क्षयपुरीसित तिमीलाई डर लाग्दैन ?

नन्दिनी – किन डराउनु ?

अध्यापक – ग्रहणको सूर्यसित मानिसहरु डराउँछन्, पूर्ण सूर्यसित कोही डराउँदैन। क्षयपुरी ग्रहण लागेको पुरी हो। सूनको खानी-रूपी राहुले त्यसलाई निलिसकेको छ। त्यो स्वयं पूर्ण छैन, कसैलाई पूर्ण भएर बस्नदिन पनि चाहँदैन। तिमीलाई म भन्छु, तिमी यहाँ नबस। तिमी गएपछि यी खानीहरु अझै बढ़ता मुख बाएर हामीतिर हेरिरहनेछन्। फेरि पनि भन्छु, यहाँबाट तिमी भाग। जहाँका मानिसहरुले डाँका हालेर माता वसुन्धराका आँचललाई टुक्रा-टुक्रा पारेर खुट्टाले किचिमिचि पार्दैनन्, त्यहाँ रंजनलाई लगेर सुखपूर्वक बस।

[अलिक पर गएर फेरि फर्कन्छ]

नन्दिनी, तिम्रो हातमा त्यो रातो कणेलको जुन कंकण छ, त्यसमध्येको एउटा फूल निकालेर मलाई दिन्छ्यौ ?

नन्दिनी – किन, तिमी के गर्छौ ?

अध्यापक – तिम्रो हातको रातो कणेलको कंकणको अर्थ के होला भनेर मैले धेरैपल्ट विचार गरेको छु।

नन्दिनी – त्यसको अर्थ त मलाई थाहा छैन।

अध्यापक – तिम्रो भाग्यपुरुषले जानेको होला। त्यो रातो आभामा एउटा भयमिश्रित रहस्य छ, माधुर्य मात्र होइन।

नन्दिनी – ममा भय ?

अध्यापक – विधाताले सुन्दरको हातमा रक्तको तूलिका दिएका छन्। थाहा छैन, त्यो रातो रंगले तिमी कस्तो लेखा लेख्न आएकी हौ। मालती थियो, बेला थियो, चमेली थियो—ती सबलाई छोड़ेर यही फूल तिमीले किन रोज्यौ ? थाहा छ, मानिसले यसरी नै अनजानमा आफ्नो भाग्य रोज्दछ।

नन्दिनी – रंजन कहिले-काँही मलाई प्यारो गरेर कणेल भन्ने गर्दछ। कुन्नि किन हो ? रंजनको प्रेमको रंग रातो छ भन्ने मलाई लाग्दछ, मैले त्यही रातो रंगलाई गलामा पहिरेकी छु, वक्षस्थलमा धारण गरे की छु, हातमा लगाएकी छु।

अध्यापक – उसो भए तिमी मलाई त्यसको एउटा फूल देऊ–एक क्षणको निंति दान ! म त्यो रंगको तत्त्व-बुझ्ने चेष्टा गर्छु।

नन्दिनी – लेऊ, आज रंजनको आउने खुशीमा यो फूल तिमीलाई उपहार दिन्छु।

[अध्यापकको प्रस्थान]

[ खानीको ज्यामी गोकुलको प्रवेश ]

गोकुल – एकपल्ट मुख यता फर्काऊ त। मैले तिमीलाई चिन्नसकिनँ। को हौ तिमी ?

नन्दिनी – तिमी जे-जति देखिरहेछौ, त्योबाहेक म अरु केही होइन। चिन्नु र बुझ्नुपर्ने आवश्यकता तिमीलाई किन पर्यो ?

गोकुल – नबुझेसम्म चित्त बुझ्दैन। तिमीलाई यहाँ राजाले कुन कार्जेका लागि ल्याएका हुन् ?

नन्दिनी – अकार्जेको लागि।

गोकुल – तिमीसित त कुनै मन्तर भएजस्तो छ। सबैलाई तिमीले वशमा गरेकी छ्यौ। सत्यानाशी छ्यौ तिमी। तिम्रो यो सुन्दर अनुहार देखेर जो भुलिन्छन्, ती मर्नेछन्। हेरूँ-हेरूँ, तिम्रो सिउँदोमा के झुलिरहेको रहेछ ?

नन्दिनी – रातो कणेलको मञ्जरी।

गोकुल – त्यसको अर्थ ?

नन्दिनी – त्यसको केही पनि अर्थ छैन।

गोकुल – तिम्रा कुरामा मलाई अलिकति पनि विश्वास लागेन। यो कस्तो जाल तिमीले फैल्याइराखेकी छ्यौ ! दिन बितिसक्दा-नसक्दा नै कुनै-न-कुनै एउटा आपद तिमी ल्याइदिन्छ्यौ। त्यसैले यतिका सिंगार गरेकी छ्यौ ! भयंकरी छ्यौ तिमी, भयंकरी।

नन्दिनी – तिम्रो लागि म यति भयंकर किन छु ?

गोकुल – तिमी रातो ज्योतिको राँकोजस्तै देखिन्छ्यौ। जान्छु—मूर्खहरूलाई बुझाएर भनिदिनु छ 'सावधान, सावधान' !

नन्दिनी – [जालको दैलोलाई ढक्ढकाँउछे] सुन्दैछौ ?

नेपथ्यबाट – सुन्दैछु, नन्दा। तर तिमी घरिघरि नबोलाऊ, मसित समय छैन, एकदमै छैन।

नन्दिनी – आज मेरो मन खुशीले भरिएको छ। त्यही खुशी लिएर म तिम्रो घरमा पस्नचाहन्छु।

नेपथ्यबाट – हुँदैन, घरमा हुँदैन। जे भन्नु छ, बाहिरैबाट भन।

नन्दिनी – कुन्द फूलको माला उनेर ल्याएकी छु पद्म-पत्रहरुको दुनामा।

नेपथ्यबाट – आफै लगाऊ।

नन्दिनी – मलाई सुहाउँदैन। मेरो माला कणेलको छ।

नेपथ्यबाट – म पर्वतको शिखरजस्तो छु। शून्यता नै मेरो शोभा हो।

नन्दिनी – त्यो शिखरको वक्षस्थलबाट पनि झरना बग्ने गर्दछ, तिम्रो गलामा पनि हार लहरिनेछ। जाल खोलिदेऊ। म भित्र पस्छु।

नेपथ्यबाट – पस्नदिन्नँ। जे भन्नु छ, चाँडो भन। समय छैन।

नन्दिनी – टाडाको त्यो गीत सुन्दैछौ ?

नेपथ्यबाट – कस्तो गीत ?

नन्दिनी – पौषको गीत। अन्न पाक्नलागेको छ। कटनी हुन्छ। यो त्यसैको गीत हो।

[गीत-१]

पौष तिमीलाई डाकिरहेछ—आऊ है आऊ !
आज उसको डालो भरिएको छ पाकेका अन्नले,
अहो, कति सुन्दर छ यो !
देखेनौ, पौषको घामले पाकेका धानको सुन्दरतालाई आकाशमा फैलाइरहेको छ ?

[गीत-२]

हावाका मातमा छन् मातेका
दिग्बधुहरु धानका खेतमा।

धामका सून फैलिएका छन् माटोको आँचलमा
अहो, कति विचित्र छ शोभा !
तिमी पनि बाहिर आऊ राजा, म तिमीलाई मैदानतिर लैजान्छु–

[गीत-३]

मैदानको बाँसुरी-सूर सुनी–सुनी आकाश आनन्दित भएको छ,
घरभित्र आज को बस्नचाहन्छ, खोल द्वार खोल !

नेपथ्यबाट – म मैदानमा जानू ? त्यहाँ कुन काम छ मेरो ?

नन्दिनी – मैदानको काम तिम्रो यो क्षयपुरीको कामभन्दा धेरै सजिलो छ ।

नेपथ्यबाट – सजिलो काम नै त मेरो लागि गाह्रो हुन्छ । कहिले तलाउले पनि फींजको नूपुर धारण गर्ने झरनालेझैं नाँन्चसक्छ र ? जाऊ-जाऊ, अब नबोल । समय छैन ।

नन्दिनी – अद्‌भुत छ तिम्रो शक्ति ! जुन दिन तिमीले मलाई आन्फो भण्डारमा पस्नदिएका थियौ, त्यो दिन तिम्रो सूनको ताल देखेर मलाई रत्तिभर पनि आश्चर्य लागेको थिएन, तर जुन विराट् शक्तिको बलले अनायास नै तिमी त्यसलाई लिएर पहाड़को शिखरझैं सजाइरहेका थियौ, त्यही देखेर म मुग्ध भएकी थिएँ । तै पनि म सोध्छु, राजा, सूनका पिण्ड तिम्रो हातका आश्चर्य-पूर्ण छन्दद्वारा त्यसरी नै चंचल हुनसक्तछ, जसरी धानको खेत हुनसक्छ ? लौ, राजा, भन त, पृथ्वीको यो मरेको धनलाई तिमी रात-दिन वल्टाइ-पल्टाइ गरिरहन्छौ, तिमीलाई डर लाग्दैन ?

नेपथ्यबाट – किन, केको डर ?

नन्दिनी – पृथ्वीले हाम्रा प्राणका वस्तुहरु प्रसन्न भएर आफै दिन्छ, तर जब उसको छाती चिरेर मेरा हाड़को ऐश्वर्य भनेर खोस्छौ, तब तिमी अन्धकारबाट एउटा अन्ध राक्षसको श्राप लिएर आउँछौ । देख्दैनौ, यहाँ सबै कसरी-कसरी चिढ़िएकाझै देखिन्छन् ?

नेपथ्यबाट – श्राप ?

नन्दिनी – हो, रक्तपात, लुटपाटको श्राप !

नेपथ्यबाट – त्यो श्रापको कुरा मलाई थाहा छैन । यति थाहा छ, हामी शक्ति लिएर आउँछौं । मेरो शक्ति देखेर तिमी खुशी हुन्छ्यौ, नन्दिनी ?

नन्दिनी – खूबै खुशी हुन्छु । त्यसैले त भन्छु, उज्यालोमा निस्क, धरतीमा खुट्टा टेक, पृथ्वी पनि खुशी होस ।

[गीत-४]

आलोकको खुशी जागेको छ,

धराको अंकुरमा शिखिर लागेर,
धराको खुशी हृदयमा अटाउन्न, आनन्द उफ्रिरहेछ,
आहा, कस्तो विचित्र शोभा छ!

नेपथ्यबाट – नन्दिनी, विधाताले रूपको मायाको अन्तरालमा तिमीलाई अनुपम बनाइराखेको छ भन्ने थाहा छ? त्यसबाट खोसेर तिमीलाई मुट्ठीमा रान्खचाहन्छु, तर समाउनैसक्तिनँ। म तिमीलाई वल्टाई-पल्टाई हेर्न-चाहन्छु र देखिनँ भने तोड़-फोड़ पनि गर्नचाहन्छु।

नन्दिनी – तिमी के भन्दैछौ?

नेपथ्यबाट – तिम्रो त्यो रातो कणेलको जुन आभा छ, त्यो आभालाई निचोरेर आफ्ना आँखामा अंजन म किन लाउनसक्तिनँ? कैयन् साधारण पटलहरुले त्यसलाई आफ्ना आँचलले ढाकिराखेका छन्। यस्तै वाधा तिमीमा पनि छ—कोमल छ, त्यसैले कठोर छ! लौ, नन्दिनी, सफासित भन, तिमी मलाई के संझन्छ्यौ?

नन्दिनी – त्यो म अर्को कुनै दिन भनुँली। आज तिमीसित समय छैन। आज जान्छु।

नेपथ्यबाट – होइन, होइन, नजाऊ। मलाई के संझन्छ्यौ, भनिराखेर जाऊ।

नन्दिनी – कतियौं पल्ट त भनिसकेकी छु, तिमीलाई म आश्चर्यमय संझन्छु। आफ्ना प्रकाण्ड हातहरुका प्रचण्ड जोड़ले तिमी फुल्दै-फुल्दै माथि उठेका छौ– ठीक आँधी-बेहरीको अघि-अघि उड्ने बादलजस्तो– त्यो देखेर मेरो मन नाँच्नथाल्छ।

नेपथ्यबाट – रंजनलाई देखेर पनि त तिम्रो मन नाँच्नथाल्छ, त्यो पनि के—

नन्दिनी – त्यो कुरा छोड़िदेऊ। तिमीसित समय नै छैन।

नेपथ्यबाट – समय छ, भनिराखेर जाऊ।

नन्दिनी – त्यो नाँचको ताल अर्कै प्रकारको छ, तिमी बुझ्दैनौ।

नेपथ्यबाट – बुझ्छु। बुन्झचाहन्छु।

नन्दिनी – सबै कुरा खुलस्त बुझाउनसक्तिनँ। म गएँ।

नेपथ्यबाट – एक क्षण पर्ख। मलाई मन पर्छ कि पर्दैन?

नन्दिनी – खूबै मन पर्छ।

नेपथ्यबाट – रंजनलाई जतिकै?

नन्दिनी – घुमाई-फिराई एउटै कुरा! यी सब कुरा तिमी बुझ्दैनौ।

नेपथ्यबाट – अलि-अलि बुझ्छु। रंजन र ममा के अन्तर छ? त्यो म बुझ्छु! मभित्र ताकत नै ताकत छ, रंजनमा जादू छ।

नन्दिनी – जादू केलाई भनिन्छ?

नेपथ्यबाट – बुझाएर भनुँ? पृथ्वीको तल्लो तलामा पिंडीभूत पत्थर छ, फलाम छ, सून छ, यहाँ ताकतको मूर्ति बस्छ। माथिल्लो तलामा अलि अलि

काँचो माटो छ, त्यसमा उम्रेका घाँस छन्, फुलेका छन् फूल—त्यही जादूको खेला हो । दुर्गमको बीचबाट म हीरा ल्याँउछु, मणि-माणिक्य ल्याउँछु तर सजिलोको बीचबाट प्राणको त्यो जादू ल्याउनसक्तिनँ ।

नन्दिनी – तिमीसित यति धेरै छन्, र पनि एकोहोरो यसरी लोभीलेझैं किन कुरा गरिबस्छौ ?

नेपथ्यबाट – मसित जे-जति छन्, ती सबै भार भइसकेका छन् । सून जम्मा गरिरहेर त्यो पारस थोरै बन्छ !—शक्तिलाई जति नै बढ़ाए पनि त्यो यौवनसम्म पुग्नसक्तैन । त्यसैले पहरा राखेर तिमीलाई बाँन्धचाहन्छु, रंजनको जस्तै मेरो यौवन भएको भए तिमीलाई खुल्ला राखेरै बाँन्धसन्केथिएँ । यसरी नै बन्धनको डोरीमा गाँठो पार्दा-पार्दै दिनहरु बितेर गइसके । हरे ! सबै थोक बाँधिन्छन्, केवल आनन्द बाँधिदैन ।

नन्दिनी – तिमीले त आफैलाई नै जालमा बाँधिराखेका छौ, फेरि किन यसरी छट्पटाइरहेछौ, केही बुझिएन ।

नेपथ्यबाट – तिमीले बुझ्नसन्केछैनौ । म एउटा विशाल रेगिस्तान हुँ, मरुभूमि । तिमीजस्तै एक-एकवटा ससाना घाँसतिर हात फैलाएर चिच्च्याइरहेछु—म तप्त छु, म रिक्त छु, म क्लान्त छु । तिर्खाको जलनले, यो रेगिस्तानले कैयन्, उपजाउ जमीनहरुलाई चाटिसकेको छ, एउटा मामुली कमजोर घाँसमा जुन प्राण छ, त्यसलाई त्यसले अपनाउनसकेको छैन ।

नन्दिनी – यसो हेर्दा त तिमी क्लान्तजस्ता छैनौ ! म त तिम्रो प्रचण्ड ताकत मात्र देखिरहेकी छु ।

नेपथ्यबाट – नन्दिनी, एक दिन सुदूर देशमा मजस्तै एउटा क्लान्त पहाड़ देखिएको थियो । त्यसका सबै पत्थर भित्र-भित्रै व्यथित भइसकेका छन्, भन्ने मैले बाहिरबाट बुन्झसकिनँ । एक दिन धेरै रात बितिसकेपछि एउटा भयंकर आवाज सुनियो, मानौ—कुनै दैत्यको दुःस्वप्न घुमी-घुमी फैलिएर एकाएक विष्फोट भयो । बिहान उठ्दा देख्छु, पहाड़ भूकम्पले ढलिसकेको छ । शक्तिको भारले अनजानमा नै कसरी मानिसलाई चूर्ण पारिदिन्छ, त्यो कुरा त्यो पहाड़लाई देखेर बुन्झसकेको थिएँ । र, तिमीमा एउटा कुरो छ—ठीक यसको उल्टा ।

नन्दिनी – मलाई के हेर्दैछौ ?

नेपथ्यबाट – विश्वको बाँसुरीमा नाँचको जुन छन्द बज्ने गर्दछ, त्यही छन्द ।

नन्दिनी – केही पनि बुझिनँ ।

नेपथ्यबाट – त्यो छन्दमा वस्तुको विपुल भार हलुका भएर जान्छ । त्यो छन्दमा ग्रह-नक्षत्रका दल माँग्ने नट-बालकहरुझैं आकाशका कुना-काप्चामा नाँच्दै घुमिरहेछन् । त्यही नाँचको छन्दमा तिमी यति सहज भएकी

छ्यौ, नन्दिनी, यति सुन्दर! मेरो तुलनामा तिमी कत्ति पनि छैनौ, तै पनि म तिमीसित ईर्ष्या गर्छु।

नन्दिनी – तिमीले आफूलाई सबैबाट खोसेर वंचित गरिराखेका छौ, सहज बनेर सबैको पहुँचभित्र किन आउँदैनौ?

नेपथ्यबाट – आफूलाई गुप्त राखेर विश्वका बड़े-बड़े माल-खजानाहरूका ठूलठूला धन चोर्न बसेको छु। तर जुन दान विधाताको हातको मुट्ठीभित्र बन्द छ, त्यो दानसम्म तिम्रा चम्पाका कलीजस्ता औंलाहरु जति पुग्नसक्छन्, मेरो सम्पूर्ण शरीरको शक्ति पनि त्यति पुग्नसक्तैन। विधाताको त्यो बन्द मुट्ठी मैले खोल्नैपरेको छ।

नन्दिनी – तिम्रा यी सब, कुरा म राम्ररी बुन्झसक्तिनँ, म हिंडें।

नेपथ्यबाट – लौ, जाऊ। तर न्झयालबाट म आन्फो हात निकालिरहेछु, तिमीले एकपल्ट आन्फो हात त्यसमा राख त!

नन्दिनी – हुँदैन-हुँदैन। आन्फा सबै थोक छोड़ेर एउटा हात मात्र बाहिर निकाल्न मलाई डर लाग्छ।

नेपथ्यबाट – एउटा हातले मात्र समान्नचाहन्छु, त्यसैले सबै मबाट भाग्नचाहन्छन्। तर सबै थोकले समाल्नचाहे भने तिमी समाल्नदिन्छ्यौ, नन्दिनी?

समाल्नचाहे - समालचाहे सबै थोकले भने तिमी समालदिन्छयौ नन्दिनी?

नन्दिनी – तिमी मलाई घरभित्र पस्नैदिंदैनौ भने यी सब कुरा किन भनिरहेछौ?

नेपथ्यबाट – आन्फो अवकाशहीनताको उल्टो धारामा ढकेलेर म तिमीलाई घरभित्र पस्नदिनचाहन्नँ। जुन दिन अनुकूल हावा पालमा लाग्ला र तिमी पनि अनायासै आइपुग्नेछ्यौ, त्यही दिन प्रवेशको शुभ लग्न हुनेछ। त्यो हावा आँधीकै हावा भए पनि केही छैन। अहिले समय भएको छैन।

नन्दिनी – म यति भनिदिऊँ, राजा, त्यो हावा रञ्जनले ल्याउनेछ। उ जहाँ जान्छ, त्यहीं सँगै छुट्टी लिएर जान्छ।

नेपथ्यबाट – तिम्रो रंजन जुन छुट्टीलाई बोकेर हिंड्छ, त्यसलाई रातो कणेलको मधुले कसले भरिरहन्छ, त्यो मलाई थाहा छैन र? नन्दिनी, तिमीले त खालि छुट्टीको खबर मलाई दियौ, त्यसलाई भने मैले मधु कहाँ पाउनू?

नन्दिनी – त्यसो भए आज म जाऊँ।

नेपथ्यबाट – होइन, यो कुराको जवाफ दिइराख।

नन्दिनी – छुट्टी मधुले कसरी भरिन्छ, रंजनलाई देखेपछि तिमीले बुन्झेछौ। उ अत्यन्त सुन्दर छ।

नेपथ्यबाट – सुन्दरको जवाफ सुन्दरले नै पाउँछ। असुन्दरले जब जवाफ खोस्न-खोज्छ, वीणाको तार बज्दैन, त्यो चुँड़िन्छ। अब, हुँदैन, जाऊ, चाँड़ो

जाऊ—नत्र आपद आइपर्छ।

नन्दिनी – जान्छु, तर यति भनिराख्छु, आज मेरो रंजन आउँछ, आँउछ। तिमीले उसलाई छेन्कसन्केछैनौ–कुनै प्रकारले पनि!

[प्रस्थान]

[खानीको ज्यामी फागूलाल र उसकी स्त्रीको प्रवेश]

फागूलाल – मेरो रक्सी तिमीले कहाँ लुकाएकी छ्यौ? चन्दा? निकाल।

चन्द्रा – के हो यस्तो? एका बिहानैदेखि रक्सी कुरा!

फागूलाल – आज छुट्टीको दिन हो। हिज उनीहरुको मारण-चण्डीको व्रत थियो। आज ध्वज-पूजा हुन्छ, साथै अस्त्र-पूजा पनि।

चन्द्रा – के भन्दैछौ? उनीहरुले पनि देवता–देवी मान्छन् र?

फागूलाल – देखिनौ तिमीले ? उनीहरुका रक्सीका भण्डार, अस्त्रशाला र मन्दिर संगसंगै छन्!

चन्द्रा – त्यसो भए तिमीले छुट्टी पायौ र रक्सी चाहियो? गाँउमा हुँदा पर्वका छुट्टी पाउँदा।

फागूलाल – वनका चरा-चुरुंगी छुट्टी पाउँदा उड्छन, र पिंजरामा बन्द हुनेले छुट्टी पाउँदा पिंजराका भित्तामा टाउको ठोक्काएर मर्छन्। क्षयपुरीमा कामकाज हुनुभन्दा छुट्टी हुनु नै दूलो पीर हो।

चन्द्रा – छोड़िदेऊन त काम। घर फर्कौं।

फागूलाल – शायद तिमीलाई थाहा छैन, घर जाने बाटो बन्द छ।

चन्द्रा – किन बन्द हुनु?

फागूलाल – किनभने हाम्रा घरबाट यिनीहरुलाई कत्ति पनि लाभ छैन।

चन्द्रा – के हामीहरु उनीहरुका आवश्यकतासित बेस्सरी टाँस्सिएका छौं र? हामीमा फाल्तु केही पनि छैन?

फागूलाल – हाम्रो विशू पगला भन्ने गर्छ–पूरा भएर बस्नु खसी-बाख्रालाई मात्र आन्फो लागि जरूरी छ, जस-जसले त्यसलाई खान्छन्, तिनीहरुले त्यसका हाड़-खोड़, खुर-पुच्छर छुट्टयएर खान्छन्। कतिसम्म भने जब त्यो कसाईको खुँटीको छेउमा म्या-म्या गर्दै चिच्याउँछ, त्यसलाई पनि तिनीहरुले बेकार हो भनेर विरोध जनाउँछन्। ऊ हेर, विशू पगला गीत गाँउदै यतै आउँदैछ।

चन्द्रा – अकस्मात् केही दिनदेखि त्यसको गीत खुलेको छ।

फागूलाल – म पनि त्यो देख्दैछु।

चन्द्रा – त्यसलाई नन्दिनी लागेको छ। त्यसले उसको प्राण पनि तानेकी छ, गीत पनि।

फागूलाल – यसमा अचम्भ के छ?

चन्द्रा – छैन, अचम्भ केही छैन। अरे, तिमी पनि सतर्क बस। कुनै दिन तिमीबाट पनि उसले गीत निकाल्नेछ—त्यो दिन गाँउलेहरुको के दशा हुन्छ? मायाविनी मायाले जानेकी छ। आपद हुन्छ।

फागूलाल – विशूलाई आज आपद आइपरेको छैन। यहाँ आउनुभन्दा धेरैअघि-देखि उसले नन्दिनीलाई चिनेको हो।

चन्द्रा – [विशूलाई बोलाएर] सम्धी, सुन-सुन! कता जानलाग्यौ? गीत सुन्ने दुइचारजना यहाँ पाइनेछन्, कति पनि हानि हुनेछैन।

[विशूको प्रवेश र गीत]

[गीत-५]

मेरा स्वप्न-नौकाका को तिमी नाविक?
लाग्यो पालमा नशाको हावा, पगला प्राण गयो गाउँदै!
मलाई भुलिदिएर जाऊ,
तिम्रो नौका खियाँउदै
तिम्रो सुदूर घाटतिर लैजाऊ!

चन्द्रा – त्यसो भए कुनै आशा रहेन। हामीहरु त धेरै नगीच छौं।

[गीत-६]

विशू – मेरा भावना त सबै झूठा छन्,
मेरा सबै थोक पछि परिरहून।
तिम्रो घुम्टो त खोलिदेऊ,
आफ्रा आँखा खोलेर हेरिदेऊ
आफ्रो हाँसोमा मेरो प्राण आच्छादित गरिदेऊ।

चन्द्रा – तिम्रो स्वप्न-नौकाकी त्यो तरूणीलाई म चिन्छु।

विशू – बाहिरबाट कसरी चिनौली? मेरो नौकाभित्र त तिमीले हेरेकी नै छैनौ!

चन्द्रा – म भन्छु, त्यसले एक दिन त्यो नौका डुबाइदिन्छे—त्यही तिम्री प्यारी नन्दिनीले!

[खानीको ज्यामी गोकुलको प्रवेश]

गोकुल – हेर, विशु, त्यो तिम्री नन्दिनी ठीक छैन।

विशू – किन, के गरी उसले?

गोकुल – केही गरेकी छैन, त्यसैले त शंका लाग्छ। यहाँका राजाले उसलाई त्यस्सै किन यहाँ ल्याए? उसको रंग-ढंग केही बुझिंदैन।

चन्द्रा – सम्धी, यो हाम्रो दुःखको जग्गा हो, यहाँ आएर त्यो आठै पहर सुन्दरी

भइहिड्छे, त्यो हामी कसरी हेरिबसूँ !

गोकुल – हामीलाई त सीधा-सादा, मोटा-मोटी अनुहारमा विश्वास छ, केही गह्रौं, वजनदार हुनुपर्छ ।

विशू – दिक्क लाग्दो कुरा त के छ भने क्षयपुरीको हावाले सुन्दरताप्रति अवज्ञा सिखाइदिने गर्छ । सुन्दर त नर्कमा पनि हुन्छ, तर त्यहाँका बासिन्दाहरु त्यसलाई बुझ्दैनन्-यही त उनीहरुको सबभन्दा ठूलो दण्ड हो ।

चन्द्रा – लौ, तिम्रै कुरा सही । मान्छौं, हामीहरु मूर्ख छौं, तर जान्दछौ, यहाँको सरदारले पनि फुटेको आँखाले पनि हेर्नसक्तैन ?

विशू – हेर, चन्द्रा, सरदारको फुटेको आँखाको छूत तिमीलाई पनि नलागोस है ! यो छूतले भेट्यो भने हामीहरुलाई देख्दा पनि तिम्रा आँखा राता हुनेछन् । लौ, भन त फागू, तिम्रो के विचार छ ?

फागूलाल – म त सफासित भनिदिन्छु, नन्दिनीलाई देख्दा आफूलाई हेर्नु पनि लाज लागेर आउँछ । उसको सामु मुखबाट बोली नै फुट्दैन ।

गोकुल – विशू भाइ, त्यो केटीले तिम्रो मनै भुलाइदिएकी छ । त्यसैले त्यो कतिकी अलच्छिनी छे, त्यो तिमी देख्दैनौ । यो बुन्झ धेरै समय लाग्दैन, म भनिदिन्छु ।

फागूलाल – हामी किन रक्सी खान्छौं भनेर तिम्री सन्धिनी बुन्भचाहन्छे !

विशू – स्वयं विधाताका कृपाले चारैतिर रक्सीको नै जयजयकार छ, तिम्रा आँखाका कटाक्षसम्म पनि । हामी यी भुजाद्वारा काम संचित गर्छौं, तिमी आफ्ना भुजाका बन्धनद्वारा रक्सी संचित गर्छौं । तिमीले जानेकी छ्यौ, सम्धिनी, जीवलोकमा बलको काम हुनुपर्छ र त्यसलाई भुल्नु पनि पर्छ ? रक्सी नभए त्यसलाई भुलाइदिन्छ कसले ?

चन्द्रा – हो त ! तिमीहरुजस्ता जन्मैका मतवालाहरुमाथि विधाताका दयाको सीमा छैन । रक्सीको भाँडा खन्याइदिएको छ !

विशू – एकातिर भोक र तिर्खाका चाबुकले हिर्काइरहेछनु, मुटुमा आगो लगाइरहेछन्-काम गर । अर्कोतिर वनको हरियोपनले माया फैलाइ-दिएको छ, घामको सूनले माया छरिदिएको छ, तिनले चित्तमा आनन्द ल्याइदिएका छन्, भन्छन्, छुट्टी, छुट्टी, छुट्टी !

चन्द्रा – यसैलाई रक्सी भनिन्छ कि के हो ?

विशू – प्राणहरुको रक्सी ! मात कम्ति हुन्छ तर धंधंगी रात-दिन लागिरहन्छ । प्रमाण दिन्छु । यो राजमा आएँ, र पातालमा दुलो खन्ने काममा लागियो । सजिलो रक्सी पाउनु गाह्रो भयो ! यस कारण अन्तरात्मा बजारिया रक्सीले मातेर घुमिहिंड्छ । जब सजिलो साँस फेर्नमा वाधा आइपर्छ, त्यसै बेला मानिसले ठूलठूलो साँस फेर्नथाल्छ ।

[गीत-७]

तिम्रा प्राणका रस त सुकिसके,
तब भरण-रसले तिमी प्याला भर,
चिताको अग्निले गलाएर ढालेको छ
सबै ज्वालाहरुको मेटाउँछ ज्वाला,
सब शून्यलाई अट्टहासले बनाउँछ रंगीन!

चन्द्रा – जाऔं सम्धी, भागौं यहाँबाट।

विशू – त्यो-नीलो चँदुवाको मुनि भएको खुल्ला रक्सीको अड्डामा! बाटो बन्द छ। त्यसैले कैदखानाको रक्सीतिर, जो असलमा चोरिएको माल हो, हामी ज्यादै तानिएका छौं। हामीसित न त आकाश छ, न त अवकाश छ। त्यसैले बाह्र घण्टाको सबै हाँसो र गीतलाई सूर्यको उज्यालोलाई ठूलो पारेर एक घुटको तरल आगोको रूपमा चुहाएका छौं। जस्तो खालको ठोस दासत्व छ, त्यस्तै खालको छुट्टी पनि छ।

[गीत-८]

तिम्रो सूर्य थियो गहन मेघको माझमा
तिम्रो मरेको छ अकाजकै काजमा,
तब आओसन त्यही तिमिर रात्रि,
लुप्ति-रूपी नशाको चरम साथी,
तिम्रा क्लान्त आँखा देओस त्यसले
छोपी दिग्भ्रमको नशाले।

चन्द्रा – जे सुकै भन, सम्धी, क्षयपुरीमा तिमीहरुमा नै मतवालापन आएको छ। हामी स्वास्नी मानिसहरु रत्तिभर पनि बदलेका छैनौं।

विशू – नबदलेर के भयो त? तिमीहरुका फूल सुकिसकेका छन्। अब सून-सून भन्दै ठूल-ठूला साँस फेरिरहेका छौ।

चन्द्रा – कदापि होइन।

विशू – म भन्छु, हो, यो अभागी फागू बाह्र घण्टापछि पनि अझै चार घण्टा आफ्नो टाउको फुटाइरहन्छ, त्यसको कारण न त फागूले जानेको छ, न तिमीले नै जानेकी छ्यौ, अन्तर्यामी नै जान्दछन्। सूनको निंति तिम्रो सपनाले भित्र-भित्रै उसलाई चाबुक लगाउँछ, त्यो चाबुक सरदारको चाबुकभन्दा पनि कड़ा छ।

चन्द्रा – लौ, लौ, भैगो। अब जाऔंन, यहाँबाट देशतिर फर्कौं।

फागूलाल – लौ, भन त, विशू भाइ, तिमी त एकपल्ट पुस्तक पढ़ी-पढ़ी आँखा बिगार्न बसेका थियौ, फेरि त कसरी हामीहरुजस्ता मूर्खहरुसित

तिमीलाई पनि कोदालो समाउनलगायो ? कसरी ?

चन्द्रा – यतिका दिन भइसके, सम्धीबाट यो प्रश्नको जवाफ मैले निकाल्न, सकिनँ।

फागूलाल – सबभन्दा मज्जाको कुरा त के छ भने यो कुरा सबैलाई थाहा छ।

विशू – के थाहा छ, सुनौँन ?

फागूलाल – हाम्रो खबर राख्न तिनीहरुले तिमीलाई चर बनाएर राखेका थिए।

विशू – तिमीहरुलाई सबै थाहा थियो भने मलाई किन जिउँदै छाड़िराखेका छौ ?

फागूलाल – हामीलाई थाहा छ, तिमीबाट यो काम हुनसकेको छैन।

चन्द्रा – कसो, सम्धी, यस्तो आरामको काममा पनि तिमी टिक्नसकेनौ ?

विशू – आरामको काम भन्छ्यौ, एउटा जिउँदो-जाग्दो देहको पछि पिठ्युँको पिलोजस्तो भएर लागिबस्नुलाई ? मैले भनेँ, 'जीउ ठीक छैन, देश पुगेर आउँछु।' सरदारले भने, 'ओहो ! यस्तो कमजोर शरीरलाई लिएर देश जान कसरी सकौला ? तै पनि कोशिश गरी हेर।' कोशिश गरी हेरेँ। थाहा पाएँ, क्षयपुरी-को गाँसमा पसिसकेपछि त्यसको बाइराखेको मुख बन्द भइहाल्छ, त्यसपछि त त्यसको पेटभित्र पस्नुबाहेक अरु बाटो नै रहँदैन। आज म त्यसको त्यही आशाहीन, आलोकहीन पेटमा गायब भइसकेको छु। अब तिमीमा र ममा फरक यति मात्र छ—सरदारले तिम्रो जति अवज्ञा गर्छ, मेरो त्योभन्दा बढ़ता गर्छ। केराको फाटेको पातमाभन्दा फुटेको हाँड़ीमा मानिसको अवहेलना ज्यादा हुन्छ।

फागूलाल – पर्वाह छैन, विशू भाइ, हामीले त तिमीलाई शिरमै राखेका छौँ।

विशू – कुरा फुस्कनेबित्तिकै म मारिन्छु। तिमीहरु सबैको माथा जहाँ जान्छ, त्यहीं सरदारको आँखा पुग्छ। सुनौलो भ्यागुताले कालो भ्यागुतालाई जति स्वागत गर्छ, त्यति त्यो साँपको कानमा पुग्छ।

चन्द्रा – तिमीहरुको काम कहिले सक्छ ?

विशू – पत्रामा दिनको अन्त्य लेखिएको हुँदैन। एक दिनपछि दुइ दिन, दुइ दिनपछि तीन दिन—खानी खनिँदै गइरहेछ—एक हातपछि दुइ हात, दुइ हातपछि तीन हात। तालका ताल सून काटेर ल्याइन्छन्–एक तालपछि दुइ ताल, दुइ तालपछि तीन ताल। क्षयपुरीमा अंकको पछि अंक पंक्ति बनाएर हिंड़ेको छ, कुनै अर्थसम्म पुगित्र। त्यसैले त तिनीहरुकहाँ मानिस होइन, संख्या छ। फागू दाइ, तिमी के हौ ?

फागूलाल – पिठँचुपछिको लुगामा निशान छ, म ४७ फ हुँ।

विशू – म ६६ ङ। गाँउको मानिस थिएँ, यहाँ आएर दस-बीसले अघाएको छु। छातिमा जूवाको खेल भइरहेछ।

चन्द्रा – सम्धी, सून त उनीहरुसित धेरै जम्मा भइसक्यो, अब अझैको के आवश्यकता छ ?

विशू – आवश्यकता नामक वस्तुको कुनै अन्त्य हुन्छ ? खानुको आवश्यकता हुँदैन, पेट भरेपछि त्यसको अन्त्य हुन्छ, गालुको आवश्यकता छैन, त्यस कारण त्यसको अन्त्य पनि छैन। ती सूनका ताल पनि त रक्सी हुन्, हाम्रा क्षयराज्यको ठोस रक्सी ! बुझिनौ ?

चन्द्रा – अहँ !

विशू – रक्सीको प्याला हातमा लिएपछि हामी भुल्छौं—हामी भाग्यका सीमामा बाँधिएका छौं। सम्झन्छौं, हाम्रो छुट्टी अबाध छ। यहाँका मालिकहरुका मनमा पनि सूनको ताल हातमा परेपछि यस्तै मोह लाग्नथाल्छ। सम्झनथाल्छन् सर्वसाधारणको भाटोको आकर्षण त्यहाँ-सम्म पुग्दैन र फेरि तिनीहरु असाधारणका आकाशमा पनि उड्छन्।

चन्द्रा – नवान्नको बेला आइपुगेको सम्झे पनि हुन्छ। गाँउ-गाँउमा त्यसको तैयारी हुनथालेको छ। खुट्टा ढोक्छु, घर जाऔं। एकपल्ट हामी सबैले सरदारसित—

विशू – स्त्री-बुद्धिले तिमीले अहिलेसम्म शायद सरदारलाई चिनेकी छैनौ !

चन्द्रा – यसो हेर्दा त मलाई राम्रै—

विशू – हो-हो, धेरै राम्रो, 'जगर मगर तन जोति !' घड़ियालको दाँत हो, प्रत्येक अंशमा कायदासाथ पुग्छ ! मकरराज स्वयंले चाहे पनि निकाल्नसक्तैन।

चन्द्रा – ऊ—हेर, सरदार आँउदैछन् !

विशू – भयो अब। उसले हाम्रो कुरा अवश्य सुन्यो होला !

चन्द्रा – हामीले के भन्यौं र त्यस्तो—

विशू – सम्धिनीलाई थाहा छैन, कुरा हामी गर्छौं, अर्थ उसले लगाउँछ। यस कारण कुन कुराको टीकाले कुन छानामा आगो लगाइदिन्छ, कसैले भन्नसक्तैन।

[सरदारको प्रवेश]

चन्द्रा – सरदार हजूर बा !

सरदार – कसो नातिनी ? समाचार ठीक छ ?

चन्द्रा – एकपल्ट घर जाने छुट्टी पाए हुन्थ्यो !

सरदार – किन र ? बस्नलाई जुन कोठाहरु दिइएका छन्, ती अत्यन्तै राम्रा छन्-घरकाभन्दा पनि धेरै राम्रा। सरकारी खर्चले भ्याएसम्म बन्दोबस्त गरिएको छ। कसो ६६ ङ ? तिमीलाई यिनीहरुका बीचमा देख्दा सारसले बकुलाहरुको दललाई नाँच सिखाउन आएकोजस्तो लाग्छ।

विशू – सरदारज्यू, तिम्रा ठट्टामा आनन्द आँउदैन, पाउमा नाँच्नै ताकत भएको भए यहाँबाट समेटिएर दौड़ लगाउने थिएँ। तिम्रो इलाकामा नँचाउने काम कति डरलाग्दो हुन्छ, यो कुराका ठूल-ठूला दृष्टान्त मैले देखेको छु। अब त सीधा भएर हिंड्नखोज्दा पनि पाउ कान्मलागेकोजस्तो हुन्छ।

सरदार – नातिनी, एउटा राम्रो खबर छ। यिनीहरुलाई राम्रा कुरा सुनाउन कीनाराम गोसाईंलाई बोलाइएको छ। यिनीहरुबाट प्रणामी उठेपछि खर्च चलिहाल्छ। गोसाईंज्यूबाट यिनीहरुले दिन्हौं साँझमा–

फागूलाल – हुँदैन-हुँदैन, सरदार, यो हुनसक्तैन। हिजआज साँझमा रक्सी खाएर हामीहरु मस्त भएका हुन्छौं, कोही उपदेश सुनाउन आयो भने काटमार हुन्छ।

विशू – चूप-चूप, फागूलाल!

[गोसाईंको प्रवेश]

सरदार – लौ हेर, नाँउ लिनासाथ गोसाईंज्यू आइपुगे। प्रणाम, महाराज! हाम्रा यी बिचरा कारीगरहरुका मन कमजोर छन्, बीच-बीचमा चंचल हुन्छन्। यिनीहरुका कानमा अलि शान्ति-मन्त्र फुकिदिनुपर्यो—बड़ो आवश्यक भएको छ।

गोसाईं – यिनीहरुका कुरा? ओहो, यिनीहरु त साक्षात् कच्छप-अवतार हुन्। यिनीहरुले आफैलाई भारका मुनिपट्टि राखिराखेका छन्, र त संसार टिकेको छ। यसो सम्झँदा पनि रोमांच हुन्छ। बाबा ४७ फ, एकपल्ट विचारेर हेर त, हामी जुन मुखले नाम-कीर्तन गर्छौं, त्यो मुखका लागि अन्न कसले जम्मा गरिदिन्छ? तिमीहरुले होइन? जुन राम-नामले मेरो शरीर पवित्र भइराखेको छ, त्यसलाई तिमीहरुले पसिना काढ़ी-काढ़ी बनाएका छौ। यो कुनै साधारण कुरा हो र! आशीर्वाद छ—तिमीहरु सदैव अचल रह, तब मात्र भगवान् को दया पनि तिमीहरुमाथि अचल भईरहनेछ। बाबा, एकपल्ट खुल्ला मनले भन त—हरे राम, हरे राम, राम-राम, हरे-हरे! भगवान् ले तिम्रा सबै भार हलुंग बनाइदिनेछन्। हरिनाम नै 'आदावन्ते च मध्ये च!'

चन्द्रा – अहो, बड़ो मीठो लाग्यो बाबा। यस्ता कुरा नसुनेको धेरै भएको थियो। चरणको धूलो दिनोस, महाराज।

फागूलाल – अहिलेसम्म त चूप लागेर बसेको थिएँ, अब नहुने भयो। सरदार, यति धेरै फाल्तु खर्च किन? प्रणामी जम्मा गर्नचाहन्छौ, गर; तर पाखण्ड सहन हुनेछैन।

विशू – अरे, फागूलाल! बौलाएर नोक्सान हुन्छ, चूप—चूप लाग।

चन्द्रा – तिमी नरलोक-परलोक दुवै खान बसेका छौ? तिम्रो के गति हुने हो? पहिले त तिमीमा यस्तो कुबुद्धि थिएन। म ठीक देख्दैछु, तिमीहरुलाई त्यो नन्दिनीको हावा लाग्दैछ।

गोसाईं – जे भन, सरदार, यस्तो सरलता मैले देखेको थिइनँ। पेट र मुख एकदमै एक। यिनीहरुलाई म के सिखाउनसकूँला र! यिनीहरुबाटै धेरै कुरा सिख्नु छ। बुझ्यौ?

सरदार – बुझें। यो पनि बुझ्दैछु, उत्पात कहाँबाट शुरू भएको छ। यिनीहरुको भार मैले नै लिनुपर्छ। महाराज, त्यो गाउँमा, बरु, हरिनाम सुनाएर आउनुहोस। त्यहाँ करातीहरुले केही गोलमाल गर्नथालेका छन्।

गोसाईं – कुन गाँउ, सरदार?

सरदार – ऊ त्यो ट-ठ गाउँमा । त्यहाँको मुखिया छ ७१ ट। ६५ ण जहाँ बस्छ, त्यसको बायाँतिर त्यो गाँउ सकिन्छ।

गोसाईं – हो, बाबा। न गाउँ अझै पनि उताउलोपनामा मस्त छ। तर ण गाउँकाहरु मधुर रसमा निक्कै डुबेका छन्। उनीहरुको काम प्रायः मन्त्र लिने लायकको अवस्थामा आइसकेको छ। तै पनि अझ केही महीनासम्म त्यो गाउँमा पल्टन राख्नुपर्ने देखिन्छ, किनभने लेखिएको पनि छ— 'नाहंकारात् परो रिपुः'। पल्टनका प्रभावले अहंकारको दमन हुन्छ, त्यसपछि हामीहरुको पालो आउँछ। लौ त, म हिंडें।

चन्द्रा – प्रभु, आशीर्वाद दिनुहोस, यिनीहरुमा सुबुद्धि आओस्, यिनीहरुका भूलतिर ध्यान नदिनुहोला।

गोसाईं – नडराऊ, लक्ष्मी आमा। यी सबै मत्थर हुन्छन्।

[प्रस्थान]

सरदार – कसो, ६९ ङ, तिम्रो यो गाउँको मिजाज कस्तो-कस्तो देख्छु?

विशू – हुनसक्छ। गोसाईंज्यूले यिनीहरुलाई कच्छप-अवतार भनेका छन्। तर शास्त्रका मतमा अवतार बद्लन्छ पनि। कच्छप हठात बराह हुन्छ र हड्डीको मोटो खोल भएको ठाउँमा दाँत निस्केर आउँछन्, धैर्यको ठाँउमा गर्जन निस्केर आउँछ।

चन्द्रा – विशू सम्धी, एक छिन पर्ख। सरदार, मेरो निवेदन नभुल्नु होला।

सरदार – भुल्दिनँ। सुनेको छु, सम्झना रहन्छ।

[प्रस्थान]

चन्द्रा – देख्यौ? सरदार कस्तो भलाद्मी छ! सबैसित हाँसेरै बोल्छ।

विशू – घड़ियालको दाँतमा पहिले हाँसो नै हुन्छ, पछि टोकाइ।

चन्द्रा – टोक्ने कुरा यहाँ कहाँबाट आयो ?

विशू – तिमी जान्दिनौ । अब उसो कारीगरहरुसित तिनीहरुका स्त्रीहरु आउन नसक्ने नियम बनाएर उसले ठीक गर्यो ।

चन्द्रा – किन ?

विशू – उसका हिसाबले हामीहरुले संख्या-रूपमा नै खातामा ठाँउ पाँउछौं । तर संख्याका अंकसित नारीको अंकको योग गणितशास्त्रमा पाइन्न ।

चन्द्रा – के मतलब ? तिनीहरुका स्त्रीहरु छैनन् ? तिनीहरु के भन्छन् ?

विशू – तिनीहरु पनि सूनका तालको रक्सीले बेहोश छन् । माल्लुमा तिनीहरुले आफ्ना पतिहरुलाई धेरै पछि छाड़िसकेका छन् । हामीहरु उनीहरुका आँखामा देखा नै पर्दैनौं ।

चन्द्रा – सम्धी, तिम्रो घरमा त स्त्री थिई, उसको के हाल छ ? धेरै दिनदेखि उसको खबरै सुन्दिनँ ।

विशू – जति दिनसम्म गुप्तचरको उच्च पदमा काम गर्दैथिएँ, त्यति दिनसम्म उसले सरदारनीहरुका दुइ तल्लेमा तास खेल्ने निम्तो पाउने गर्थी । तर जब फागूलालको दलमा आएर मिसिएँ, त्यताको निम्तो बन्द भो । त्यही रीसले मलाई छोड़ेर गई ।

चन्द्रा – छी, छी । त्यस्तो पाप पनि गुर्नुहुन्छ !

विशू – यो पापको फल भोग्नुलाई अर्को जन्ममा सरदारनी भएर उसले जन्म लिन्छे ।

चन्द्रा – विशू सम्धी, उता हेर, को हुन् ? धूमधामसित आइरहेछन् । पंक्तिका पंक्ति मोर-पंख छन्, हात्तीहरुका हौदाहरुका झल्लरहरु देख्दैछौ ? कस्तो चमक-दमक छ ! तिनीहरुसित कस्ता-कस्ता घोड़चढ़ीहरु छन् ! भालाहरुका टुप्पामा एक-एकवटा टुक्रा सूर्यका किरणका गोला लिएर गइरहेका जस्ता देखिन्छन् ।

विशू – त्यही त सरदारनीहरू ध्वजा-पूजाको भोजमा गइरहेका छन् ।

चन्द्रा – अहो । कस्तो धूमधामको जात्रा । कति सुन्दर अनुहारहरु छन् । सम्धी, तिमीले पनि काम नछोड़ेको भए तिमी पनि त्यो दलमा यसरी नै धूमधामसित निस्कने थियौ र तिम्री त्यो स्त्री–

विशू – हो, हामी दुइको पनि यही दशा हुनेथियो ।

चन्द्रा – अब के फर्कने बाटो छैन ? एकदमै बन्द भो ?

विशू – होइन, छ ।

नेपथ्यबाट – पगला भाइ !

विशू – के हो, पगली ?

फाग्गूलाल – लौ, तिम्री नन्दिनीले बोलाई । आज अब विशूलाई भेट्नसकिने होइन ।

चन्द्रा – तिमीहरुले अब विशूको आशा नगर। सम्धी, कुन आशाले उसले तिमीलाई भुलाइराखेकी छ?

विशू – दुःखले भुलाइराखेकी हो।

चन्द्रा – सम्धी, तिमी कुरा पल्टाएर किन बोल्छौ?

विशू – तिमीले बुझ्नसक्नेछैनौ। त्यो एउटा यस्तो दुःख हो, जसलाई भुल्नु-जस्तो दुःख दुनियाँमा अरु छैन।

फागूलाल – विशू, कुरा भनेको सफासित गर्ने गर, नत्र रीस उठ्छ।

विशू – लौ त भन्छु, सुन। नगीचको वस्तु हात पार्नलाई जुन वासनाजनित दुःख हुन्छ, त्यो पशुको दुःख हो र टाड़ाको वस्तु पाउनलाई आकाँ-क्षाजनित जुन दुःख हुन्छ, त्यो मानिसको हो। मेरो यो चिरन्तन दुःखको पूरको प्रकाश नन्दिनीमा प्रकट भएको छ।

चन्द्रा – यी सब कुरा म बुझ्दिनँ, सम्धी, एउटा म बुझ्छु–जुन स्त्रीलाई तिमीहरु जति नै कम बुझ्छौ, उसले तिमीलाई उति नै धेर तान्ने गर्दछे। हामीहरु सीधा-सादा छौं। हाम्रो मोल कम्ति छ, तै पनि, अरु कुरा जे भए पनि, हामी तिमीहरुलाई सीधा बाटोमा डोर्याउँदै लान्छौं। तर आज म भन्नसक्छु, त्यो केटीले तिमीलाई आफ्नो रातो कणेलको मालामा फँसाएर सत्यानाशको बाटोमा तानेर लानेछ।

[चन्द्रा र फागूलालको प्रस्थान]

[नन्दिनीको प्रवेश]

नन्दिनी – पगला भाइ, आज बिहानै टाड़ाको बाटोबाट तिनीहरु पौषको गीत गाउँदै मैदानतिर गइरहेका थिए। सुन्यौ तिमीले?

विशू – मेरो बिहान तिम्रो बिहानजस्तो हो र गीत सुन्नपाउँछु? त्यो त थाकेको रातको झट्कारेर फयाँकिएको जुठो हो।

नन्दिनी – आज बड़ो मज्जा लागेर मैले विचारें, यहाँको परिकोटमा चढ़ेर तिनीहरुका गीतमा भाग लिनुपर्यो। तर बाटो कतै पाइनँ, त्यसैले तिमीकहाँ आएकी हुँ।

विशू – म त परिकोट होइन नि!

नन्दिनी – हौ। तिमी नै मेरो परिकोट हौ, तिमीकहाँ आएपछि माथि चढ़ेर बाहिर देख्नपाउँछु।

विशू – तिम्रो मुखबाट यस्तो सुन्दा आश्चर्य लाग्छ।

नन्दिनी – किन?

विशू – जबदेखि क्षयपुरीमा पसें, तबदेखि मैले आफ्नो आकाश गुमाइसकेको छु, अब त्यो पाइने होइन भन्ने अहिलेसम्म थाहा पाएको थिएँ। मलाई लागेको थियो, त्यहाँका टुक्रा मानिसहरुसित मलाई पनि एउटै ढिकीमा

कुटेर यिनीहरुले एउटा पिण्डको रूपमा तैयार पारिसकेका छन्, यसमा कतै पनि छिद्र छैन, खोक्रोपना छैन। यस्तै समयमा तिमीले आएर यस्तो प्रकारले हे –यौं—मलाई लाग्यो, ममा अझै पनि प्रकाश देखा पर्दैछ।

नन्दिनी – पगला भाइ, यो चारैतिरबाट बन्द भएको गढ़मा केवल तिमी र ममा एउटा आकाश बाँचेको छ। बाँकी सब बन्द भइसकेका छन्।

विशू – त्यो आकाश बाँचेको छ, त्यस कारण तिमीलाई एउटा गीत सुनाउँछु—

[गीत-९]

तिमीलाई गीत सुनाउँछु, त्यसैले ब्युँझाइराखछ्यौ,
औ! निद्रा ब्युँझाउने!
मनलाई झस्काई त्यसैले डाक्छ्यौ,
औ! दुःख जगाउने!
आयो अन्धकारले घेरेर,
आए पक्षीहरु नीड़तिर,
लागे नौकाहरु तीरतिर,
केवल मेरो मनले विराम पाएन,
औ! दुःख जगाउने!!

नन्दिनी – विशू पगला, तिमी मलाई 'दुःख जगाउने' भन्छौ?

विशू – तिमी मेरो समुद्रको अगम पारिकी दूती हौ। जुन दिन आयौ, त्यही दिन मेरो हृदयको नुनिलो पानीको हावालाई बेसरी हल्लाइदियौ।

[गीत-१०]

मेरा कामहरुका बीच-बीचमा
रुवाइका पिंगलाई रोकिनदिइनौ!
मलाई स्पर्श गरेर
प्राण सुधाले भरेर
तिमी जान्छ्यौ सरेर,
लाग्छ, मेरा व्यथाका आड़मा उभिन्छ्यौ,
औ! दुःख जगाउने!

नन्दिनी – तिमीलाई एउटा कुरा भनूँ, पगला! जुन दुःखको गीत तिमी गाउने गर्छौ, मलाई त्यो कुराको ज्ञान पहिले थिएन।

विशू – किन? रंजनबाट पनि?

नन्दिनी – अहँ। दुवै हातले खियाएर उसले मलाई आँधी आएको नदीबाट पारि तारिदिन्छ, जंगली घोड़ाको अयाल समातेर जंगलभित्रबाट

दगुराउँछ, उफ्रँदै गरेको बाघको आँखीभौंका बीचमा तीर हानेर मेरो डर मेटाई उ हाँस्ने गर्छ। हाम्रो नगाई नदीको स्रोतमा कुदै गएर प्रवाहमा हल्ली-खल्ली जसरी मच्चाइदिन्छ, त्यसरी मसित पनि हल्ली-खल्ली मच्चाइरहन्छ। आफ्नो प्राणको माया नगरी सर्वस्व दाउमा लगाएर उ हार-जीतको खेल खेलिरहन्छ। त्यो खेलमा उसले मलाई जितिसकेको छ। एक दिन तिमी पनि त त्यसैमा थियौ, तर कुन्नि के सोचेर त्यो बाजीको खेलको भीड़बाट तिमी एक्लै निस्क्यौ। जाँदै गर्दा कुन्नि कसरी तिमीले मलाई यसो हेरेका थियौ, मैले ठीकसित बुझाउनसकिनँ। —त्यसपछि धेरै दिनसम्म कुनै खबर सुनिएन।— तिमी कहाँ गएका थियौ, भन त?

[गीत-११]

विशू – ए चन्द्र, आँखाका पानीको ज्वार आयो दुःखको सागरमा
हुनलाग्यो कानेखुशी यो पारिको त्यो पारिको किनारमा!
मेरो नौका थियो परिचित घाटमा, बन्धन त्यसको खोलियो,
त्यसलाई हावाले उड़ाइलग्यो कुन घाटमा कति नचिनिएको।

नन्दिनी – त्यो नचिनिएको किनारबाट यो क्षयपुरीको खत्रे काममा तिमीलाई कसले घिस्याएर ल्यायो?

विशू – एकजना स्त्रीले। अचानक तीर लागेर उड्दै गरेको पक्षी जसरी भूइँमा झर्छ, उसरी नै उसले मलाई धूलोमा झारिदियो, मैले आफैलाई बिर्सिसकेको थिएँ।

नन्दिनी – उसले तिमीलाई कसरी छुनसकी त?

विशू – जब तिर्खाएको मानिसले पानी पाउने आशा गुमाउँछ, मरीचिकाले त्यसलाई सहजै भुलाइदिन्छ। त्यसपछि मानिस दिङ्मूढ़ भइदिन्छ, आफैले आफैलाई खोज्दा पनि पाउँदैन। एक दिन म पश्चिमतिरको झ्यालबाट मेघहरुको स्वर्णपुरी हेरिरहेको थिएँ, उ हेरिरहेकी थिई— सरदारको महलको सूनको शिखर! मलाई कटाक्षसाथ भनी, 'मलाई त्यहाँ लैजाऊ, तिमीमा कति ताकत रहेछ, हेर्छु।' मैले दर्पसाथ भनें, 'लान्छु।' उसलाई सूनको शिखरको फेदमा ल्याई पुर्याएँ। त्यसै बेला मेरो मात हरायो।

नन्दिनी – अब म आएकी छु, तिमीलाई यहाँबाट निकालेर लान्छु। सूनको त्यो हतकड़ी चुड़ालिदिन्छु।

विशू – तिमीले जब यहाँका राजालाईधरि हल्लाइदियौ भने तिमीलाई कसले रोक्नसक्छ र? साँच्चि, तिमीलाई उसित डर लाग्दैन?

नन्दिनी – यो जालबाहिरबाट डर लाग्छ, तर मैले त भित्रै पसेर हेरेकी छु।

यो जालबाहिरबाट डर लाग्छ, तर मैले त भित्रै पसेर हेरेकी छु।

विशू – कस्तो देख्यौ तिमीले?

नन्दिनी – देख्न त मानिस नै देखें, तर प्रकाण्ड! शिर सय-तल्ले महलको सिंहद्वारजस्तो छ। दुवै भुजाहरु कुनै दुर्गम दुर्गका फलामका आग्ला-जस्ता छन्। रामायण-महाभारतबाट कोही अवतरित भएका जस्तो लाग्यो।

विशू – घरभित्र पसेर के देख्यौ?

नन्दिनी – त्यसको देब्रे हातमा बाज बसेको थियो, त्यसलाई दाड़मा राखेर त्यसले मेरो अनुहार हेरिबस्यो। फेरि जसरी बाजको पखेटालाई औंलाले सुम्सुम्याइबस्यो, त्यसरी नै मेरो हात समातेर बिस्तार-बिस्तार सुम्सुम्याइबस्यो। केही बेरपछि हठात् सोध्यो, 'तिमी मसित डराउँदिनौ?' मैले भनें, 'अलिकति पनि डराउँदिनँ।' त्यसपछि मेरा खुल्ला केशमा दुवै हात हाल्यो र केही बेरसम्म आँखा चिम्लेर बसिरहयो।

विशू – तिमीलाई कस्तो लाग्यो?

नन्दिनी – राम्रो लाग्यो—कसरी भनूँ? हजारौं पुरानो बट वृक्ष हो र मचाँहि सानी चरीजस्ती। त्यसको हाँगाको कुनै सानो भागमा अलि हल्लिएँ भने त्यसको मज्जामा आनन्द लाग्नेछ। त्यो एकलो प्राणलाई त्यति अलिकति आनन्द दिइहाल्ने इच्छा हुन्छ।

विशू – अनि उसले के भन्यो?

नन्दिनी – एकपल्ट मच्चिएर उठ्यो र आफ्नो भालाका फलकजस्ता आँखाले मेरो मुखमा राम्ररी हेरेर मलाई भन्यो—'म तिमीलाई चिन्नचाहन्छु।' मलाई कस्तो-कस्तो लाग्यो, सारा शरीर जिरिंग भयो। भनें, 'चिन्नुपर्ने के छ? म के तिम्रो पुस्तक हुँ?' उसले भन्यो, 'पुस्तकमा जे-जति छन्, ती सब म जान्दछु, तिमीलाई जान्दिनँ—चिन्दिनँ!' यसपछि कुन्नि के भयो! भन्यो, 'रंजनको कुरा मलाई भन। उसलाई कसरी प्रेम गर्छ्यौ?' मैले उत्तर दिएँ, 'पानीभित्रको दाबिलोले जसरी माथि आसमानको पाललाई प्रेम गर्छ—पालमा हावाको गीत लाग्दछ र दाबिलोमा तरंगहरुको नाँच।' कोही स्वादे जिब्रो भएको केटोलेजस्तो एकोहोरो मलाई हेर्दै उ चूप लागेर सुनिबस्यो। हठात् झस्केर बोल्यो, 'यसको लागि प्राण दिनसक्छ्यौ?' मैले भने, 'अहिले होइन।' उ गर्जेर रिसाएजस्तो भएर चिच्यायो, 'कहिले पनि सक्दिनौ।' मैले भनें, 'हो, प्राण दिनसक्छु।' 'त्यसले तिमीलाई के फायदा हुन्छ?' मैले भनिदिएँ, 'मलाई थाहा छैन।' त्यसपछि उसले छट्पटाएर भन्यो, 'जाऊ। मेरो घरबाट निस्क। जाऊ। काम हर्जा नगर।' मैले ठीक तात्पर्य बुझिनँ।

विशू – उ सबै कुराको स्पष्ट अर्थ बुझ्नखोज्छ। जुन कुरा उसको मगजमा पस्दैन, त्यसले उसलाई व्याकुल बनाइदिन्छ, त्यसैले उ रिसाउँछ।

नन्दिनी – पगला भाइ, उमाथि दया जाग्दैन ?

विशू – जुन दिन उमाथि विधाताको दया जाग्छ, त्यही दिन उ मर्छ।

नन्दिनी – होइन, होइन, तिमीलाई थाहा रहेनछ, जीवित बस्नलाई उ कसरी प्राण दिन तैयार छ !

विशू – उसको जीवित भंइरहनुको अर्थ के हो, त्यो आज तिमीले बुझ्न सक्नेछ्यौ।

नन्दिनी – उ हेर, पगला भाइ, त्यो छाया ! निश्चय नै सरदारले लुकेर हाम्रा कुरा सनेको छ।

विशू – यहाँ त सबैतिर सरदारको नै छाया देखिन्छ। बाँचेर हिंड्ने उपाय के छ ? सरदार तिमीलाई कस्तो लाग्छ ?

नन्दिनी – उजस्तो मरिसकेको वस्तु अरु मैले देखेकी छैनँ। जंगलबाट काटेर ल्याइएको बेतजस्तो मलाई लाग्छ। पात छैन, जरा छैन, मज्जामा रस छैन, सुकेर फ्यातुलो भइसकेको छ।

विशू – अभागीले अरुका प्राणहरुलाई दण्ड दिनलाई प्राण दिएको छ।

नन्दिनी – चूप लाग, सुन्ला।

विशू – चूप लाग्नु पनि त उसले सुन्नसक्छ, यसले झन् आपद बढ्छ। जब म खन्नेहरुसंग हुन्छु, बातचीतमा सरदारबाट बाँचेर हिंड्छु। त्यस कारण उसले मलाई बिना प्रयोजनको जीव संझेर अझसम्म बाँचिर-हनदिएको छ। आफ्नो लाठोले पनि मलाई छुँदैन। तर पगली, तिम्रो सामु मलाई मन खोलेर कुरा गर्न मन लाग्छ, सतर्कतासित घृणा लाग्छ।

नन्दिनी – होइन, होइन, तिमी विपत्ति नबोलाऊ।

[सरदारको प्रवेश]

सरदार – कसो ६६ङ ? सबैसित तिम्रो प्रणय-लीला चलिरहन्छ ! चुनाव-विचार, एकदमै छैन ?

विशू – यहाँसम्म कि तिमीसित पनि शुरु भइसकेको थियो। चुनाव-विचारले गर्दा रोकियो।

सरदार – बातचीतको विषय के हो त ?

विशू – तिम्रो यो किल्लाबाट कसरी निस्केर भाग्नुपर्छ, त्यसै कुरामाथि विचार भइरहेको थियो।

सरदार – के भन्दैछौ ? साहस यति बढ़िसक्यो ? भन्नु पनि डर लागेन ?

विशू – मनभनै त तिमीलाई सबै थाहै छ, सरदार। पिंजराको चराले बारलाई ठुँग्ने गर्छ, तर त्यो त मायाले गरेको हुँदैन। यो कुरालाई तिमीले स्वीकारे पनि के, नस्वीकारे पनि के!

सरदार – मायाले गरेको होइन, त्यो त थाहा भएकै कुरा हो, तर स्वीकार गर्न डराउँदैन, यो कुरा यता केही दिनदेखि थाहा पाइनलागेको छ।

नन्दिनी – सरदारज्यू, तिमीले रंजनलाई ल्याइदिन्छु भनेका थियौ! खै?— तिमीले त त्यसो गरेनौ!

सरदार – आज उसलाई देख्नेछ्यौ।

नन्दिनी – त्यो मलाई थाहा छ। तै पनि तिमीले आज्ञा दियौ, जय होस् तिम्रो! लौ, लेऊ यो कुन्द पुष्पको माला।

विशू – छी, छी, तिमीले माला नष्ट गर्यौ। त्यो किन रंजनका लागि राखिनौ?

नन्दिनी – उसको लागि माला छ।

सरदार – अवश्य छ, तिमीले लगाइराखेकी, त्यही होइन? जयमाला कुन्दका फूलहरुको छ, किन कि त्यो हातको दान हो र वरमाला रातो कणेलको छ, त्यो हृदयको दान हो। ठीक छ, ठीक छ, हातको दान हात-हातै दिइहाल, नत्र सुकेर जान्छ। हृदयको दान त जति प्रतीक्षारत हुन्छ, त्यसको मोल त्यति नै बढ्छ।

[प्रस्थान]

नन्दिनी – [झ्यालनेर] सुन्दैछौ?

नेपथ्यबाट – के हो, भन।

नन्दिनी – एकपल्ट झ्यालनेर आएर उभिदेऊ।

नेपथ्यबाट – लौ, उभिएँ।

नन्दिनी – घरभित्र पस्नदेऊ, धेरै कुरा गर्नु छ।

नेपथ्यबाट – घरिघरि किन व्यर्थैको अनुरोध गर्छ्यौ? अझै पनि समय भएको छैन। तिमीसित को छ? रंजनको जोड़ी हो कि को हो?

विशू – होइन राजा! म रंजनको उल्टो, पिठ्युँ हुँ, जता प्रकाश पर्दैन। म अमावश्या हुँ।

नेपथ्यबाट – नन्दिनीसित तिम्रो के काम छ? नन्दिनी, त्यो मानिस तिम्रो को हो?

नन्दिनी – उ मेरो साथी हो। उसले मलाई गीत सिखाउँछ। उसैले त 'प्रेम गर्छु' गीत सिखाएको हो।

नेपथ्यबट – यही तिम्रो साथी हो? अहिल्यै तिम्रो र त्यसको संगत छुट्याइदिएँ भने के होला?

नन्दिनी – किन र! तिम्रो आवाज पनि कस्तो-कस्तो भयो? पर्ख।—तिम्रो कोही पनि साथी छैन?

नेपथ्यबाट – मेरो साथी? मध्यान्हको सूर्यको पनि साथी हुन्छ?

नन्दिनी – होस, यो कुरा छोड़िदिऊँ। अरे! तिम्रो हातमा त्यो के हो?

नेपथ्यबाट – मरेको भ्यागुता।

नन्दिनी – के गर्छौ त्यसलाई?

नेपथ्यबाट – यो भ्यागुता एक दिन एउटा दुंगाको कापमा पसेको थियो। तीन हजार सालसम्म यो त्यही आड़मा बसिरह्यो। यसरी कसरी बसिरहनसक्छ भन्ने रहस्य यो भ्यागुताबाट सिखिरहेको थिएँ। कसरी जीवित बस्नसकिन्छ, यो कुरा यसलाई थाहा रहेनरहेछ। त्यसैले मैले त्यो दुँगाको पर्दा भत्काइदिएँ, सँधै बाँचिरहनुबाट मुक्त गराइदिएँ। —तिमीलाई यो खबर मन परेन?

नन्दिनी – *मेरा चारैतिरबाट पनि आज तिम्रो यो ढुँगाको किल्ला खोलिन्छ।* मलाई थाहा छ, आज रंजनसित मेरो भेट हुन्छ।

नेपथ्यबाट – त्यसो हो भने तिमीहरु दुवैलाई म संगै देख्नचाहन्छु।

नन्दिनी – जालको आड़मा आफ्नो चश्माबाट तिमीले देख्नसक्नेछैनौ।

नेपथ्यबाट – घरमा बसाएर हेर्छु।

नन्दिनी – त्यसले के हुन्छ?

नेपथ्यबाट – म जान्नचाहन्छु।

नन्दिनी – तिमीले जान्ने कुरा गरेपछि मलाई कस्तो-कस्तो डर लागेर आउँछ।

नेपथ्यबाट – किन?

नन्दिनी – लाग्छ, जुन कुरा मनद्वारा जानिंदैन र प्राणद्वारा जानिने हुन्छ, त्यसमा तिमीलाई पीर छैन।

नेपथ्बाट – यस्तो कुरामा विश्वास गर्ने साहस हुँदैन, ठगिने डर भइरहन्छ। लौ, तिमी जाऊ, समय व्यर्थौ नफाल। होइन, होइन, एक क्षण पर्ख। तिम्रो कपाल बाट रातो कणेलको गुच्छा मालामा झुंडिरहेछ। मलाई दिइहाल।

नन्दिनी – किन?

नेपथ्यबाट – त्यो फूलको गुच्छालाई देख्दा मेरै रक्त प्रकाशको शनि ग्रह फूलको रूप धारण गरेर आएको जस्तो लाग्छ। त्यो तिमीबाट खोसेर टुक्रा-टुक्रा पारिदिऊँ जस्तो पनि कहिले-काँही मनमा लागेर आउँछ। फेरि सम्झन्छु, नन्दिनी, कुनै दिन आफ्नै हातले त्यो माला मलाई लगाइदियौ भने त।

नन्दिनी – के हुन्छ र?

नेपथ्यबाट – अनि त म सजिलैसंग मर्नसकुँला।

नन्दिनी – एकजनाले रातो कणेलको फूल साह्रै मन पराउँछ, मैले उसैलाई सम्झेर यी फूलहरुलाई कानको झुम्का बनाएकी हुँ।

नेपथ्यबाट – उसो भए म भनिदिन्छु, यी फूल मेरै शनि ग्रह हुन् र उसका पनि शनि ग्रह हुन्।

नन्दिनी – छी-छी। यस्तो कुरा पनि भन्नु हुन्छ! जान्छु।

नेपथ्यबाट – कहाँ जान्छ्यौ?

नन्दिनी – तिम्रो किल्लाको दैलोनेर बसिरहन्छु।

नेपथ्यबाट – किन?

नन्दिनी – रंजन त्यो बाटो आउँदा मलाई पर्खिरहेकी उसले पाउनेछ।

नेपथ्यबाट – रंजनलाई पिंधेर धूलोमा मिसाइदिएर उसलाई चिन्नै नसकिने बनाइदिएँ भने!

नन्दिनी – आज तिमीलाई के भएको छ? मलाई त्यस्सै किन डर देखाउँछौ?

नेपथ्यबाट – त्यस्सै डर? तिमीलाई थाहा छैन, म भयंकर छु?

नन्दिनी – हठात्, तिम्रो भाव कसरी बदलियो? सबै तिमीसित डराउँछन् त्यो देख्दा तिमीलाई—मज्जा लाग्छ? हाम्रा गाउँको श्रीकण्ठ राम-लीलामा राक्षस बन्छ, उसको संवाद हुँदा नानीहरु डरले आतंकित हुन्छन् र उचाँहि खूब खुशी हुन्छ। तिम्रो पनि हालत त्यस्तै छ। मेरो मनमा कस्तो लाग्छ—साँचो भनिदिऊँ? रिसाउँदैनौ?

नेपथ्यबाट – कस्तो लाग्छ? भन त!

नन्दिनी – यहाँका मानिसहरुको व्यवसाय नै डर देखाउनु हो। त्यसैले तिमीलाई जालले बेरेर अद्‌भुत बनाइराखेका छन् यिनीहरुले। यस्तो हावाको तस्वीर बन्दा तिमीलाई लाज लाग्दैन?

नेपथ्यबाट – के भन्छ्यौ, नन्दिनी?

नन्दिनी – यतिका दिनसम्म जसलाई डर देखाउँदै आइरहेछौ, तिनीहरु एक दिन त्यो डराएकोमा लजाउनेछन्। मेरो रंजन यहाँ भएको भए तिम्रो नाकको सामु चुडकी बजाएर मर्ने थियो, डराउने थिएन।

नेपथ्यमाबाट – पक्ष त तिमी ज्यादै लिन्छौ। यतिका दिनसम्म निचोड़-नाचाड़ पारेर मैले जे-जति भताङभुतुङ पारिदिएको छु, त्यही पुँजीभूत पहाड़हरुका शिखरमा उभ्याएर तिमीलाई देखाइदिने इच्छा हुन्छ। त्यसपछि त।

नन्दिनी – त्यसपछि के?

नेपथ्यबाट – त्यसपछि आफ्नो अन्तिम भत्काउनुपर्ने भत्काइदिन्छु। अनारका दाना फट्फटाएर जसरी दश औंलाका कापबाट रस निकालिन्छ, त्यसरी नै

म आफ्ना यी दुइ हातले –जाऊ, जाऊ। गइहाल अहिल्यै।

नन्दिनी – म यहाँ उभिएकी छु। के गर्नसक्छौ, गरिहाल। यस्तो भद्दा प्रकारले किन गर्जन्छौ ?

नेपथ्यबाट – म कति अद्‌भुत निष्ठुर छु, त्यसको सम्पूर्ण प्रमाण तिमीलाई नै दिने इच्छा छ। मेरो घरबाट कहिल्यै तिमीले आर्त्तनाद सुनिनौ ?

नन्दिनी – सुनेकी छु। कसको आर्त्तनाद हो त्यो ?

नेपथ्यबाट – म सृष्टिकर्त्ताको चातुरी भत्काउने गर्दछु। म विश्वको मर्मस्थलमा जे-जति लुकेर बसेका छन्, तिनलाई खोस्नचाहन्छु। तिनै खोसिएका प्राणहरुको रुवाइ हो त्यो। रुखबाट त्यसको आगो चोर्नु छ भने त्यसमा आगो लगाइदिनुपर्छ। नन्दिनी, तिमीभित्र पनि आगो छ-रातो आगो। एक दिन त्यसमा आगो लगाएर त्यो आगो ननिकाली निस्तार हुँदैन।

नन्दिनी – तिमी किन यति निष्ठुर छौ ?

नेपथ्यबाट – म कि त प्राप्त गर्छु, कि त नष्ट गर्छु। जसलाई म प्राप्त गर्नसक्तिनँ, त्यसमाथि दया गर्नसक्तिनँ। त्यसलाई नष्ट गर्नु नै एक प्रकारको प्राप्त गर्नु हो।

नन्दिनी – यो के हो ? यसरी मुड्‌की बनाएर किन हात निकालिरहेछौ ?

नेपथ्यबाट – लौ, मैले हात भित्र लगें। तिमी यहाँबाट भाग—जसरी परेवा बाजको छायाबाट भाग्छ, त्यसरी नै।

नन्दिनी – जाँदैछु, अब तिमीलाई खिज्याउँदिनँ।

नेपथ्यबाट – सुन, सुन। फर्केर आऊ। नन्दिनी ! नन्दिनी !

नन्दिनी – के भन्नु छ ?

नेपथ्यबाट – सामुन्ने तिम्रो मुखमा र आँखामा जीवनको लीला खेलिरहेको छ र पछाडि तिम्रा काला केशका धारामा नै मृत्युको निस्तब्ध जल-प्रवाह छ। यी मेरा दुवै हातले त्यस दिन त्यसमा डुबेर मर्ने आनन्द पाएको थियो। र कहिल्यै मैले मृत्युको माधुर्यमाथि यसरी सोचेको थिइनँ। यी गुच्छाका गुच्छा काला केशभुनि मुख लुकाएर सुत्ने बड़ो इच्छा भइरहेछ। म कति थाकेको छु, तिमीलाई थाहै छैन।

नन्दिनी – तिमी कहिल्यै सुत्दैनौ कि कसो ?

नेपथ्यबाट – सुत्न डर लाग्छ।

नन्दिनी – म त्यो 'प्रेम गर्छु' गीत तिमीलाई पूरा सुनाउँछु—

[गीत-१२]

म प्रेम गर्छु, प्रेम गर्छु !
यही सूरमा नगीच-टाड़ा जलमा-थलमा बज्छ बाँसुरी
आकाशमा कसको हृदयको बीच
व्यथा बज्छ,
दिगन्तमा कसका काला आँखा
आँखाका जलमा जान्छ बगेर !

नेपथ्यबाट – भयो, भयो, भयो। नगाऊ

[गीत-१३]

नन्दिनी – यही सुरमा सागरको किनारमा
बन्धन खुलिन्छ,
अतुल रोदन उठ्दछ।
त्यही सुरमा बज्छ मनमा
अकारणमा
भुल्नुपर्ने दिनका हाँसो-रुवाइ !

पगला भाइ, ऊ हेर ! मरेको भ्यागुतालाई फ्याँकेर उ कहिले भागिसकेछ ! उ गीत सुन्न डराउँछ।

विशू – उसको छातीमा जुन बूढ़ो भ्यागुता सबै प्रकारका सूरहरुको छूतबाट बाँचेर बसेको छ, त्यसले जब गीत सुन्छ, मर्नु चाहन्छ। त्यसैले उसलाई डर लाग्छ। पगली, आज तिम्रो अनुहारमा एउटा दीप्ति देख्नलागेको छु, तिम्रो मनमा कुन भावनाको अरूणोदय भएको छ-मलाई भन्दिनौ ?

नन्दिनी – आज रंजन निश्चय नै आउँछ भन्ने खबर मेरो मनमा आई पुगिसकेको छ।

विशू – निश्चित खबर कतातिरबाट आयो ?

नन्दिनी – सुन, भन्देछु। मेरो झ्यालको सामु अनारको हाँगामा दिन्हौं नीलकण्ठ पक्षी आएर बस्छ। म साँझमा दिन्हौं ध्रुव तारालाई नमस्कार गरेर भन्छु—त्यसको पखेटाबाट एउटा प्वाँख उड़ेर मेरो घरमा आयो भने रंजन आउँछ भन्ने सम्झनेछु। आज सबेरै उठ्नेबित्तिकै देखें—हावामा उड़ेर एउटा प्वाँख मेरो ओछ्यानमा झरेको छ। यी हेर, त्यो प्वाँखलाई मैले आँचलमा बाँधिराखेकी छु।

विशू – त्यही त हेर्दैछु, फेरि तिमीले निधारमा टीका पनि लगाएकी छौ।

नन्दिनी – भेट भएपछि यो प्वाँख उसको शिखामा लाइदिन्छु।

विशू – मानिसहरु भन्छन्, नीलकण्ठको प्वाँखमा विजय-यात्राको शुभ-चिह्न

हुन्छ।

नन्दिनी – रंजनको विजययात्रा मेरो हृदयभित्रबाट भएर जानेछ।

विशू – पगली, अब म आफ्नो काममा जान्छु।

नन्दिनी – हुँदैन, आज म तिमीलाई कामै गर्नदिन्नँ।

विशू – उसो भए म के गरूँ?

नन्दिनी – गीत गाऊ।

विशू – कुन गीत?

नन्दिनी – बाटो हेर्ने गीत।

विशू – [गाउँछ]

[गीत-१४]

युग-युगदेखि शायद उसले मलाई थियो चाहेको,
उसैले शायद मेरो बाटोको किनारमा छ बसेको!
आज किन मलाई याद आउँछ कहिले उसका आँखाका कुनामा
देखेको थिएँ अस्फुट प्रदोष बेलामा।
उही मानौं, बाटोको किनारमा छ बसिरहेको।
आज त्यही चन्द्रमाको वरण हुन्छ आलोक-संगीतमा,
रातको अनुहारको अन्धकार खोलिन्छ इंगितमा।
शुक्ल रातको त्यही आलोकमा देखिनेछ एकै पलकमा
सबै आवरण जानेछन् खसेर!
उही मानौं मेरो बाटोको किनारमा छ बसेको!

नन्दिनी – पगला, तिमीले गाउँदा मलाई यस्तो लाग्छ—तिमीले मबाट धेरै थोक पाउनु थियो, तर मैले केही पनि दिनसकिनँ।

विशू – तिम्रो यही केही पनि नदिनुलाई म शिरोपर गरेर जानेछु। धेर-थोर दिइने मूल्यमा म गीत बेच्दिनँ। अहिले तिमी कहाँ जान्छ्यौ?

नन्दिनी – बाटोको किनारमा—जहाँबाट रंजन आउँछ। त्यहीं बसेर फेरि म तिम्रो गीत सुन्छु।

[दुवैको प्रस्थान]

[सरदार र मुखियाको प्रवेश]

सरदार – हुँदैन, यो गाँउमा रंजनलाई कुनै प्रकारले पनि आउनदिनुहुँदैन।

मुखिया – त्यसलाई टाड़ा राख्नलाई नै त वज्रगढ़को सुरुंगमा काम गर्न लगेको थिएँ।

सरदार – अनि के भयो?

मुखिया – कुनै प्रकारले पनि त्यसबाट पार पाउनसकिएन। उ—हुकुम मानेर

काम गर्ने अभ्यास छैन—भन्छ।

सरदार – अहिले अभ्यास शुरू गराए के दोष हुन्छ ?

मुखिया – यो कोशिश पनि गरियो। ठूला सरदारले प्रहरीका अफिसरलाई लिएर आए। तर त्यो मानिसलाई डर भनेको रत्तिभर छैन, कण्ठबाट अलिकति शासन गर्ने आवाज निस्क्यो कि जोड़ले हाँस्नथाल्छ। सोध्दा भन्छ, गम्भीरता मूर्खहरुको स्वाँग हो, म त्यही हटाउन आएको हुँ।

सरदार – त्यसलाई सुरुंगभित्रको दलमा किन नहालिदिएको ?

मुखिया – हालिदिएको थिएँ, सम्झेको थिएँ—दबाउमा परेर वशमा आउँछ। तर भयो उल्टो। खन्ने ज्यामीहरुमाथि पनि दबाउ कम्ति हुनथालेको जस्तो देखिनथाल्यो। उनीहरुलाई पनि मतवाला बनाइदियो, भन्नथाले—आज हामीहरुको खनाइ-नाँच हुन्छ।

सरदार – खनाइ-नाँच ? मतलब ?

मुखिया – रंजनले तान छोड्यो, ज्यामीहरुले भने, ढोल कहाँ पाइन्छ ? उसले भन्यो—ढोल छैन त के भो, कोदालो त छ। फेरि त कोदालोमा ताल पर्नथाल्यो। सूनका पिण्ड लिएर लुकामारी चल्नथाल्यो। ठूला मुखिया आफै आए, भने—तिमीहरुको यो काम गर्ने तरिका कस्तो हो ? रंजनले भन्यो, 'कामको डोरी मैले खोलिदिएँ, अब त्यसलाई तानिरहनुपर्दैन, आफै नाँच्दै जान्छ।'

सरदार – त्यो मानिस पगला हो कि क्या ?

मुखिया – वज्र पगला। भन्छु—कोदालो समाऊ। जवाफ दिन्छ, एउटा सारंगी ल्याइदेऊ, त्यसलेभन्दा बढ़ता काम हुन्छ।

सरदार – तिमीले त्यसलाई वज्रगढ़ लगेका थियौ, त्यहाँबाट त्यो कुबेरगढ़ कसरी पुग्यो ?

मुखिया – कुन्नि मालिक। त्यसलाई सांग्लीले बाँधेर राखिएको थियो। केही बेरपछि हेर्दा कुन्नि कसरी फुस्केर निस्केछ—त्यसको शरीरलाई कुनै कुराले पनि दबाएर राख्नसक्तैन। फेरि त्यसले एक-एक छिनमै साज बदलिन्छ, अनुहार बदलिन्छ। त्यसको शक्ति अचम्भको छ। त्यो अझै केही दिन यहाँ बस्यो भने खनाइका ज्यामीहरुले पनि बन्धन मात्र छोड्नेछन्।

सरदार – को त्यो ? रंजन होइन ? बाटोमा गीत गाउँदै हिंड्छ। कताबाट एउटा फुटेको सारंगी भेटाएछ। साहस त हेर। अलि लुकाउने कोशिश पनि गर्दैन।

मुखिया – त्यही त ! कुन्नि कसरी गारदको भित्ता भत्काएर निस्केछ। जादू

जान्दछ।

सरदार – जाऊ। यसपालि समात त्यसलाई। यो गाउँमा नन्दिनीसित कुनै पनि प्रकारले त्यसको भेट नहोस्। सम्झना राख।

मुखिया – हेर्दा-हेर्दै त्यसको दल ठूलो हुँदै जाँदैछ। कुन दिन हामीलाई समेत नाँच्नलगाउँछ!

[सानो सरदारको प्रवेश]

सरदार – कता हिंड्यौ?

सानो सरदार – रंजनलाई बाँध्न हिंडेको।

सरदार – तिमी किन? मझौले सरदार खै?

सानो सरदार – त्यसलाई देखेर उनलाई पनि मज्जा लागेछ। त्यसको जीउमा हातै लाउनचाँहदैनन्। भन्छन—त्यसको हाँसो देख्दा हामी सरदारहरु कति अद्‌भुत भएछौं भन्ने बुझिन्छ।

सरदार – सुन, त्यसलाई बाँध्नुपर्छ। राजाको घरमा पठाइदेऊ।

सानो सरदार – राजाले बोलाएको त्यो मान्दैमान्दैन।

सरदार – त्यसकी नन्दिनीलाई राजाले सेवादासी बनाएर राखेको छ भनिदेऊ।

सानो सरदार – तर राजाले—

सरदार – विचार गरिबस्ने केही आवश्यकता छैन। हिंड, म पनि जान्छु।

[सबैको प्रस्थान]

[अध्यापक र पुराणवागीशको प्रवेश]

पुराणवागीश – भित्र यो कस्तो प्रलय-काण्ड भइरहेको छ? भन त। बड़ो भयंकर आवाज हुँदैछ।

अध्यापक – राजा आफैमाथि रिसाइरहेको जस्तो लाग्दछ। त्यसैले आफैले बनाएका चीज-बीजहरु भत्काउनलागेका छन्।

पुराणवागीश – ठूलठूला खम्बाहरु भत्केर खस्नलागेका जस्ता छन्।

अध्यापक – हाम्रो त्यो पहाड़को फेदीमा त्योसंगै एउटा तलाउ थियो, त्यसैमा शंखिनी नदीको पानी जम्मा हुने गर्दथ्यो। एक दिन त्यसको देब्रेतिरको अग्लो डाँडा भत्क्यो र त्यसमा जम्मा भएको पानी पगलाजस्तो अट्टहास गर्दै हाँस्दै बाहिर निस्क्यो। केही दिनदेखि राजालाई देख्दा मलाई लाग्छ, उनका संचय-सरोवरका ढुंगामा कमजोरी आइसकेको छ। र त्यसको ताला भित्र-भित्रै खिया पर्नथालेको छ।

पुराणवागीश – वस्तुवागीश, तिमीले कुन ठाँउमा ल्यायौ र यहाँ के गर्नुपर्छ?

अध्यापक – जगत्‌मा जे-जति जान्नु छ, ती सबैलाई त्यो जान्नुद्वारा उ आत्मसात गर्नचाहन्छ। मेरो वस्तु-तत्त्व-विद्यालाई त उसले प्रायः सबै नै ढालि-

सकेको छ र अब– चाँहि घरि-घरि रिसाउँछ र भन्छ—तिम्रो विद्याले त प्वाल पार्ने छिनोले एउटा देवल भत्काएर त्यसको पछाड़ि अर्को देवल निकालिरहेछ। तर प्राण-पुरुषको भित्री महल कहाँ छ ? उसलाई केही दिनसम्म पुराण-चर्चामा भुलाइराख्नुपर्यो भन्ने सोचें—मेरो थैली त टक्टक्याएर रित्याइसकिएको छ, अब पुरावृत्तको पाकेटमारपना चलोस्। ऊ, देख्दैछौ, को आउँदैछ ?

पुराणवागीश – एकजना तरूणी, हलुका हरियो रंगको साड़ी लगाएर।

अध्यापक – पृथ्वीका प्राणीहरुको खुशीलाई आफ्नो सारा शरीरमा तानेर राखेकी छ यो हाम्री नन्दिनीले। यो क्षयपुरीमा सरदार छन्, मुखिया छन्, खन्ने ज्यामीहरु छन्, मजस्तो पण्डित छ, प्रहरीका अधिकारी छन्, पोड़े छन्, बधिक छन्, सबै मज्जाले मिलेका छन्, तर यो भने एकदमै बेमेल छे। चारैतिर हाटको हल्लाखल्ला छ, त्यो छ सुर बाँधिएको तम्बुरा। एक-एक दिन उसको जाने हावाले मेरो वस्तु-चर्चाको जाली फाटिन्छ। त्यसैको बीचबाट मेरो ध्यान जंगली चराजस्तो फुर्र निस्केर जान्छ।

पुराणवागीश – के भन्दैछौ ? तिम्रो पाकेको हड्डी पनि फुटिन्छ कि कसो हो ?

अध्यापक – जान्ने आकर्षणको आकांक्षाभन्दा पनि जब प्राणको आकर्षण बढ़ता हुन्छ, तब मात्र पाठशालाबाट भाग्ने प्रवृति बाहिर निस्कन्छ।

पुराणवागीश – लौ, अब भन, तिम्रो राजासित कहाँ भेट हुन्छ ?

अध्यापक – भेट हुने उपाय छैन। त्यो जालको आड़बाट बातचीत हुन्छ।

पुराणवागीश – कसो भन्यौ, त्यो जालको आड़बाट ?

अध्यापक – के त अनि ? घुम्टोको आड़मा रसालाप हुन्छ, त्यस्तो होइन, एउटा छानिएको कुरा-केलाइवरी शुद्ध गरिएको। उसको घरकी गाईले शायद दूध दिनजान्दिन, मक्खन मात्रै दिन्छे।

पुराणवागीश – बेकारका कुरालाई छाड़ेर असली कुरा निकाल्नसक्नु नै पण्डितको अभिप्राय हुन्छ।

अध्यापक – तर विधाताको होइन। उनले असली वस्तुको सृष्टि नै गरेका छन्, बेकारका वस्तुहरुका लालनका लागि। उनी सम्मान दिन्छन् फलका गुदीलाई तर प्रेम गर्छन् रसलाई।

पुराणवागीश – हिजआज म देख्दु, तिम्रो वस्तुतत्त्व हलुका हरियो रंगतिर दर्गुनलागेको छ। तर अध्यापक, तिमी आफ्ना यी राजालाई कसरी सहन गर्ने गर्छौ ?

अध्यापक – साँचो भनूँ ? म उसलाई माया गर्छु।

पुराणवागीश – के भन्दैछौं तिमी ?

अध्यापक – तिमीलाई थाहा छैन ? उ यति ठूलो छ, उसका दोषले पनि उसलाई

नष्ट गर्नसक्तैनन्।

[सरदारको प्रवेश]

सरदार – अरे वस्तुवागीश, त्यतिको छानेर तिमीले यिनै मानिसलाई ल्यायौ? यिनका विद्याको वर्णन सुनेरै राजा रिसाएका छन्।

अध्यापक – किन?

सरदार – राजा भन्छन्, पुराण नाउँ भएको कुनै वस्तु नै छैन, वर्त्तमान काल नै बढ्दै गइरहेको छ।

पुराणवागीश – पुराण छैन भने अरु केही पनि कसरी हुनसक्छध? पछाडि नै छैन भने अघाडि के रहनसक्तछ?

सरदार – राजा भन्छन्, महाकाल नवीनलाई अघिल्तिर प्रकाशित गर्दै हिंड़िरहेको छ। यो कुरा पण्डितले लुकाइदिन्छ र भन्छ, महाकाल पुरातनलाई पछिल्तिर बोकेर गइरहेको छ।

अध्यापक – नन्दिनीको निविड़ यौवनको छाया-विथिकामा नवीनको मायामृगीलाई राजाले चकित भावले देख्नसकेका छन्, तर पक्रनसकेका छैनन्, र रिसाउनथालेका छन् मेरा वस्तुतत्त्वमाथि!

[नन्दिनीको हतारिएर प्रवेश]

नन्दिनी – सरदार, सरदार! यो के? को हुन् तिनीहरु?

सरदार – सुन नन्दिनी, जब गहिरो रात पर्छ, तिम्रो कुन्द फूलको माला म लगाउँछु। अन्धकारमा मेरो रुपियाँमा बाह्र आना नै अस्पष्ट हुन्छ, त्यस बेला शायद फूलको माला मलाई सुहाउला।

नन्दिनी – उता हेर, कस्तो भयानक दृश्य! प्रेतपुरीको दैलो खोलियो कि? पालेहरुसित ती को गइरहेछन्? तिनीहरु राजाका महलका झ्याल-दैलाबाट निस्किरहेछन्।

सरदार – तिनीहरुलाई हामी राजाका जूठा भन्छौ।

नन्दिनी – मतलब?

सरदार – एक दिन बुझ्नेछौ, आज हुनदेऊ।

नन्दिनी – तर कस्ता अनुहार हुन् यी? तिनीहरु मानिस हुन्? तिनीहरुमा मासु-मज्जा, मन-प्राण केही छन्?

सरदार – शायद छैनन्।

नन्दिनी – कुनै दिन थिए?

सरदार – शायद थिए।

नन्दिनी – अब कता गए?

सरदार – वस्तुवागीश, बुझाउनसक्छौ भने बुझाऊ। म त हिंड़ें।

[प्रस्थान]

नन्दिनी – त्यो के हो ? ती छाया-मूर्तिहरुमा परिचित अनुहारहरु देख्छु। ती दुइ त निश्चय नै हाम्रा अनूप र उपमन्यु हुन्। अध्यापक, तिनीहरु हाम्रा छिमेकी गाउँका बासिन्दा हुन्। ती दुइ भाइका सिर जति लामा छन्, शरीर उतिकै पुख्ता छन्; मानिसहरु यिनीहरुलाई 'ताल-तमाल' भन्ने गर्छन्। अषाढ़ चतुर्दशीको दिन हाम्रो नदीमा नाउ-दौड़ खेल्न आएका थिए। यिनीहरुको यस्तो दशा देखेर मेरो मन छिया-छिया भएर आउँछ। त्यो त शकलू हो, तलवारको खेलमा सबभन्दा पहिले माला पाउने गर्थ्यो। अ-नू-प, शकलू—यता हेर, यता, म नन्दिनी, इशानी गाउँकी तिमीहरुकी नन्दिनी। टाउको उठाएर यसो हेरेन पनि। सँधैभरिको निंति टाउको निहुरिएको रहेछ। अरे, त्यो को हो ? कंकु ? हरे ! त्योजस्तो जवानलाई पनि उखूजस्तै निचरिदिएछ। बड़ो घटिया थियो, जुन घाटमा म पानी लिन जान्थें, त्यसकै छेउको ढालू किनारमा त्यो बसिरहन्थ्यो। तीर चलाउनका निंति शिरकाण्ड लिन आएको जस्तो भान पार्ने गर्थ्यो। उपद्रव गरेर मैले उसलाई धेरै दुःख दिएकी छु। अरे, औ कंकु ! मपट्टि अलिकति फर्केर हेर त ! हरे ! मेरो संकेतमा जसको रगत नाँच्नथाल्थ्यो, उसले मैले बोलाउँदा जवाफसम्म पनि दिएन। मेरो गाउँका सबै बत्तीहरु निभिसकेछन्, निभिसके। अध्यापक, फलाम खिइसक्यो, खालि कालो खिया बाँकि छ ? यस्तो किन भो ?

अध्यापक -- नन्दिनी, जता बाटो छ, त्यतै तिम्रो दृष्टि जान्छ। यसपालि ज्वालातिर पनि हेर, त्यसको जिभ्रो हल्लेको देख्नेछ्यौ।

नन्दिनी – तिम्रो कुरा मैले बुझिनँ।

अध्यापक – राजालाई त देखेकी छौ ? उसको मूर्ति देखेर, मैले सुनेको छु, तिमी मुग्ध भएकी छौ।

नन्दिनी – अवश्य भएकी छु। त्यसमा अद्‌भुत शक्तिको अनुहार छ।

अध्यापक -- त्यो अद्‌भुत जुन जम्मा भएको छ, यो किम्भूत त्यसैको खर्च हो। यी ससानाहरु सबै बलेर खरानी हुन्छन्, त्यो ठूलोचाहि बलिरहन्छ ज्वालाको रूपमा। यही हो ठूलो हुनुको तत्त्व !

नन्दिनी – यो त राक्षसको तत्त्व हो।

अध्यापक – तत्त्वमाथि रिसाउनु व्यर्थ छ। त्यो राम्रो पनि हुँदैन, नराम्रो पनि हुँदैन। जे हुन्छ, त्यो हुन्छ, त्यसको विरुद्धमा गयौ भने हुनुकै विरुद्ध जानेछ्यौ।

नन्दिनी – यही नै मानिसको हुनुको बाटो हो भने म हुनचाहँदिनँ—म ती छाया-मूर्तिहरुसित जानेछु-मलाई बाटो देखाइदेऊ।

अध्यापक – बाटो देखाउने जब दिन आउँछ, यिनीहरुले नै देखाइदिनेछन्, त्योभन्दा

पहिले बाटो नामक कुनै झंझट छैन। हेरन, पुराण-वागीश कति सुटुक्क हिंड़ेछ। सम्झँदो हो-भागेर बाँचिन्छ। अलि अघि बढ़ेपछि उसैले बुझ्नेछ, घेराको जाल यहाँबाट धेरै योजन टाड़ासम्म खुट्टीहरुमा गाढ़िएका छन्। नन्दिनी, तिमीलाई रीस उठ्दैन? तिम्रो कपोलमा रातो कणेलको गुच्छा आज प्रलय-सन्ध्याको मेघझैं देखिंदैछ।

नन्दिनी – [झ्यालमा हिर्काएर] सुन, सुन!

अध्यापक – कसलाई बोलाइरहिछौ तिमी?

नन्दिनी – जालको तुवाँलोले ढाकिएको तिम्रो राजालाई।

अध्यापक – भित्रको दैलो बन्द भइसकेको छ, सुन्नसक्तैन।

नन्दिनी – विशू पगला! पगला भाइ!

अध्यापक – उसलाई किन बोलाउँछ्यौ?

नन्दिनी – उ अहिलेसम्म फर्केको छैन, बड़ो डर लाग्दैछ।

अध्यापक – एक छिनअघि त तिमीसितै देखेको थिएँ।

नन्दिनी – रंजनलाई चिनाउन बोलाउँदैछ भनेर सरदारले भन्यो। म संगै जान-चाहन्थें, तर जान दिएन। यो कसको चिच्याएको आवाज सुनिंदैछ?

अध्यापक – त्यो पहलवानको जस्तो छ।

नन्दिनी – उ को हो?

अध्यापक – उ हो जगद्विख्यात गज्जू पहलवान, जसको भाइ, मूर्खतावश राजासित कुश्ती खेल्न आएको थियो, त्यसपछि त त्यसको लगौठीको एउटा टुक्रा धागो पनि देखा परेन। त्यही रीसले गज्जू पनि ताल ठोक्दै आयो। मैले उसलाई पहिल्यै भनिसकेको थिएँ—यो राज्यमा सुरुंग खन्ने काममा आउनचाहन्छौ भने आऊ, मर्दा-मर्दै पनि केही दिन जिउँदो बस्छौ। पुरुषत्व देखाउँछौ भने एक क्षण पनि सहन गरिनेछैन। यो स्थान बड़ो कठिनको छ।

नन्दिनी – रात-दिन यो मानिस निभाउने जालको खबरदारी गरेर के यी मानि-सहरुले राम्रा भएर बस्नपाएका छन्?

अध्यापक – राम्रोको यसमा प्रश्न छैन, बस्ने प्रश्न छ। थिनको यो बस्नु यति भयंकर रूपले बढ़ेको छ, लाखौं मानिसहरुमाथि दबाउ नपरे यिनीहरुको यो भार कसले थाम्ला?

नन्दिनी – बस्नैपर्छ? मानिस भएर बस्नका निंति मर्नु नै पर्छ भने त्यसमा के दोष छ?

अध्यापक – फेरि त्यही रीस? त्यही रातो कणेलको झंकार! बड़ो मधुर छ, र पनि जुन सत्य हो, सत्य नै हुन्छ। बस्नुलाई मर्नु छ—यसो भन्दा तिमी सुख पाउँछ्यौ भने भनिबस। बस्नुलाई मर्नुपर्छ भन्नेहरु नै बस्नसक्ने हुन्छन्। यसले मनुष्यत्वमा त्रुटि आउँछ भनेर तिमीहरु

भन्छौ, तर यही मनुष्यत्व हो भन्ने कुरा रीसले बिर्सिदिन्छौ। बाघलाई खाएर बाघ ठूलो हुँदैन। मानिस मात्र मानिसलाई खाएर फुलिन्छ।

[पहलवानको प्रवेश]

नन्दिनी – अहो, कसरी ढल्किँदै-ढल्किँदै आइरहेछ। पहलवान, यहीं सुतिबस। हेर त, कहाँ यसलाई चोट लागेको छ?

अध्यापक – बाहिरबाट चोटको निशान देख्नसकिन्न।

पहलवान – दयामय, प्रभो, म जीवनमा एक दिन शक्ति पाऊँ—एक दिनको लागि मात्र भए पनि!

अध्यापक – किन भाइ?

पहलवान – त्यो सरदारको घाँटी निमोठ्नको लागि मात्र।

अध्यापक – सरदारले तिमीलाई के गर्यो र?

पहलवान – सब त्यसैले त गरेको हो। म त लड्नचाहन्नथें। मेरै दोष हो भनेर आज त्यो भनिहिंड्छ।

अध्यापक – कसो, त्यसमा त्यसको के स्वार्थ छ?

पहलवान – समस्त पृथ्वीलाई शक्तिहीन बनाइदियो भने तिनीहरु निश्चिन्त हुन्छन्। एक दिन त्यसका दुवै आँखा निकालेर फ्याँक्नसकूँ—दयानिधान भगवानले यति गरिदिऊन्।

नन्दिनी – तिमीलाई कस्तो लाग्छ, पहलवान?

पहलवान – शरीरभित्रबाटै खालि भइसकेकोजस्तो लाग्छ। यिनीहरु कुन्नि कताका दानव हुन्, जादू जान्दछन्, ताकत मात्र होइन, साहस पनि सुखाइदिन्छन्। कुनै प्रकारले एकपल्ट—हे करुणामय हरि! आः, एकपल्ट—तिम्रो दया भयो भने के हुनसक्तैन र! सरदारको छातीमा एकपल्ट दाँत गाड्नसकूँ!

नन्दिनी – अध्यापक, उसलाई तिमी समात। हामी दुवै मिलेर घर लैजाऔं।

अध्यापक – ममा साहस छैन, नन्दिनी! यहाँको नियमानुसार यो अपराध हो।

नन्दिनी – मानिलाई मर्नदिनुमा अपराध हुँदैन?

अध्यापक – जुन अपराधको दण्ड दिने कोही हुँदैन, त्यो पाप हुनसक्छ, तर अपराध होइन। नन्दिनी, यी सबबाट तिमी एकपल्ट बाहिर निस्क। जराको मुट्ठी कसेर रूखले माटोमुनि हरण-शोषणको काम गर्छ। तर त्यहाँ फूल फुलाउनसक्तैन। फूल फुल्छ माथिको हाँगामा, आकाशतिर। ए रातो कणेल, हाम्रो माटोमुनिको खबर लिन तिमी नआऊ। माथिको हावामा तिम्रो पिंग हल्लिएको हेर्न हामी टक लगाएर बसेका छौं। ऊ, सरदार आउँदैछ। अब म हिंडें। तिमीसित बात मारेको उ

सहनसक्तैन।

नन्दिनी – ममाथि यतिको रीस किन?

अध्यापक – अन्दाजी भन्नसक्छु। तिमीले भित्र-भित्रै उसको मनको तार कसेकी छ्यौ, जति सुर मिल्नसक्तैन, बेसुर त्यति नै कड़ा भएर कराउँछ।

[प्रस्थान]

[सरदारको प्रवेश]

नन्दिनी – सरदार!

सरदार – नन्दिनी, तिम्रो त्यो कुन्दको माला देखेर गोसाईंज्यूका दुवै आँखा—लौ, उ आफै आउँदैछ। —प्रणाम! प्रभु, त्यो माला नन्दिनीले मलाई दिएकी थिई।

[गोसाईंको प्रवेश]

गोसाईं – अहो! शुभ्र प्राणहरुको दान! भगवानका शुभ्र कुन्द पुष्प! विषयी जनका हातमा परेर पनि त्यसको शुभ्रता म्लान भएन, यसैले त पुण्यको शक्ति र पापीको परित्राणको आशा देख्नपाउँछु।

नन्दिनी – गोसाईंज्यू, यो मानिसको निंति केही व्यवस्था गर्नुहोस। उसको जीवन अब कति बाँकी छ र?

गोसाईं – सबैतिरबाट विचार गरेर जति मात्रामा उसलाई बाँच्नु आवश्यक हुन्छ, हाम्रा सरदारले निश्चय नै उसलाई त्यति जीवित राख्नेछ। तर वत्से, यी सब आलोचना तिम्रा मुखबाट श्रुतिकटु लाग्दछ। हामीलाई मन पर्दैन।

नन्दिनी – यो राज्यमा जीवित राख्नलाई पनि मात्रा-विचार के छ?

गोसाईं – किन छैन? पार्थिव जीवन सीमाबद्ध छैन र? त्यसैले हिसाब बुझेर त्यसलाई भाग लगाउनुपर्छ। हाम्रा श्रेणीका मानिसहरुमाथि भगवान्ले दुस्सह उत्तरदायित्वका भार लादिदिएका छन्, त्यसलाई बोक्नाका लागि हाम्रो भागमा प्राणको सारांश केही धेर पाइनुपर्छ। यिनीहरु थोरै दिन बाँचे पनि काम चल्छ, किनभने यिनीहरुका भार हलुंग पार्नलाई हामी बाँच्छौं। यिनीहरुका लागि के यो बचाउ कम हो?

नन्दिनी – गोसाईंज्यू, भगवान्ले तिमीमाथि यिनीहरुको कुन उपकार गर्ने विषम-भार लादिदिएका छन्?

गोसाईं – जुन प्राण सीमाबद्ध छैन, त्यसमा भाग लाउन कसैसित कसैको झगड़ाको कुनै आवश्यकता नै छैन, हामी गोसाईंहरु त्यही प्राणको बाटो देखाउन आएका हौं। यसैले तिनीहरु सन्तुष्ट भए हामी तिनीहरुका हितू हौं।

नन्दिनी – त्यसो भए यो मानिस आफ्नो सीमाबद्ध प्राणलाई बोकेर यसरी नै

अधमरो भएर बसिरहोस् ?

गोसाईं – किन बसिरहन्छ र ? कसो सरदार, के भन्छौ ?

सरदार – ठीक भन्नुभो। किन बसिरहन दिन्छु ! आजदेखि आफ्नो जोड़ले हिंड्ने उसलाई आवश्यकता पर्दैन। हामी आफ्नै जोड़ले उसलाई हिंड़-डुल गराउँछौं। ए गज्जू !

पहलवान – के प्रभु !

गोसाईं – हरि, हरि ! यसै बीचमा उसको बोली पनि मिहिन भएछ ! आफ्ना नामकीर्तनको दलमा उसलाई तान्नसक्नेछु भन्ने लाग्दैछ।

सरदार – ह-क्ष गाउँको मुखियाको घरमा तिम्रो डेरा छ, त्यहीं जाऊ।

नन्दिनी – यो कस्तो कुरा ! कसरी हिंड्छ उ ?

सरदार – हेर, नन्दिनी, मानिसलाई हिंड़ाउनु नै हाम्रो व्यवसाय हो। हामीलाई थाहा छ, मानिस जहाँ पुगेर अनुहार बिगारेर बस्छ, त्यहाँ अलिकति जोड़ लगाइदिंदा उ अझ अलिक परसम्म जाने हुन्छ। जाऊ गज्जू !

पहलवान – जो हुकुम।

नन्दिनी – पहलवान, म पनि मुखियाको घरसम्म जान्छु, त्यहाँ तिम्रो हेरचाह गर्ने कोही पनि छैन।

पहलवान – होस, होस। सरदार रिसाउँछन्।

नन्दिनी – सरदारको रीससित मलाई डर लाग्दैन।

पहलवान – मलाई डर लाग्छ। दुहाइ छ, मेरो विपदा नबढ़ाऊ।

[प्रस्थान]

नन्दिनी – सरदार, एक छिन पर्ख। मेरो विशू पगलालाई कता लग्यौ ? भनिराखेर जाऊ।

सरदार – म लैजाने को हुँ र ? मेघलाई हावाले उड़ाएर लैजान्छ, यसलाई दोष हो भन्ने ठान्छ्यौ भने हावालाई सोध, उसलाई ठेल्ने को हो ?

नन्दिनी – कस्तो सत्यानाशी देश हो त ! तिमी पनि मानिस होइनौ र जसलाई तिमी हिंड़ाउँछौ, तिनीहरु पनि मानिस होइनन् ? तिमीहरु सबै हावा हौ र तिनीहरु मेघ हुन् ? गोसाईं तिमी अवश्य जान्दछौ, भन, मेरो विशू पगला कहाँ छ ?

गोसाईं – म अवश्य जान्दछु। जो जहाँ बस्छ, सब भलाइकै लागि हुन्।

नन्दिनी – कसको भलाइको लागि ?

गोसाईं – यो तिमी बुझ्दिनौ। ओहो, छोड़, छोड़, त्यो मेरो जपमाला हो। लौ, चुड़ियो। औ, सरदार, तिमीहरुले यो केटीलाई।

सरदार – कुन्नि कसरी यो यहाँका नियमहरुका बीचमा आइपुगी ! स्वयं हाम्रा राजा—

गोसाईं – अब हेर, यस पालि यसले मेरो रामनामा पनि च्यातिदिनेछ, आपद आइसक्यो ! म हिंड़ें ।

[प्रस्थान]

नन्दिनी – सरदार, तिमीले भन्नैपर्छ । मेरो विशू पगलालाई कहाँ लग्यौ ?

सरदार – विचारशालामा बोलाइएको थियो—योभन्दा बढ़ता मलाई केही भन्नु छैन । मलाई छोड़, धेरै काम गर्नु छ ।

नन्दिनी – म स्त्री हुँ, त्यस कारण तिमी मसित डराउँदैनौ ? विद्युत-शिखाका हातमा इन्द्रले आफ्ना वज्र पठाउँछन् । म त्यही वज्र लिएर आएकी हुँ । तिम्रो सरदारपनाको स्वर्ण-शिखर भत्कन्छ ।

सरदार – त्यसो हो भने साँचो कुरा तिमीलाई भनिदिन्छु । विशूको लागि आपद तिमीले नै बोलाइदियौ ।

नन्दिनी – मैले ?

सरदार – हो, तिमीले नै । यतिका दिनसम्म कीराजस्तो माटोमुनि प्वाल पारेर त्यो हिंड्दै थियो, त्यसलाई मर्नको निंति पखेटा चाल्नु तिमीले नै सिखायौ, तिमीले । ए इन्द्रदेवको आगो ! धेरैलाई तिमीले यसमा घचेट्नेछ्यौ, अनि अन्त्यमा तिमी र हामीमा सम्झौता हुनेछ । धेर दिन लाग्नेछैन ।

नन्दिनी – त्यही होस, तर एउटा कुरा भनिराख, मसित रंजनलाई भेट्न—दिन्छौ कि दिन्नौ ?

सरदार – दिंदैनौं ।

नन्दिनी – दिंदैनौ ? म पनि हेर्छु, कति ताकत छ तिमीमा ! उसित मेरो भेट हुन्छ नै । अवश्य हुन्छ, त्यो पनि आज नै । तिमीलाई यति भनिदिन्छु ।

[सरदारको प्रस्थान]

नन्दिनी – (झ्याल ढक्ढकाएर) राजा, औ राजा, सुन । तिम्रो विचारशाला कता छ ? म तिम्रो यो जालको पर्दालाई च्यातिदिन्छु । त्यो को ? —त्यो को हो ? यो किशोर रहेछ ! भन त किशोर, विशू कहाँ छ, तिमीलाई थाहा छ ?

किशोर – छ, नन्दिनी, केही बेरमा उसित तिम्रो भेट हुन्छ । मन बलियो बनाइराख कुन्नि किन, पालेहरुका मालिकले मेरो अनुहार देखेर दया देखायो । मेरो अनुरोधमा यही बाटोबाट विशूलाई लैजान राजी भयो ।

नन्दिनी – पालेहरुका मालिक ? त्यसो भए के—

किशोर – हो, ऊ हेर, आउँदैछ ।

नन्दिनी – यो के हो ? तिम्रो हातमा हतकड़ी ? ! पगला भाइ, यसरी तिमीलाई यिनीहरु कहाँ लाँदैछन् ?

[विशूसित पालेहरुको प्रवेश]

विशू – डर छैन, डराउने काम्मै छैन। पगली, यतिका दिनपछि मेरो मुक्ति भएको छ।

नन्दिनी – म भन्दैछु, मैले केही बुझिनँ।

विशू – जब डरले पद-पदमा विपत्तिहरुलाई सम्भाल्दै हिंडिरहेको थिएँ, त्यति बेला म मुक्त थिएँ। त्यो मुक्तिभन्दा ठूलो बन्धन अरु छैन।

नन्दिनी – तिमीले के दोष गर्यौ र यिनीहरु तिमीलाई बाँधेर लगिरहेछन्?

विशू – यत्तिका दिनपछि मैले साँचो कुरा भनिदिएको थिएँ।

नन्दिनी – यसमा दोष के भयो?

विशू – केही भएन।

नन्दिनी – अनि किन त यसरी बाँध्यो?

विशू – यसमा हानि के छ? सत्य, मैले मुक्ति पाएँ—यो बन्धन यसै कुराको सत्य-साक्षी भइरहेछ।

नन्दिनी – पशुलाई जस्तो बाँधेर तिमीलाई लगिरहेछन्, यिनीहरुलाई लाज पनि लाग्दैन? छी-छी! यिनीहरु पनि त मानिस नै हुन्।

विशू – यिनीहरुभित्र जुन एउटा प्रकाण्ड पशु बसिरहेछ—मानिसको अपमानमा यिनीहरुको सिर निहुरिंदैन, खालि भित्रको पशुको पुच्छर फुलिइरहन्छ, हल्लिरहन्छ।

नन्दिनी – अहो, पगला भाइ, यिनीहरुले तिमीलाई कुटे पनि कि के हो? तिम्रो शरीरमा यी केका दाग हुन्?

विशू – चाबुकले हिर्काए, जुन चाबुकले कुकुरहरुलाई हिर्काइन्छ। जुन डोरीले यो चाबुक बनाइएको छ, त्यही डोरीको धागोले यिनीहरुको गोसाईंको जपमाला पनि बनाइएको छ। जब यिनीहरुले ठाकुरको नाँउ जप्छन्, यो कुरालाई भुल्छन्, तर ठाकुरलाई थाहा भइरहन्छ।

नन्दिनी – मलाई पनि तिमीलाई जस्तै बाँधेर लैजाओस्। तिमीले पाएको कुटाइको केही अंश मैले पनि पाइनँ भने आज मलाई भोजन रुच्नेछैन।

किशोर – विशू, मैले कोशिश गरें भने तिम्रो सट्टामा यिनीहरुले मलाई लैजा-नसक्छन्। तिमीले अनुमति देऊ।

विशू – तिमी पगलालेजस्तो कुरा गर्दैछौ।

किशोर – दण्डले मलाई कष्ट दिनसक्तैन। मेरो उमेर कम्ति छ, म खुशीसित सहन्छु।

नन्दिनी – हुँदैन-हुँदैन, किशोर। तिमी यस्तो कुरा नगर।

किशोर – नन्दिनी, आज मैले काम बिगारेको छु, त्यो कुरा यिनीहरुले थाहा पाइसकेका छन्। तिनीहरुले मेरो जुन अपमान गर्छन्, यो दण्डले मलाई त्यसबाट बचाइदिन्छ।

विशू – होइन, किशोर, अब पर्खा परेर काम चल्दैन, एउटा जोखिमको काम गर्नु छ। रंजन यहाँ आइसकेको छ, जसरी होस् उसलाई बाहिर निकाल्नुपर्छ। सजिलो काम यो होइन।

किशोर – नन्दिनी, त्यसो भए म विदा हुन्छु। रंजनसित भेट भएपछि तिम्रो कुन कुरा उसलाई भनिदिऊँ?

नन्दिनी – केही भन्नुपर्दैन। उसलाई रातो कणेलको यो गुच्छा दिइहाल, यसैबाट मैले भन्नुपर्ने कुरा भनिन्छ।

[किशोरको प्रस्थान]

विशू – यसपालि रंजनसित तिम्रो भेट होस्।

नन्दिनी – अब म मिलनबाट आनन्द पाउँदिनँ। तिमीलाई खालि हात विदा दिएको थिएँ भन्ने कुरा म कहिल्यै बिर्सनसक्नेछैनँ। अनि त्यो बिचरा बालक किशोर छ, उसले पनि त मबाट के पायो र!

विशू – मनमा तिमीले जुन आगो लगाइदियौ, त्यसको प्रकाशमा उसका अन्तरका सबै धन प्रकट भएका छन्, अनि त अझ के चाहियो र? सम्झना छ, त्यो नीलकण्ठको प्वाँख रंजनको शिखामा लगाइदिनुपर्छ।

नन्दिनी – त्यो के हो मेरो छातीको आँचलमा?

विशू – पगली, अन्न काटिने त्यो गीत सुन्दैछ्यौ?

नन्दिनी – सुन्दैछु। र प्राण रुनथाल्छ।

विशू – मैदानको लीला समाप्त भयो, खेतको मालिक पाकेको अन्न बोकेर घर गयो, हिंड़ प्रहरी, अब धेर ढिलो गर्नु ठीक छैन—

[गीत-१५]

फसलको अन्तिम समय यो काटेर भारी बनाऊ,
जे काट्नुहुन्न छोड़ माटोसंग मिली माटो बन्नदेऊ।

[सबैको प्रस्थान]

[चिकित्सक र सरदारको प्रवेश]

चिकित्सक – राजा आफैसित आफै रिसाउँछन्। यो रोग बाहिरको होइन, मनको हो।

सरदार – यसको प्रतिकार के छ?

चिकित्सक – कुनै डरलाग्दो धक्का। त्यो अरु कुनै राज्यसित हुन पनि सक्छ, नत्र आफ्नै प्रजाहरुमा उत्पात।

सरदार – अर्थात् अरुको हानि गर्नसकेनन् भने आफ्नै हानि गर्नुपर्नेछ।

चिकित्सक – उनी ठूला मानिस हुन्, ठूला। नानीहरुजस्तो खेलिरहन्छन्। एउटा

खेलसित रीस उठेपछि अर्को खेल खेल्नपाएनन् भने आफ्नै खेल्ने सामान भत्काउनेछन्। तर सरदार तैयार बस, अब धेरै बेर छैन।

सरदार – लक्षण देखेर मैले धेरैअघिदेखि नै तैयारी गरिराखेको छु। तर अफशोस, दुःखको कुरा के भनूँ। हाम्रो स्वर्णपुरी त्यस समय जस्तो ऐश्वर्यले भरिएको थियो, त्यस्तो पछि कहिल्यै भएन, ठीक त्यस बेला—होस, जाऊ, विचार गरिहेर्छु !

[चिकित्सकको प्रस्थान]

[मुखियाको प्रवेश]

मुखिया – सरदार महाराज, तपाईंले बोलाउनुभो ? म गाउँको मुखिया हुँ।

सरदार – ३२१ तिमी नै हौ ?

मुखिया – कस्तो गजबको समझना छ हजुरको ! मजस्तो अपात्रलाई पनि भुल्नुहुन्न !

सरदार – देशबाट मेरी पत्नी आइरहिछ। तिम्रो गाउँको छेउमा डाक बदलिन्छ। चाँडै यहाँ पुरयाइदिनुपर्यो।

मुखिया – गाउँमा गोरुको अभाव भएको छ, गाड़ी तान्ने गोरुको पनि त्यही हाल छ। तर हेरूँ, खन्ने ज्यामीहरुलाई नै जोत्नुपर्ला !

सरदार – कहाँ जानुपर्छ, थाहा छ, होइन ? बगान-बाड़ीमा जहाँ सरदारहरुको भोज छ।

मुखिया – जान्छु। तर एउटा कुरा भनिराखूँ। अलि कान दिनु होला। त्यो ६७ ङ छ, जसलाई मानिसहरु विशू पगला भन्छन्, त्यसको पगलापनालाई सुधार्नुपर्ने बेला आइसकेको छ।

सरदार – किन ? तिमीहरुकहाँ आएर उत्पात गर्छ कि कसो ?

मुखिया – मुखले होइन, भाव-भंगीले।

सरदार – अब चिन्ता नगर। बुझ्यौ ?

मुखिया – त्यसो हो ? ठीक छ। अझै एउटा कुरा–त्यो ४७ फ छ नि ? ६६ ङ संग केही ज्यादै त्यो मेलजोल गर्छ।

सरदार – मैले त्यो पनि लक्ष्य गरेको छु।

मुखिया – मालिकको लक्ष्य त ठीकै हो, तर चारैतिर नजर त घुमाउनैपर्यो, एकदुइजना छुट्नु पनि सक्छ। यही हेर्नुहोस्—हाम्रो ६५ गाउँका नाताले मेरा फूफा-ससुरा छुन—आफ्रा करंगका हड्डीले सरदार-महाराजको घर बढ़ाल्नेको लागि खड़ाउ बनाइदिन तैयार छ, स्वामिभक्ति देखेर उसकै सहधर्मिणी पनि लाजले सिर निहुराउँछिन् र पनि आजसम्म—

सरदार – उसको नाउँ ठूलो बहीमा चढ़िसकेको छ।

मुखिया – भैगो त, यतिका दिनको सेवा सार्थक भयो। उसलाई होशियारीसित सुनाउनुपर्छ, उसलाई मृगीको रोग पनि छ, हठात—

सरदार – ठीक छ, त्यो हुँदै गर्छ। तिमी चाँड़ो गर।

मुखिया – अझै एकजना मानिसको कुरा भन्नु छ। —हुन त उ मेरो साक्खै सालो हो। उसकी आमाको मृत्यु भएपछि मेरी पत्नीले आफ्नै हातले पालन-पोषण गरी बढ़ाई, तै पनि जब मालिकको नून–

सरदार – उसको विषयमा भोलि कुरा हुन्छ। तिमी दगुरेर जाऊ।

मुखिया – मझौले सरदार बहादुर आउँदैछन्। उनलाई मेरो तर्फबाट बुझाइदिनोस्। ममाथि उनको नजर छैन। मलाई त कस्तो लाग्छ भने जब मालिकहरुका इलाकामा ६६ ङ आउ-जाउ गर्थ्यो, त्यसै बेला उसले मेरो नाउँ—

सरदार – होइन, होइन, कुनै दिन पनि उसले तिम्रो नाउँ लिएको मैले सुनिनँ।

मुखिया – त्यही त उसको चलाखी हो। जो नामी मानिस छ, उसको नाउँ लुकाएर राखेर नै उसलाई मारिन्छ। छल-बलले, इशाराले, चुग्ली गर्नु राम्रो होइन। हाम्रो ३३ लाई यही रोग छ। उसको अरु काम त छैन नै, समय-बेसमयमा मालिकहरुको मण्डलीमा आवतजावत गरिरहन्छ। कति बेला उसको नाउँमा पोल लगाइदिन्छ—डर लागिरहन्छ। फेरि त्यो बजियाको घरको खबर—

सरदार – आज अहिले समय धेर छैन, चाँड़ो जाऊ।

मुखिया – राम-राम सरदार। [फर्केर आई] एउटा कुरा! त्यो गाउँको ८८ खालि तीस रुपियाँमा काममा लागेको थियो, तर दुइ साल बित्दा-नबित्दै आज उसको आय फाल्तु पाउनेसमेत गरी धेर नभए पनि डेढ़-दुइ हजार महीनावारी भइसक्यो होला। हजुरहरुको मन सफा छ, देवताहरुकोजस्तो स्वच्छ छ, स्तुति सुनेरै भुलिहाल्नुहुन्छ। साष्टांग प्रणामको घटा देखेर नै—

सरदार – भयो, भयो। यी कुरा भोलि गर।

मुखिया – मेरो त हजुर, दया-धर्म हो, मैले उसको छाक खोस्नखोजेको होइन, तर उसलाई खजानाको काममा राख्नु उचित हो कि होइन, एकपल्ट विचार गरिहेर्नोस। हाम्रो विष्णुदत्तलाई उसको एक-एकवटा कुरा थाहा छ, उसलाई बोलाएर—

सरदार – आजै बोलाउँछु, तिमी जाऊ।

मुखिया – हजुर, मेरो माहिलो छोरो अब लायक भएको छ। प्रणाम गर्न आएको थियो, तीन दिनसम्म घुम्दा पनि दर्शन नपाएर फर्केर गयो। बड़ो दुःख मन गर्दैथियो, सरकार। हजुरका भोगका लागि मेरी बुहारीको हातको फर्सीको—

सरदार – हुन्छ। पर्सि आउनू भन। भेट हुन्छ।

[मुखियाको प्रस्थान]

[मझौले सरदारको प्रवेश]

मझौले सरदार – नाँच्नेहरु र बाजा बजाउनेहरुलाई बगैचामा पठाएर आइरहेछु।

सरदार – अनि रंजनको त्यो कति टाड़ासम्म—

मझौले सरदार – ती सब काम मबाट नहुने भए। सानो सरदारले आफ्नै खुशीले त्यसको भार लिएको छ। अबसम्ममा उसको—

सरदार – राजाले के—

मझौले सरदार – राजाले निश्चय नै बुझ्नसकेनन्। दशजनाले मिलेर उसलाई—तर यसरी राजालाई धोखा दिएको मलाई त उचित लागेन।

सरदार – राजाप्रतिको हाम्रो जुन कर्त्तव्य हो, त्यसको निंति राजालाई धोखा दिनु आवश्यक हुन्छ। त्यसको दायित्व मेरो हो। तर अब त्यो केटीलाई अविलम्ब—

मझौले सरदार – होइन, होइन, यी कुरा मसित नगर्नोस्। जुन मुखियालाई यो भार सुम्पिएको छ, उ उपयुक्त मानिस हो। जस्तै नराम्रो काम पनि उ गर्न अलिकति पनि हिच्किचाउँदैन।

सरदार – केनाराम गोसाईंलाई रंजनको कुरा थाहा छ?

मझौले सरदार – अन्दाजमा सबै थाहा छ, स्पष्टसंग जान्नचाँहदैन।

सरदार – किन?

मझौले सरदार – कतै 'थाहा छैन' भन्ने बाटो बन्द नहोस भनेर।

सरदार – बन्द भएर के हुन्छ र?

मझौले सरदार – बुझ्नुभएन? हामीहरुको एउटै किसिमको अनुहार छ—सरदारको अनुहार। तर उसको त एकापट्टि गोसाईंको अनुहार छ र अर्कोपछि सरदारको। रामनामा अलिकति अल्झ्यो कि उ पासो बनिदिन्छ। यस कारण सरदारी धर्मको पालन आफैबाट पनि लुकाएर गर्नुपर्छ, त्यसो गर्दा नाम-जपको बेला उति अपठ्यारो पर्दैन।

सरदार – नाम-जप छोड़िदिए पनि त के हुन्थ्यो र?

मझौले सरदार – तर यता उसको मन धर्मभीरु छ, रगत चाहे जस्तो-सुकै होस्। त्यसैले स्पष्ट भावले नाम-जप र अस्पष्ट भावले सरदारी गर्नाले उ स्वस्थ रहन्छ। उ छ, त्यसैले हाम्रो देवता आरामसित छ, उसको कलंक ढाकिएको छ, नत्र त उसको अनुहार राम्रो छैन।

सरदार – मझौले सरदार, म देख्दैछु, तिम्रो रगतसित पनि सरदारीको रगतले मेल खाएको छैन।

मझौले सरदार – रगत सुरलासाथ यो झंझट खतम छुन्दु, अझै पनि पति त आशा छ। तर आज पनि म तपाई को त्यो ३२९ लाई सहन सक्तिनँ। जसलाई टाड़ाबाट चिम्टाले समात्दा पनि घिन लागेर आउँछ, ३ सैलाई जब

हावामा सुदृढ़ भनेर अंगालो मार्नुपर्छ, त्यति बेला कुनै पनि तीर्थ को जलले हजार पल्ट नुहाए पनि आफू लाई पवित्र ठान्नु कठिन पर्छ।–ऊ हेर्नोस, नन्दिनी आइ रहिछ।

सरदार – तिमी जाऊ मझौले सरदार।

मझौले सरदार – किन र ? के डट छ?

सरदार – तिओ विश्वास छैन। मलाई याहां छ, तिम्रो आंखमा नन्दिनी को मात लागे को छ।

मझौले सरदार – तर तपाईलाई थाहा छैन, तपाईका आंखामा पनि कर्त्तव्य का साथ-साथै अलिकना रातो कणेलको रंग मिसिएवो छ, त्यसैले त्यों लालिमा यति भयंकर भएवो हो।

सरदार – होला। मनको कुरा मन आफैले पनि जान्दैन तिमी मसित आऊ।

[दुवैको प्रस्थान]

[नन्दिनोको प्रवेश]

नन्दिनी – हेर्दा-हेर्दै सिन्दुरे बादलले आजको गोधुली रातो भयो। हामी दुइको मिलनको के यही रंग हो? मेरो सिन्दुर नै सारा आकाशमा फैलि-एकोजस्तो छ। [झ्याललाई हिर्काएर] जबसम्म सुन्दैनौ, रात-दिन यहीं बसिरहन्छु।

[गोसाईंको प्रवेश]

गोसाईं – कसलाई ठेल्दैछौ?

नन्दिनी – तिम्रो त्यो अजिंगरलाई, जो आड़मा लुकेर मानिस निल्ने गर्दछ।

गोसाईं – हरि, हरि! भगवान्ले जब सानोलाई मार्नचाहन्छु, त्यसको सानो मुखमा ठूलो कुरा राखिदिन्छ। हेर, नन्दिनी, तिमी विश्वास गर, म तिम्रो मंगल-कामना गर्छु।

नन्दिनी – त्यसले मेरो मंगल हुने होइन।

गोसाईं – आऊ मेरो ठाकुर-घरमा, म तिमीलाई हरि-नाम सुनाउँछु।

नन्दिनी – नाउँ मात्र लिएर मलाई के हुन्छ?

गोसाईं – मनले शान्ति पाउँछ।

नन्दिनी – मैले शान्ति पाएँ भने मलाई धिक्कार छ। म यो दैलोमा पर्खिरहन्छु।

गोसाईं – देवतामाभन्दा तिमीलाई मानिसमा धेर विश्वास छ?

नन्दिनी – तिम्रो ध्वज-दण्डको त्यो देवता कहिल्यै नरम हुने होइन। तर जालको आड़मा बसिरहेको मानिस के सदा-सर्वदा जालमा नै बाँधिएर बसि-रहन्छ? जाऊ, जाऊ। मानिसको प्राणलाई निचोरेर उसलाई नाम-जपले भुलाउनु नै तिम्रो व्यवसाय हो।

[गोसाईंको प्रस्थान]

[फागूलाल र चन्द्राको प्रवेश]

फागूलाल – विशू तिमीसित आएको थियो। त्यो अहिले कहाँ छ? साँचो भन।

नन्दिनी – उसलाई पक्रेर लग्यो।

चन्द्रा – राक्षसी, तिमीले नै उसलाई पक्रायौ, तिमी उनीहरुकी चर हौ।

नन्दिनी – कुन मुखले तिमी यसो भन्दैछ्यौ?

चन्द्रा – नत्र तिम्रो यहाँ कामै के छ? खालि सबैको मन भुल्याउँदै घुम्ने गर्छ्यौ?

फागूलाल – यहाँ सबैले सबैलाई सन्देहको आँखाले हेर्छन्, तै पनि मैले तिमीलाई विश्वास गरेर आएको हुँ। मन-मनै तिमीलाई—होस यो कुरा। तर आज कस्तो-कस्तो लागिरहेको छ!

नन्दिनी – लाग्दो हो। मसित आएर नै उ विपदमा पर्यो। तिमीहरुसित हुँदा उ निरापद थियो, यो कुरा उ आफैले भनेको हो।

चन्द्रा – तिमीले उसलाई किन फकाएर ल्यायौ त, सत्यानाशी!

नन्दिनी – कसो गरूँ! मुक्ति चाहियो भनेर उसैले भन्यो।

चन्द्रा – राम्रो मुक्ति दियौ उसलाई!

नन्दिनी – म त उसका सबै कुरा नै बुझ्दिनँ, चन्द्रा। विपत्तिहरुका बीचमा डुब्नाले मुक्ति पाइन्छ भनेर उसले मलाई किन भन्यो? फागूलाल, जो मानिस निरापद हुनुको मारबाट मुक्ति चाहन्छ, उसलाई मैले बचाउनू कसरी?

चन्द्रा – यी सब म बुझ्दिनँ। उसलाई फर्काउनसकिनौ भने तिमी मर्छ्यौ–मर्छ्यौ! तिम्रो यो राम्रो अनुहार देखेर म भुलिने होइन।

नन्दिनी – म तिमीहरुसित जान्छु।

फागूलाल – के गर्नु?

नन्दिनी – भत्काउनु।

चन्द्रा – धेरै भत्काइसक्यौ, मायाविनी! अब अझै आवश्यकता छैन।

[गोकुलको प्रवेश]

गोकुल – सबभन्दा पहिले यो बोक्सीलाई जलाएर मार्नुपर्छ।

चन्द्रा – मार्छौ? त्यसले यसको दण्ड पूरा हुँदैन। जुन रूपको बलले यो सत्यानाश गरिहिंड्छे, त्यो रूपलाई बिगारिदेऊ। हँसियाले जसरी घाँस काटिन्छ, त्यसरी नै यसको रूपलाई काटेर फालिदेऊ।

गोकुल – त्यसो गर्नसक्छु। एकपल्ट यो मार्तोलको घुमाइ—

फागूलाल – खबरदार! उसको जीउमा हात लायौ भने—

नन्दिनी – फागूलाल, पर्ख। यो डरछेरुवा छ। मसिल डराउँछ, त्यसैले मलाई

मार्नचाहन्छ। उसको हिर्काइसित मलाई डर लाग्दैन। के गर्नसक्छौ, गर, कापुरुष !

गोकुल – फागूलाल ! अझ पनि तिमी चेतेनछौ। सरदारलाई तिमी दुश्मन सम्झनछौ। जो होस, जो दुश्मन हो, उसलाई म श्रद्धा गर्छु, तर तिम्रो यो मीठो मुख भएकी सुन्दरी. . . .

नन्दिनी – सरदारलाई श्रद्धा गर्छौ ! पैतलालाई पैतलाको हिलोले जस्तो श्रद्धा गर्छ। जो दास बनेको छ, त्यसले श्रद्धा गर्नसक्तैन।

फागूलाल – गोकुल, तिमीले आफ्नो पौरुष देखाउने बेला आएको छ, तर केटीमाथि होइन, हिंड़ मसित।

[फागूलाल, चन्द्रा र गोकुलको प्रस्थान]

[मानिसहरुको एउटा दलको प्रवेश]

नन्दिनी – कसो ? तिमीहरु कता ?

१ – ध्वजा-पूजाका नैवेद्य लगिरहेछौं।

नन्दिनी – रंजनलाई देख्यौ ?

२ – उसलाई पाँच दिनअघि एकपल्ट देखेको थिएँ, त्यसपछि त देखिनँ। उनीहरुलाई सोध, उनीहरुले भन्नसक्लान् कि !

नन्दिनी – तिनीहरु को हुन् ?

३ – उनीहरुले सरदारको भोजको लागि रक्सी लगिरहेका छन्।

[यो दलको प्रस्थान]

[दोस्रो दलको प्रवेश]

नन्दिनी – औ रातो टोपी लाउने ! तिमीले रंजनलाई देख्यौ ?

१ – त्यो दिन त राति शम्भु मुखियाको घरमा देखेको थिएँ।

नन्दिनी – अहिले कहाँ छ ?

२ – तिनीहरु सरदारनीहरुका भोजमा सामानहरु लिएर गइरहेछन्, तिनीहरुलाई सोध। तिनीहरुले यस्ता धेरै कुराहरु सुन्छन्, जुन हाम्रा कानसम्म पुग्दै-पुग्दैनन्।

[यो दलको प्रस्थान]

[तेस्रो दलको प्रवेश]

नन्दिनी – कसो, रंजनलाई यिनीहरुले कहाँ राखेका छन्, तिमीलाई थाहा छ ?

१ – चूप, चूप।

नन्दिनी – तिमीलाई अवश्यै थाहा छ, मलाई भन्नैपर्छ।

२ – हाम्रा कानमा जे पस्छन्, ती मुखबाट निस्कँदैनन् र यसैले हामी

टिकिरहेका छौं। ती हतियारहरुका भारी बोकेर आइरहेछन्, तिनी-हरुलाई सोध।

[यो दलको प्रस्थान]

[चौथो दलको प्रवेश]

नन्दिनी – एहै पर्ख-पर्ख। रंजन कहाँ छ? भनिराख।

१ – सुन, भन्छु। लग्न आइसकेको छ। ध्वजा-पूजाको निति राजालाई बाहिर आउनुपर्छ। उनैलाई सोध। हामीहरु शुरुका कुरा जान्दछौं, आखिरका कुरा जान्दैनौं।

[प्रस्थान]

नन्दिनी – [झ्यालमा हिर्काएर] समय भयो, दैलो खोल।

नेपथ्यबाट – तिमी फेरि असमयमा नै आयौ। अहिले जाऊ, जाऊ।

नन्दिनी – पर्खिने समय छैन, मेरो कुरा सुन्नैपर्छ।

नेपथ्यबाट – जे भन्नु छ, बाहिरबाटै भनेर जाऊ।

नन्दिनी – बाहिरबाट मेरो कुराको सुर तिम्रो कानसम्म पुग्नसक्तैन।

नेपथ्यबाट – आज ध्वजा-पूजाको दिन हो, मेरो मन विक्षिप्त नबनाऊ। पूजामा व्याघात हुन्छ। जाऊ, जाऊ, गइहाल।

नन्दिनी – मेरो डर हराइसकेको छ। यसरी तिमी खेद्नसक्तैनौ। मरें भने पनि ठीकै छ, तर दैलो खोल्न नलाएसम्म म यहाँबाट हल्लिने पनि छैनँ।

नेपथ्यबाट – तिमीलाई रंजन चाहिएको होला! सरदारलाई भनिदिएको छु, उसले उसलाई अहिले ल्याइदिन्छ। पूजाको लागि जानलाग्दा दैलोमा नउभिई बस। नत्र आपद आइपर्छ।

नन्दिनी – देवतालाई समयको अभाव हुँदैन। पूजाका लागि युग-युगान्तरसम्म पर्खिरहनसक्तछन्। मानिसको दुःखले मानिसको सहारा चाहन्छ। त्यसको समय भने थोरै हुन्छ।

नेपथ्यबाट – म थाकेको छु, साह्रै थाकेको छु। ध्वजा-पूजामा गएर थकाइ मारेर आउँछु। मलाई कमजोर नबनाऊ। यस बेला तिमीले बाधा दियौ भने रथका चक्कामुनिका धूला उड्नेछन् तिम्रा।

नन्दिनी – छातीमाथिबाट चक्का गए पनि हल्लिदिनँ।

नेपथ्यबाट – नन्दिनी, तिमीले मकहाँ प्रश्रय पाएकी छ्यौ, त्यस कारण तिमी डराउँदिनौ। तर आज डराउनैपर्नेछ।

नन्दिनी – तिमी जसरी सबलाई डर देखाउँदै बस्छौ, म चाहन्छु, मलाई पनि त्यसरी डराउने बनाऊ। तिम्रो प्रश्रयलाई म घृणा गर्छु।

नेपथ्यबाट – घृणा गर्छ्यौ? स्पर्धा चूर्ण-विचूर्ण हुनेछ। तिमीलाई आफ्नो परिचय

दिने समय आएको छ।

नन्दिनी – परिचय नै म पर्खिरहिछु। खोल दैलो। [दैलो खुलिन्छ] यो के हो? यो को लडिरहेछ? रंजनजस्तो देख्छु।

राजा – के भन्यौ? रंजन? रंजन! यो रंजन हुनैसक्तैन।

नन्दिनी – हो, राजा, यही मेरो रंजन हो।

राजा – उसले आफ्नो नाउँ किन भनेन? यति मूर्खतासाथ किन आयो?

नन्दिनी – उठ रंजन। म आएकी छु, तिम्री सखी। राजा, उ किन जिउँदो रहेन?

राजा – धोखा दिएको छ। तिमीलाई यी सबैले धोखा दिएका छन्। अनर्थ भयो। मेरो आफ्नै यन्त्रले मलाई मान्दैन। को हो हँ? बोलाऊ सरदारलाई। बाँधेर लैजाऊ उसलाई।

नन्दिनी – राजा, रंजनलाई ब्युँझाइदेऊ। सबै भन्छन्, तिमीले जादू जानेका छौ। उसलाई ब्युँझाइदेऊ।

राजा – मैले यमराजबाट जादू सिखेको हुँ। ब्युँझाउनसक्तिनँ, जागरण मेटा-उनसक्छु।

नन्दिनी – त्यसो भए मलाई पनि त्यही निद्रामा सुताइदेऊ। म सहनसक्तिनँ। यो कस्तो सत्यानाश गरिदियौ तिमीले?

राजा – मैले यौवनलाई मारेको छु—यतिका दिनसम्म आफ्ना सम्पूर्ण शक्ति लगाएर खालि यौवनलाई मार्दै आइरहेछु। मलाई आफ्नै यौवनको अभिशाप लागेको छ।

नन्दिनी – उसले मेरो नाउँ भनेन?

राजा – मैले सहन गर्नै नसक्नेगरी भनेको थियो। हठात् मेरा रगरगमा आगो लागेकोजस्तो भएको थियो।

नन्दिनी – [रंजनलाई] मेरो वीर! यो नीलकण्ठको प्वाँख तिम्रो शिखामा मैले लगाइदिएकी छु। आजदेखि तिम्रो विजय-यात्रा शुरु भएको छ। त्यो यात्राकी वाहन म हुँ। अहो! यो—त्यो रातो कणेलको मञ्जरी उसको हातमा छ। त्यसो भए किशोरले उसलाई देखेको थियो। उ कहाँ गयो? राजा, कहाँ गयो त्यो बालक?

राजा – को बालक?

नन्दिनी – जसले रंजनलाई यो मञ्जरी दिएको थियो!

राजा – अनौठो केटो थियो त्यो। केटीकोजस्तो साधारण अनुहार थियो, तर कुरा बड़ो उद्धत थियो। मूर्खता हेर, त्यो मलाई झम्टन आएको थियो!

नन्दिनी – त्यसपछि के भयो? के भयो त्यसलाई ? भन, के भयो? भन्नैपर्छ। किन चूप छौ?

राजा – त्यो फिंजजस्तो लुप्त भयो।

नन्दिनी – राजा, अब समय आइपुग्यो।

राजा – कस्तो समय?

नन्दिनी – मेरो सम्पूर्ण शक्तिसित तिम्रो युद्ध हुन्छ।

राजा – मसित युद्ध गर्ने? तिमीलाई त यसै क्षण मार्नसक्छु।

नन्दिनी – त्यसपछि प्रत्येक क्षण मेरो त्यो मर्नुले तिमीलाई मारिरहनेछ। मसित कुनै अस्त्र छैन। मेरो अस्त्र मृत्यु हो।

राजा – त्यसो भए नगीच आऊ। ममाथि विश्वास गर्ने साहस छ? हिंड़ मसित। आज मलाई आफ्नो साथी बनाऊ, नन्दिनी।

नन्दिनी – कहाँ जानुपर्छ?

राजा – मेरो विरुद्धमा लड़ाइँ गर्न, तर मेरै हातमा हात राखेर। बुझिनौ तिमीले? त्यो लड़ाइँ शुरु भइसकेको छ। यो मेरो ध्वजा, यसको दण्ड म भाँच्छु, यसको ध्वजा तिमी च्यात। मेरै हातमा तिम्रो हातले आएर मलाई मारोस्। मारिदेओस्। राम्ररी रगड़ोस्। यसैमा मुक्ति छ!

दलका मानिसहरू – महाराज, यो कस्तो अनर्थ हो, कस्तो उन्मत्तता हो? हाम्रो ध्वजा तपाईले भत्काइदिनुभो! यो हाम्रा देवताको ध्वजा भताभुंग पार्नुभो तपाईले। पृथ्वीमा र अर्कोतिर स्वर्गमा तपाईले प्वाल पारिदिनुभो! त्यही हाम्रा परम पवित्र ध्वज-दण्ड! पूजाको दिनमा यो कस्तो घोर पाप हो! हिंड़-हिंड़, सरदारहरुलाई खबर देऔं।

[प्रस्थान]

राजा – अझै पनि धेरै थोक भत्काउनु छ। तिमी पनि जान्छ्यौ मसित। नन्दिनी, प्रलय-पथमा मेरी दीप-शिखा!

नन्दिनी – म जान्छु।

[फागूलालको प्रवेश]

फागूलाल – विशूलाई उनीहरुले केही गरे पनि नछोड्ने भए। यिनी को? यिनै राजा हुन् कि? डाकिनी, अब यिनीसित सल्लाह हुँदैछ? विश्वास-घातिनी!

राजा – तिमीलाई के भयो? के गर्न निस्क्यौ?

फागूलाल – बन्दीशालाको दैलो भत्काउन। मर्छु तर फर्कनेछैनँ।

राजा – फर्कन्छौ किन? भत्काउने बाटोमा म पनि हिंड़ेको छु। त्यो हेर, त्यसको पहिलो चिह्न—मैले भत्काएको ध्वजा, मेरो अन्तिम कीर्ति।

फागूलाल – नन्दिनी, राम्ररी बुझ्नसकिएन। हामी सीधा मानिसहरु हौं, दया गर, धोखा नदेऊ। तिमी त हाम्रो घरकी छोरी हौ।

नन्दिनी – फागू भाइ, तिमीले मृत्युको नै प्रण गरेका छौ। धोखा खानलाई त केही पनि बाँकी राखेका छैनौ!

फागूलाल – नन्दिनी, तिमी पनि हामीसितै हिंड़ँ।

नन्दिनी – म त यसैको लागि बाँचेकी छु। फागूलाल, मैले रंजनलाई तिमीहरु सबैका बीचमा ल्याउखोजेकी थिएँ। ऊ हेर, आइपुगे मेरा वीर—मृत्युलाई तुच्छ बनाएर!

फागूलाल – सर्वनाश भो! उही रंजन हो? निःशब्द लड़िरहेछ!

नन्दिनी – निःशब्द होइन। मृत्युमा उसको अपराजित कण्ठ म सुन्दैछु। रंजन बौरिन्छ, उ कहिल्यै मर्नसक्तैन।

फागूलाल – हरे, नन्दिनी! सुन्दरी! यतिका लागि तिमी यतिका दिनदेखि बाटो हेरिरहेकी थियौ, हाम्रो यो अन्ध नर्कमा?

नन्दिनी – उसको आउने बाटो हेरिरहेकी थिएँ, उ त आयो, उसले फेरि आउने व्यवस्था गर्छ, उ फेरि पनि आउँछ। चन्द्रा कहाँ छे? फागूलाल?

फागूलाल – उ गोकुललाई लिएर सरदारकहाँ रोइ-कराइ गर्न गएकी छ। सरदारयाथि उसको अगाध विश्वास छ। तर महाराज, तपाईले भूल त बुझ्नुभएन? हामीहरु तपाईंकै बन्दीशाला भत्काउन निस्केका हौं।

राजा – हो, मेरै बन्दीशाला। तिमी-हामी दुवै मिलेर काम गर्नेछौं। यो काम तिमीले एकलै गर्नसक्नेहोरनौ।

फागूलाल – सरदारहरुले थाहा पाउनासाथ रोक्न पुग्नेछन्।

राजा – तिनीहरुसित मेरो लड़ाइँ छ।

फागूलाल – सेनाकाहरु तपाईंका कुरा मान्नेछैनन्।

राजा – एकलै लड्छु। साथमा तिमीहरु छौ नै।

फागूलाल – जित्नसक्नु होला?

राजा – मर्न त सक्छु नि! यतिका दिनपछि मर्नुको तात्पर्य बुझ्नसकेको छु। —म बाँचेको छु।

फागूलाल – राजा, गर्जन सुन्नुहुँदैछ?

राजा – देख्दैछु, सरदार सेना लिएर आइरहेछ। यति चाँड़ो यो कसरी सम्भव भयो? पहिलेदेखि नै तैयारी थियो, मलाई मात्र थाहा नभएको रहेछ। मलाई धोखा दिइएको हो! मेरै शक्तिले मलाई बाँधेको रहेछ।

फागूलाल – मेरो दलबल त अझै आइपुगेन।

राजा – सरदारले अवश्य रोकिराखेको होला। तिनीहरु अब आउनसक्ने होइनन्।

नन्दिनी – विशू पगलालाई मकहाँ पुर्याइदेला भन्ने मनमा लागेको थियो। त्यो

अब सम्भव नहोला ?

राजा – कुनै उपाय छैन। बाटो-घाटो रोक्नमा सरदारजस्तो उस्ताद मैले अरु कसैलाई देखको छैनँ।

फागूलाल – त्यसो भए हिंड़, नन्दिनी, तिमीलाई सुरक्षित स्थानमा पुर्याइराख्छु, त्यसपछि जे हुनु छ, हुँदै गर्छ। सरदारले तिमीलाई देख्यो भने आपद आइपर्छ।

नन्दिनी – एकलै मलाई नै सुरक्षितताको निर्वासनमा पठाउने ? फागूलाल, तिमी-भन्दा त बरु सरदार राम्रो, उसैले मेरो जययात्राको बाटो खोलिदियो। सरदार हेर ! उसले बर्छाको टुप्पोमा मेरो कुन्द फूलको माला झुण्ड्याइराखेको छ। त्यो मालालाई म आफ्नो छातीको रगतले रातो कणेलको रंगको बनाइराखेर जान्छु। सरदारले मलाई देखिसकेको छ। —जय, रंजनको जय !

[द्रूत प्रस्थान]

राजा – नन्दिनी !

[प्रस्थान]

[अध्यापकको प्रवेश]

फागूलाल – दगुरेर कता जाँदैछौ, अध्यापक ?

अध्यापक – राजाले यतिका दिनपछि चरम प्राणको सन्धान पाएर बाहिर निस्केका छन् भन्ने सुनें। म पनि पुस्तक-पत्र फालेर साथ लाग्न आएँ।

फागूलाल – राजा त मर्न गए, उनले नन्दिनीको आवाज सुनेका छन् !

अध्यापक – उनको जाल फाटेको छ। नन्दिनी कहाँ छे ?

फागूलाल – उ सबैभन्दा अघि छे। अब त उसलाई भेटाउनु गाह्रो पर्छ।

अध्यापक – अहिले भेटाउनसकिन्छ। अब म यसरी जानदिनसक्तिनँ। उसलाई म समात्छु।

[प्रस्थान]

[विशूको प्रवेश]

विशू – फागूलाल, नन्दिनी कहाँ छे ?

फागूलाल – तिमी कसरी आयौ ?

विशू – हाम्रा कारीगरहरुले बन्दीशाला भत्काइदिए। तिनीहरु उता लड्न गइरहेछन्। म नन्दिनीलाई खोज्न आएको ! उ कहाँ छे ?

फागूलाल – सबैभन्दा अघि गएकी छ।

विशू – कहाँ ?

फागूलाल – अन्तिम मुक्तिमा।

विशू – त्यहाँ त रंजन छ!

फागूलाल – धूलोमा देख्दैछौ उसका रक्तको रेखा ?

विशू – बुझें। त्यही नै यी दुइका परम मिलनको रक्त-राखी हो! यसपछि एकलो महायात्राको मेरो समय आएको छ। खूबै सम्भव छ, मेरी पगली गीत सुन्नचाहन्छे। आऊ, भाइ, अब लड़ाइँमा जाऔं।

फागूलाल – नन्दिनीको जय!

विशू – नन्दिनीको जय!

फागूलाल – अनि उ हेर, धूलोमा लड़िरहेको छ उसको रातो कणेलको कंकण! दाहिने हातबाट कुन्नि कसरी खसेछ। आज खालि हात नै उ गई।

विशू – मैले भनेको थिएँ, म उसको हातबाट केही पनि लिन्नँ। तर लिनुपर्यो यो उसको आखिरी दान!

[प्रस्थान]

[टाड़ामा गीत सुनिन्छ]

[गीत-१६]

पौष तिमीलाई डाकिरहेछ– आऊ है आऊ,<br>
आऊ, आऊ, आऊ!<br>
पाकेको अन्नको डालो धूलोले भरिएको आँचल,<br>
आऊ, आऊ, आऊ!

## परिशिष्ट

### गीत — १

पौष तोदेर डाक दियेछे– आय रे चले
आर, आय, आय।
डालाए तार भरेछे आज पाका फसले
मरि, हाय, हाय, हाय !

### गीत — २

हावार नेशाय उठलो मेते
दिग्बधूरा धानेर खेत,
रोदेर सोना छड़िये पड़े, माटिर आँचले—
मरि, हाय, हाय, हाय !

### गीत — ३

माठेर बाँशि शुने शुने आकाश खुसि हलो,
घरेते आज के रबे गो,
खोलो दुवार खोलो !

### गीत — ४

आलोर खुशी उठलो जेगे
धानेर शीषे शिशिर लेगे,
धरार खुशी धरे ना गो, ओइ—जे उथले
मरि, हाय, हाय, हाय !

### गीत — ५

मोर स्वपन-तरीर के तुइ नेये,
लागलो पाले नेशार हावा, पागल परान चले गेये।
आमाय भुलिये दिये या,
तोर दुलिये दिये ना,

तोर सुदूर घाटे चल रे बेये !

गीत — ६

आमार भावना तो सब मिछे,
आसार सब पड़े थाक् पिछे।
तोमार घोम्टा खुले दाओ,
तोमार नयन तुले चाओ,
दाओ हासिते मोद पराण छेये।

गीत — ७

तोर प्राणेर रस तो शुकिये गेलो ओरे,
तबे मरण-रसे ने पेयाला भरे।
स-ये चितार आगुन गलिये ढाला,
सब ज्वलनेर भेटाय ज्वाला,
सब शून्यके से अबु हेसे देय ये रंगीन करे !

गीत — ८

तोर सूर्य छिलो गहन मेघेर माझे,
तोर मेरेछे अकाजेरइ काजे,
तबे आसुक ना सेइ तिमिर राति,
लुप्ति-नेशार चरम साथी,
तोर क्लान्त आँखि दिक् से
ढाकि दिक् भोलाबार घोरे।

गीत — ९

तोमाय गान सोनाबो ताइ तो आमाय जागिये राखो,
ओ गो घुम-भाङानिया !
बुके चमक दिये ताइ तो डाको,
ओ गो दुख-जागानिया !
एलो आँधार घिरे,
पाखी एलो नीड़े,
तरी एलो तीरे,
शुधु आमार हिया विराम पाय नाको,

ओ गो दुख-जागानिया !

गीत — १०

आमार काजेर माझे माझे
कान्नाधरार दोला तुमि थामते दिले ना ये !
आमाय परश क' रे,
प्राण सुधाय भ' रे,
तुमि जाओ ये सरे,
बुझि आमार व्यथार आड़ालेते दाँड़िये थाको,
ओ गो दुख-जागानिया !

गीत — ११

ओ चाँद, चोखेर जलेर लाग्लो जोयार दुखेर पारावारे,
हलो कानाय कानाय कानाकानि एइ पारे ओइ पारे।
आमार तरी छिलो चेनारकूले, बाँधन ताहार गेलो खुले,
तारे हावाय-हावाय निये गेलो कोन् अचेनार धारे !

गीत — १२

भालोबासि भालोबासि—
एइ सुरे काछे दूरे जले स्थले बाजाय बाँसी।
आकाशे कार बुकेर माझे
व्यथा बाजे,
दिगन्ते कार कालो आँखि
आँखिर जले जाय गो भासि !

गीत — १३

सेइ सुरे सागर-कूले
बाँधन खुले
अतुल रोदन उठे दुले।
सेइ सुरे बाजे मने,
अकारणे
भुले-जावा गानेर वाणी,
भोला दिनेर काँदन-हासि !

गीत — १४

युगे-युगे बुझि आमाय चेयेछिल से।
सेइ बुझि मोर पथेर धारे रयेछे बसे।
आज केन मोट पड़े मने कखन तारे चोखेर कोणे
देखेछिलेम अफुट प्रदोषे।
सेइ येन पथेर धारे, रयेछे बसे।
आज ओइ चाँदेर बरण हबे आलोर संगीते,
रातेर मुखेर आँधार-खानि खुलबे इंगिते।
शुक्ल राते सेइ आलोके देखा हबे, एक पलके,
सब आवरण याबे ये खसे।
सेइ येन मोर पथेर धारे रमेछे बसे।

गीत — १५

शेष फलनेर फसल एबार केटे लओ बाँधी आँटि,
बाकि या नय गो नेबार माटिते होक ता माटि।

गीत — १६

पौष तोदेर डाक दियेछे—आय रे चले,
आय, आय, आय।
धूलार आँचल भरेछे आज पाका फसले,
मारि, हाय, हाय, हाय!

* * *